# 'चाणक्य' को संक्षिप्त परिचय

चाणक्यको जन्म ईसाभन्दा लगभग ४०० वर्ष पहिले भारतको तक्षशिला (प्राचीन गान्धार नगर वर्तमान पाकिस्तानमा रहेको रावलपिण्डी नजीक उत्खनन गर्दा ऐतिहासिक सम्पदा प्राप्त भएको र प्राचीन समयमा शिक्षाको विश्वप्रसिद्ध केन्द्रका रूपमा रहेको महत्त्वपूर्ण स्थल, कुन्तीपुत्र अर्जुनका पनाति जनमेजयले सर्पयज्ञ गरेको प्रसिद्ध ठाउँ) मा एक गरीब ब्राह्मण परिवारमा भएको थियो । उनको आमाको नाम के थियो ? हालसम्म पनि थाहा पाउन सकिएको छैन तर बुबाको नाम चणक भएकोले उनलाई चाणक्य भनिएको हो भन्ने जनश्रुति छ । जे होस् तक्षशिला त्यस समय सबै प्रकारका विद्याहरूको केन्द्र थियो । चाणक्यले जब तक्षशिलामा रहेर विद्याध्ययन पूरा गरे तब तिनी उच्च शिक्षा हासिल गर्न 'पाटली पुत्र' भन्ने ठाउँमा आए । त्यस समय त्यहाँ मगध राज्यका राजा घननन्द (नन्द) ले राज्य संचालन गरी बसेका थिए तर त्यो राजा निकै लोभी र अत्याचारी थियो । चाणक्यले उसको व्यवहार र स्वभावमा केही परिवर्तन ल्याउन चाहन्थे तर उसको स्वभावमा केही नगण्यरूपमा मात्र परिवर्तन आए पनि पूर्णरूपमा बदलिएको भने थिएन । चाणक्य विद्वान् र अद्वितीय प्रतिभाका धनी थिए । तर उनी रूपमा भने राम्रा थिएनन् । वर्ण बिलकुल कालो थियो ।

एकदिन घननन्द नामका त्यो राजाले चाणक्यलाई आफ्नू दरबारमा बोलाए । कुनै कामको सिलसिलामा । उसले चाणक्यलाई विचारै नगरी प्याच्च भनिदिएछ–"तिमीमा जत्ति प्रतिभा छ त्यति नै तिम्रो रूप पनि यदि राम्रो हुन्थ्यो भने कुरा अर्कै हुन्थ्यो, तर के गर्नु ? मलाई यस्तो नराम्रो मानिसको सङ्गत गर्नुपरेको छ ।"

राजाको यस्तो नराम्रो वचनप्रति चाणक्यलाई अत्यन्त रीस उठ्यो । यद्यपि उनी हत्तपत्त रिसाउने खालका मानिस त होइनन्, तर भारीसभाका बीचमा अलि नराम्रो पाराले (अपमानजन्य किसिमबाट उपहास गरेको हुनाले) तत्कालै चाणक्यले दरबारमैं आफ्नो टुप्पीको शिखा (गाँठो) फुकाउँदै भने– "राजन् ! तिमीले आज भारी सभाका बीचमा जो मेरो अपमान गर्‍यौ, त्यसको बदला मैले अवश्य लिएरै छाड्नेछु !, मैले मगध राज्यको सिंहासनमा कुनै योग्य व्यक्तिलाई राख्नेछु र जबसम्म मैले यस्तो गर्न सक्ने छैन, तबसम्म

मैले आफ्नो शिखा (टुपी) मा गाँठो पार्ने छैन ।"

त्यसपछि चाणक्य राजा घननन्दको दरबार छोडेर बाहिर गए । यिनी पाटलीपुत्रबाट जाँदै गर्दा उनको भेट अचानक चन्द्रगुप्तसँग भयो । चन्द्रगुप्तसँगको केही समयको सह-बास (बस-उठ) ले चाणक्यलाई थाहा भयो कि यिनी निकै होनहार (योग्य) र साहसी व्यक्ति रहेछन् । उनले यिनैलाई साथै लिएर तक्षशिला गए । यहाँ उनलाई चाणक्यले शस्त्र (आफ्नो हातले समातेर प्रहार गर्नु पर्ने तरवार आदि हतियार) अस्त्र (हातबाट पर छाडी हान्नु पर्ने वाण, चक्र आदि हतियार ) र शास्त्रसम्बन्धी धेरै महत्त्वपूर्ण शिक्षाहरू दिए । चाणक्यले आफ्नो बुद्धि-कौशलद्वारा राजा नन्द (घननन्द) लाई कसरी पराजित गरेर आफ्नो प्रतिज्ञा पूरा गरे भन्ने कुराको पूर्ण-इतिवृत्त (जानकारी) विशाखादत्तद्वारा रचित मुद्राराक्षस (नाटक) मा विस्तारपूर्वक बताइएको छ ।

चाणक्यले चन्द्रगुप्तलाई मगध राज्यको सिंहासनमा बसालेर उनको साम्राज्यलाई विस्तार गर्नमा महत्त्वपूर्ण योगदान गरेका थिए । चाणक्य त्यागी स्वभावका थिए । उनले दरबारमा बस्न कहिल्यै स्वीकार गरेनन् । चन्द्रगुप्तजस्ता प्रतापी सम्राट्को प्रधानमन्त्री भएर पनि उनी सधैं कुटी (आश्रम) मैं बस्ने गर्दथे । सादा भोजन गर्ने र सादा कपडा लगाउने गर्दथे । उनको वास्तवमैं सादा जीवन उच्च विचार थियो ।

चाणक्यका सम्बन्धमा एउटा यस्तो प्रसिद्ध भनाइ छ कि "एकजना विदेशी यात्री समय मिलाएर प्रधानमन्त्री चाणक्यलाई भेट्न गए छन् । साँझको समय थियो । चाणक्य आफ्नो कुटीमा टुकी बालेर केही लेख्दै थिए । यात्री आएको थाहा पाएर झटपट उनको स्वागत गरेर आसनमा बसाले । त्यसपछि कागज, कलम, मसी एकातिर पन्छाएर नयाँ टुकी बालेर अघि बलिरहेको टुकी निभाए । 'एउटा टुकी निभाएर त्यस्तै अर्को टुकी बाल्नुको मतलब के हो ?' भनेर यात्रुले सोधेछन् । चाणक्यले भनेछन्- अघि म राज्यको काम गर्दै थिएँ, त्यो टुकीमा राज्यको पैसाबाट किनेको तेल छ । अब अहिले म तपाइँसँग व्यक्तिगत कुराकानी गर्दैछु र यो टुकीमा मैले राज्यबाट पाउने तलबको पैसाले किनेको तेल हालेको छु । फरक यत्ति हो, नत्र टुकीमा केही फरक छैन र उज्यालो पनि उत्तिकै हो ।' चाणक्यले त्यसपछि यात्रीलाई

आगमनको उद्देश्य सोद्धा यात्रीले भनेछन् -'तपाईँको भनाइ र यत्तिकै कुराकानीबाट मौर्यसाम्राज्य कसरी चलेको रहेछ भने कुरा मैले बुझें म तृप्त भएँ, अब मलाई अरू कुरा बुझ्नको केही आवश्यक रहेन ।" यति भन्दै यात्री बिदा भएछन् ।

उनले आफ्नो बुद्धिको चमत्कारद्वारा यूनानी शासकहरूलाई देशबाट बाहिर निकालिदिनुका साथै स-साना राज्यहरूलाई मिलाएर (एकीकरण गरेर) एक विशाल भारतीय साम्राज्यको जग बसालिदिए । चाणक्य राजनीतिका गम्भीरभन्दा गम्भीर रहस्यहरूलाई पनि सजिलै जान्दथे । यसैकारण उनलाई कूटनीतिज्ञका सम्राट् पनि भन्ने गरिन्छ भने शत्रुदमनका लागि कुट नीति अवलम्वन गर्ने भएकोले उनलाई कौटिल्य भन्ने गरिएको हो । कुटलगोत्रीय हुनाका कारणले यिनलाई कौटिल्य भन्ने गरिएको हो भन्ने प्रमाण पनि रहेको पाइन्छ ।

तर चाणक्यको मुख्य (खास) नाम विष्णु गुप्त हो । चाणक्यको प्रसिद्धिको अर्को कारण के पनि हो भने, उनीद्वारा लेखिएको "अर्थशास्त्र" जो ई.पू. ३२१ देखि ४०० का बीचमा लेखिएको विश्वास गरिंदै आइएको छ । तत्कालीन समयमा भारतको आर्थिक तथा सामाजिक अवस्थाको जानकारी दिन र सही बाटो अवलम्बन गर्न महत्त्वपूर्ण योगदान दिएको थियो । अर्थशास्त्रमा चाणक्यले शासन-सम्बन्धी आफ्नो जुन सिद्धान्त व्यक्त गरेका थिए, त्यो आज पनि अद्वितीय मान्ने गरिन्छ । कौटिल्यका अनुसार अर्थशास्त्रको परिभाषा यस्तो छ भन्दै आमोदवर्धन कौण्डिन्यायन लेख्नुहुन्छ-"अर्थ भनेको मनुष्यको जीविका अर्थात् जीवनको साधन हो, मनुष्यहरूको निवास भएको भूमि ' अर्थ' हो । यस्तो भूमि प्राप्त गर्ने र प्राप्त भूमिको रक्षा गर्ने उपायहरूको उपदेश गर्ने शास्त्र 'अर्थशास्त्र' हो । अतः उनको अर्थशास्त्रभित्र धेरैथरी व्यावहारिक विद्या अन्तर्भूत देखिन्छन् । १५ अधिकरण, १५० अध्याय र १८० प्रकरणमा विभाजित कौटिल्य अर्थशास्त्रमा राजाको कर्तव्य, राज्यका प्रशासकहरूको कर्तव्य, मन्त्री र अन्य कर्मचारीको वेतन (तलब), करसङ्कलनको प्रक्रिया, उद्योगहरूको सञ्चालन, नापतौलको व्यवस्था, मुद्दामामिलाहरूको निर्णयप्रक्रिया, विवाहको नियम, अंशबन्डा, दण्डव्यवस्था, देशको प्रशासनको व्यवस्था, सैन्य व्यवस्था, युद्धनीति, कूटनीति इत्यादि

अनेक महत्त्वपूर्ण व्यावहारिक विषयहरूको विशिष्ट प्रकारले प्रतिपादन गरिएको छ । आर शास शास्त्रीले खोजी गरेर यस ग्रन्थलाई सर्वप्रथम सन् १९०९ मा लोकमा प्रचारित गरेका थिए । यस ग्रन्थका विभिन्न तथा वेदवेदाङ्गादि शास्त्रमा, शास्त्रविद्यामा, नीतिशास्त्रमा र ती विद्याको व्यावहारिक प्रयोगमा समेत अद्वितीय क्षमता राख्ने उनी अनेक विषयका ज्ञाता थिए । उनको नीतिहरू समाजका हरेक वर्गका लागि उपयोगी एवं शिक्षाप्रद रहेका छन् । राजा (राष्ट्राध्यक्ष), प्रजा (जनता), पुत्र, पत्नी, स्त्री, परिवार, सेवक, विद्वान्, मित्र, धनवान् (धनी) आदि सबै वर्गहरूका लागि उनका नीति–श्लोकहरूबाट लाभ मिल्दै आएको छ । उनका नीतिहरूको अनुशरण गरेर धेरै मानिसहरू अनुशासित–मर्यादित, विवेकी, चरित्रवान् र ज्ञानी बनेर आफूलाई नैतिकवान्को अब्बल दर्जामा स्थापित गराउन सफल भएका छन् । उनका नीतिगत श्लोक (विचार) हरू आजको परिप्रेक्ष्यमा समेत निकै सान्दर्भिक रहेका छन् ।

चाणक्यले आफ्नो नीतिगत श्लोकहरूका माध्यमबाट समस्त मानव जातिलाई चारित्रिक शिक्षा प्रदान गर्दै जीवनलाई समुन्नत बनाउन 'संजीवनी' को काम गरेका छन् ।

यसोभन्दा अत्युक्ति नहोला कि आज विश्वसामु जे जस्ता किसिमका समस्याहरू देखा परेका छन् ती सबै समस्याहरूको मूल कारण भनेकै 'नीति' को पालन नगर्नु, नहुनु हो । नैतिक पतनको सङ्घारमा पुग्न आँटेका हामी मानवहरूका लागि 'चाणक्य–नीति' का यी श्लोकहरू अवश्य नै पथ–प्रदर्शक हुन सक्नेछन् ।

अन्त्यमा, भावी पिंढीहरू र हाम्रा राजनैतिक व्यक्तित्त्वहरूलाई समेत यस पुस्तकबाट नैतिक, अनुशासित, चरित्रवान्, विवेकवान् र गुणवान् बन्न प्रेरणा मिल्ने नै छ भन्ने विश्वासका साथ यो छोटो परिचयात्मक लेख यहीं बिट मार्ने अनुमति चाहन्छु । अस्तु !



# विषय-अनुक्रमणिका

## तृतीय अध्याय

## चतुर्थ अध्याय

## षष्ठ अध्याय



## सप्तम अध्याय

## अष्टम अध्याय

## नवम अध्याय

## दशम अध्याय

## एकादश अध्याय



## द्वादश अध्याय

## त्रयोदश अध्याय

## चतुर्दश अध्याय

## पञ्चदश अध्याय

## षोडश अध्याय



## सप्तदश अध्याय

## अथ परिशिष्ट भाग



**समापन**

# हार्दिक अनुरोध

प्रिय पाठकवृन्द ! तथा लेखक, प्रकाशक महाशयज्यू !

विगत केही वर्षदेखि यता हामीले नेपाली भाषा साहित्यका विविध पुस्तकहरु संकलन र संरक्षण गर्नमा रुचि लिइराख्दै आइरहेका छौं ।

अत: लेखक, सम्पादक तथा प्रकाशक महानुभावहरुमा सविनम्र अनुरोध गर्दछौं कि आफूबाट लेखिएका या प्रकाशन गरिएका पुस्तकहरू (१-१ प्रति) हामीकहाँ पठाइदिनुभई हाम्रो यस अभिलाषालाई पूरा गरिदिनुहून आग्रह गर्दछौं ।

साथै, कुनै सज्जन महानुभावका साथमा सुरक्षित हुन नसकेको र संरक्षणको पर्खाइमा रहेका नेपाली, हिन्दी वा संस्कृत भाषाका कुनै पुस्तकहरू छन् भने पनि प्रेषित गर्न वा सूचना दिनुहुनको लागि हार्दिक अनुरोध गर्दछौं ।

अनि हामीबाट लेखिएका र यस पुस्तकको अन्तिममा उल्लेख गरिएका सिर्जना पुस्तकमालाका पुस्तकहरू पुस्तकालयमा राख्ने मनसायले प्राप्त गर्न चाहनुहुन्छ भने हामीलाई सूचना गर्नुहोला, हामी त्यस्ता पुस्तकहरूलाई यथासम्भव पठाउने (उपलब्ध गराउने) प्रयास गर्नेछौं । हामीलाई पूर्ण विश्वास छ कि नेपाली भाषा साहित्यप्रेमी मूर्धन्य लेखक, सम्पादक एवम् प्रकाशक महानुभावहरूले आफ्ना प्रकाशित पुस्तकहरू हामीकहाँ प्रेषित गर्ने कृपा गर्नुहुनेछ ।

विनीत :

**ओमप्रकाश अधिकारी**

*सिर्जना पुस्तक सङ्ग्रहालय*

अग्यौली गा.वि.स. वडा नं.९

तीनघरे, शान्तिचोक (डण्डा)

(नवलपुर) नवलपरासी, लु. अ. (नेपाल)

संपर्क सूत्र :

९८४७०४१५५८

९८०६८७००९३

०७८ : ६९१४६८



॥ श्रीगणेशाय नमः ॥ श्रीसरस्वतीदेव्यै नमः ॥ श्रीगुरुभ्यो नमः ॥

# चाणक्य - नीति - दर्पण

(सरल नेपाली-भाषा-श्लोक र अर्थ सहित)

## मङ्गलाचरण

ॐ सच्चित् परमात्ममा शिवजिमा श्रीविष्णु लक्ष्मीजिमा
श्री वागीश्वरिमा र सद्गुरुजिमा गर्छू सदा वन्दना।
शिक्षा चाणक नीति दर्पण यहाँ भाषार्थले पद्यमा
लेख्छू त्रूटि हुनन् सुधारिदिनुहोस् भन्छू सुहृद् विज्ञमा॥
॥१॥

आफ्नो मौलिकसाथमा अरु पनी शास्त्रोक्त शिक्षा थपी
आदर्श कृतिकार चाणकजिमा गर्छु प्रणाम-स्मृति।
मौका छन् परिवर्तनीय इ कुरा यादै छ नै विज्ञमा
तस्मात् कोहि त गूढ छन् सुजनले गर्नूहओस् है क्षमा॥
॥२॥

अल्पज्ञमा बोध निमित्तमाहाँ
छन् मूलमा क्षेपक श्लोक याहाँ ।
छन् टिप्पणीमा अरु पद्य ज्यादि
मीठा र लालित्य सुभाषितादि ।।
।। ३ ।।
पुछी धुलो दर्पण हेर्नु जाती
देखिन्छ जानिन्छ भइन्छ ख्याति ।
चाणक्यका यी उपदेश रत्न
पढून् सबैले गरि खूब यत्न ।।
।। ४ ।।

ग्रन्थ परिचय :

अध्याय छन् 'सत्र' र येसभित्र
छन् श्लोक 'तीनैसय आठ-तीस'।
शिक्षा अनेकौंथरिका यहाँ छन्
मौरीहरूका पनि छन् नि गन्थन् ।।
।। ५ ।।
आफूले नै 'राजनीति समुच्चय' भनीयको ।
ग्रन्थकर्ताकै उल्लेख स्पष्ट प्रारम्भमैं छ यो ।।
।। ६ ।।
झल्का छन् ज्ञान भक्तिका व्याख्या त सर्ब बाँकि छन्।
सत्यासत्य मार्गहरू 'दर्पण'मा सुपष्ट छन् ।।
।। ७ ।।
अनेकौं शास्त्रका श्लोक झिकदा पुनरुक्तिको ।
दोष दृष्टि अपेक्षामा शिक्षा बोध निमित्त हो ।।
।। ८ ।।

**विद्वान्मा संस्कृत नै छ, अल्पज्ञ जन-निम्तिमा ।**
**भाषार्थ श्लोकले सेवा होओस् कल्याण सर्वमा ।।**
**।।९।।**

ग्रन्थारम्भ :

**प्रणम्य शिरसा विष्णुं त्रैलोक्याधिपतिं प्रभुम् ।**
**नानाशास्त्रोद्धृतं वक्ष्ये राजनीतिसमुच्चयम् ।।१।।**

त्रिलोकेश विष्णुलाई नम्र प्रणाम गर्दछु ।
शास्त्रको सार झिकेर नीति ग्रन्थ बनाउँछु ।।

**तीनै लोकका स्वामी सर्वशक्तिमान् भगवान् विष्णुलाई शिरले प्रणाम गरेर अनेक शास्त्रहरूबाट निकालिएको राजनीतिको समुच्चय ग्रन्थलाई भन्दछु ।।१।।**

शास्त्र अध्ययन-मननको महत्त्व :

**अधीत्येवं यथाशास्त्रं नरो जानाति सत्तमः ।**
**धर्मोपदेशविख्यातं कार्याऽकार्यं शुभाऽशुभम् ।।२।।**

यथार्थ यो पढी कृत्य अकृत्यादि चुनी सब ।
सत्कर्म गर्ने नरले दुवै लोक सपार्दछ ।।

**जुन मनुष्यले यस नीतिशास्त्रलाई विधिपूर्वक पढेर धर्मशास्त्रहरूले बताएको शिक्षामा प्रसिद्ध कर्तव्याकर्तव्य राम्रो कर्म र नराम्रो कर्मलाई जान्दछन् ती धेरै उत्तम छन् ।।२।।**

**तदहं संप्रवक्ष्यामि लोकानां हितकाम्यया ।**
**यस्य विज्ञानमात्रेण सर्वज्ञत्त्वं प्रपद्यते ।।३।।**

जनका हितका निम्ति जो भन्छु अर्तिका कुरा ।
जानी सत्पथमा लागे कल्याण हुन्छ सर्वदा ।।

**म लोकको भलाइका इच्छाले यसलाई भन्दछु । जसलाई जान्नाले मात्र अनन्त ज्ञान प्राप्त हुन्छ ।।३।।**

यिनले दुःख निम्त्याउँछन् :

**मूर्ख शिष्योपदेशेन दुष्टा स्त्री भरणेन च ।**
**दुःखितैः संप्रयोगेण पण्डितोऽप्यवसीदति ।।४।।**

निर्बुद्धि शिष्यमा अर्ति, दुष्टा स्त्रीलाइ पाल्दछ ।
निर्धनीमा व्यवहार्ले जो पनि दुःख पाउँछ ।।
(दुष्टा स्त्री पाल्न को खोज्ला त्यस्तै परि त गर्नु के?
काम गर्नु-गराउनु होश राखेर युक्तिले) ।।

**मूर्ख चेलालाई पढाउनाले, दुष्टा स्त्रीलाई पालन गर्नाले र दुःखीहरूका साथ व्यवहार गर्नाले बुद्धिमान् (पण्डित) पनि दुःखी हुन्छ ।।४।।**

यी चीजले मृत्युको भय निम्त्याउँछन् :

**दुष्टा भार्या शठं मित्रं भृत्यश्चोत्तरदायकः ।**
**ससर्पे च गृहे वासो मृत्युरेव न संशयः ।।५।।**

जवाफ लाउने नोकर्, घरमा सर्प बास् भयो ।
दुष्टा स्त्री छ त मृत्यु वा मृत्युको भय जान्नु यो ।।

**असत्य बोल्ने स्त्री, कपटी मित्र, मुखमुखै लाग्ने नोकर र सर्प भएका घरमा बस्नु मर्नु-समान छ यसमा सन्देह छैन ।।५।।**

केले केको रक्षा गर्ने ?

**आपदर्थे धनं रक्षेद् दारान् रक्षेद् धनैरपि ।**
**आत्मानं सततं रक्षेद् दारैरपि धनैरपि ।।६।।**

रक्षा गर्नु स्वधनको, धनले धर्मको अनि ।
आफ्नो र पत्नीको रक्षा गर्नुहोस् चतुरो बनी ।।

**विपत्तिका लागि धन बचाउनुपर्छ, धनले स्त्रीको रक्षा गर्नुपर्छ र स्त्री र धनले सधैं स्वयं जोगिनुपर्छ ।।६।।**

**आपदर्थे धनं रक्षेच्छ्रीमतामापदः कुतः ।**
**कदाचिच्चलिता लक्ष्मीः संचिताऽपि विनश्यति ।।७।।**

आपत्ति-नाश निम्तिमा धनको होश् गरी सदा ।
सुरक्षा गर्नु, आपत्ति पर्न सक्छ यदाकदा ॥

**विपत्तिका लागि धन जोगाउनु उचित छ, धनवान्‌लाई के आपत्ति छ र ! जब कहिले लक्ष्मी गइन् भने जम्मा गरी राखेको धन पनि नष्ट हुन्छ ॥७॥**

## कहाँ बस्नु उचित हुँदैन ?

**यस्मिन् देशे न सम्मानो न वृत्तिर्न च बान्धवाः ।**
**न च विद्यागमोऽप्यस्ति वासं तत्र न कारयेत् ॥८॥**

चल्दैन जीविका जहाँ छैनन् बन्धुहरू जहाँ ।
विद्या आदर पाइन्नन् न बस्नु वेश हो त्यहाँ ॥

**जुन देशमा आफ्नो सम्मान, जीविका, परिवार (बन्धु) र विद्या लाभ केही छैन, त्यस देशमा निवास गर्नु उचित छैन ॥८॥**

**धनिकः श्रोत्रियो राजा नदी वैद्यस्तु पञ्चमः ।**
**पञ्च यत्र न विद्यन्ते न तत्र दिवसं वसेत् ॥९॥**

विप्र वेदज्ञ आचारी, राष्ट्राध्यक्ष-विवेकि र ।
धनी, वैद्य, नदी छैनन् त्यहाँ हुँदैन बस्नु त ॥

**धनवान्, वेद जान्ने ब्राह्मण, राजा, नदी तथा वैद्य जहाँ यी पाँच छैनन् त्यहाँ एक दिन पनि नबस्नू ॥९॥**

## कस्ताको सङ्गत गर्नु हुँदैन ?

**लोकयात्राऽभयं लज्जा दाक्षिण्यं त्यागशीलता ।**
**पञ्च यत्र न विद्यन्ते न कुर्यात्तत्र सङ्गतिम् ॥१०॥**

जीविका, अभय, लज्जा, दया, निर्लोभ, शील् भयो।
छैनन् जहाँ ती मान्छेको सङ्ग नगर्नु जान्नु यो ॥

**जीविका, डर, लाज, कुशलता, दान गर्ने प्रवृत्ति यी पाँच जहाँ छैनन् त्यहाँका मानिसको साथ कदापि नगर्नु ॥१०॥**

कस्को कुन बखत पहिचान हुन्छ ?

**जानीयात्प्रेषणे भृत्यान् बान्धवान् व्यसनागमे ।**
**मित्रं चापत्तिकाले तु भार्यां च विभवक्षये ॥११॥**

नोकर्को काम हेरेर, बान्धव दुःखकालमा ।
विपत्तिमा मित्रलाई[१], स्त्री चिन्नू छ गरीबिमा ॥
(सावित्री, द्रौपदी, शैब्या, दमयन्तीसरि स्त्रीले ।
गरीबी वा दुःख पर्दा पनि बस्छन् ति धैर्यले) ॥

**नोकरहरूलाई घर पठाउँदा, कुटुम्बहरूलाई संकट आउँदा, मित्रहरूलाई विपत्तिका समयमा र स्त्रीलाई धन नाश हुँदा चिन्नू ॥११॥**

कस्तालाई सन्मित्र भन्ने?

**आतुरे व्यसने प्राप्ते दुर्भिक्षे शत्रुसङ्कटे ।**
**राजद्वारे श्मशाने च यस्तिष्ठति स बान्धवः॥१२॥**

शत्रुका त्रास, आतुर, दुःखमा अनिकालमा ।
राजद्वार, श्मशानमा साथ् दिने जान्नु मित्रमा[१]॥

**बीमारी हुँदा, दुःख पर्दा, अनिकाल पर्दा, शत्रुको भय हुँदा, राजाको नजीक र मसानघाटमा जो साथ रहन्छ त्यो बन्धु हो॥१२॥**

अप्राप्तिको धेरै आशा नगर्नु :

**यो ध्रुवाणि परित्यज्य अध्रुवं परिसेवते ।**
**ध्रुवाणि तस्य नश्यन्ति अध्रुवं नष्टमेव हि ॥१३॥**

प्राप्त छाडी अप्राप्यको आशा गर्नु त व्यर्थ हो ।
पाएको पनि नाशिन्छ नपाउने परै भयो ॥

**जसले निश्चित वस्तुहरूलाई छोड़ेर अनिश्चित वस्तुहरूको**

---

१. पापान्निवारयति योजयते हिताय
गुह्यानि गूहति गुणान् प्रकटीकरोति ।
आपद्गतं च न जहाति ददाति काले
सन्मित्र-लक्षणमिदं प्रवदन्ति सन्तः ॥ —(नीतिशतक ७३)॥

**साधना गर्दछ, त्यसका निश्चित वस्तुहरू पनि नष्ट हुन्छन्, अनिश्चित वस्तुहरूको ता विनाश छ नै ॥१३॥**

कस्ती कन्या रोजनु ?

**वरयेत् कुलजां प्राज्ञो विरूपामपि कन्यकाम् ।**
**रूपशीलां न नीचस्थां विवाहः सदृशः कुले ॥१४॥**

कन्या जस्ती हउन् किन्तु, कुलकी रोज्नु पर्दछ ।
राम्री होस् तापनि नीच कुलकी छाड्नु पर्दछ ॥
(कुलको तत्वतः राम्रो स्वभाव हुनुपर्दछ ।
आचार शील हो उच्च शोच्नु छ कुल वास्तव) ॥

**बुद्धिमान्ले राम्रा कुलमा जन्मिएकी कुरूपा कन्यासँग पनि विवाह गर्नु, नीच कुलकी रूप र शील भए तापनि विवाह गर्नु हुँदैन, यसकारण विवाह समान कुलमा योग्य छ ॥१४॥**

**विषादप्यमृतं ग्राह्यममेध्यादपि काञ्चनम् ।**
**नीचादप्युत्तमां विद्यां स्त्रीरत्नं दुष्कुलादपि ॥१५॥**

विषबाट अमृत र 'सुन' अशुद्धबाट होस् ।
विद्या शील भए कन्या ग्राह्य न्यूनज नै हओस् ॥
(सदाचारी छ ता कन्या ग्राह्य हो जुन होस् कुल ।
जस्ताबाट पनि सत्य ज्ञान ता लिनु पर्दछ) ॥

**विषबाट पनि सुधालाई, अपवित्र वस्तुहरूबाट पनि सुनलाई, नीच मनुष्यहरूबाट पनि उत्तम विद्यालाई, दुष्ट कुलबाट पनि रत्नरूपी स्त्रीलाई लिनुपर्छ ॥१५॥**

क- कसको भर पर्नु हुँदैन ?

**नदीनां च नखीनां च शृङ्गीणां शस्त्रपाणिनाम् ।**
**विश्वासो नैव कर्त्तव्यः स्त्रीषु राजकुलेषु च ॥१६॥**

शस्त्रधारी, नदी, नङ्ग्रा, सीङ् हुने पशुको अनि ।
स्त्री, राजकुलको विश्वास् नगर्नु कहिल्यै पनि ॥

(भो ता सामीप्य साथित्त्व-भावझैं राख्नुपर्दछ ।
तर भित्र होश राखी सोचेर चल्नु पर्दछ) ॥

**नदीहरूको, शस्त्रधारीहरूको, नङ्ग्रा र सिंग भएकाको, स्त्रीहरूको र राजकुलको कहिल्यै विश्वास नगर्नू ॥१६॥**

स्त्री-जातिको स्वाभाविक शक्ति :

**स्त्रीणां द्विगुण आहारो लज्जा चापि चतुर्गुणा ।**
**साहसं षड्गुणं चैव कामश्चाष्टगुणः स्मृतः ॥१७॥**

स्त्रीको आहार दोबर, लाज चौबर, साहस-
छः गुना, कामना शक्ति आठ् गुना बढि हुन्छ र ॥
(निर्लज्ज स्त्री हुँदैछन् क्वै भनौं कि युगधर्म त ।
कामना संयमी नारी धन्य हुन् भनि मान्नु छ ॥
संयमी शील नारीकै भरमा स्थिर विश्व छ)॥

**स्त्रीहरूको भोजन दुई गुना, लज्जा चार गुना, साहस छः गुना र काम आठ गुना बढ़ी हुन्छ ॥१७॥**

**(विविध विषय शिक्षा भिन्नभिन्नै प्रसङ्ग**
**बुझिलिनु तिनि सारा अर्ति छन् सत्यसङ्ग ।**
**समय छ कुन कस्तो ग्राह्य छन् सोहि सम्झी**
**गरनु सफल होला काम जो पर्दछन् ती)॥**

*॥ इति प्रथमोऽध्यायः समाप्तम् ॥*





# अथ द्वितीयोऽध्यायः

स्त्री-जातिको स्वाभाविक दोष :

**अनृतं साहसं माया मूर्खत्त्वमतिलोभिता ।**
**अशौचत्वं निर्दयत्वं स्त्रीणां दोषाः स्वभावजाः॥ १॥**

झूठो बोल्नु, छल, छॉट, ऑट, रिस, अशुद्धता ।
व्यर्थको खर्च, शृङ्गार, चुक्ली, कप्ट्याइँ, मूर्खता ।
लोभ, निर्दयता, स्त्रीका स्वाभाविक् दोष हुन् यि ता॥
(कमल्को फूलझैं मुख् छ अमृतैसरि बोलि छ ।
छुराको धारझैं चित्त कस्ले स्त्री बुझ्न सक्दछ? ॥
पति पुत्रादि जो होऊन् चाहे घात् गर्न सक्दछन् ।
नारीको भित्री हृदय पूरा को बुझ्न सक्दछन् ? ॥
स्त्रीका चरित्र[1] कविले सक्दैनन् पूर्ण बुझ्न ता ।
तर भर छ संसारै जो छन् सत्-स्त्री पतिव्रता) ॥

**असत्य बोल्नु, उत्ताउली हुनु, कपटी हुनु, मूर्खता, अत्यन्त लोभ, अपवित्र र निर्दयता स्त्रीहरूका स्वाभाविक दोष हुन् ॥ १॥**

पुण्यले पाइने कुरा :

**भोज्ये भोजनशक्तिश्च रतिशक्तिर्वरस्त्रियाम् ।**
**विभवे दानशक्तिश्च नाल्पस्य तपसः फलम् ॥ २॥**

---

१. शरत्पद्मोत्सवं वक्त्रं वचश्च श्रवणामृतम् ।
हृदयं क्षुरधाराभं स्त्रीणां को वेद चेष्टितम् ॥
न हि कश्चित्प्रियः स्त्रीणामञ्जसा स्वशिखात्मनाम् ।
पतिं पुत्रं भ्रातरं वा घ्नन्त्यर्थे घातयन्ति च ॥
—(श्रीमद्भागवत ६/१८/४१-४२)।
स्त्रियाश्चरित्रं पुरुषस्य भाग्यम्, दैवो न जानाति कुतो मनुष्यः ?
विश्वासपात्रं न किमस्ति नारी । —(मणिरत्नमाला १९)

नारीका साथमा भोग, पाएमा खान सक्छ जो ।
द्रव्य हुँदा दान गर्न सक्नु चातुर्य हो ठूलो ॥

**खान योग्य वस्तु भोजन गर्न सक्नु, रति गर्न सक्नु र सुन्दर स्त्री, ऐश्वर्य र दान गर्न सक्नु यी थोरै तपका फल होइनन् ॥२॥**

यहीँ स्वर्ग :

**यस्य पुत्रो वशीभूतो भार्या छन्दानुगामिनी ।**
**विभवे यश्च सन्तुष्टस्तस्य स्वर्ग इहैव हि ॥३॥**

आज्ञाकारी सुपुत्र छ पत्नी छे आफुमा वश ।
स्व- धनमा छ सन्तोष त्यसको यहिँ स्वर्ग छ ॥
(सबै अनित्य सम्झेर निर्वाण खोज्नु पर्दछ)॥

**जसको पुत्र आज्ञाकारी छ र स्त्री इच्छा अनुसार चल्दछे तथा जसले ऐश्वर्यमा सन्तोष गर्दछ त्यसलाई स्वर्ग यहीं नैं छ ॥३॥**

पुत्र, पिता, मित्र, स्त्री कस्ता हुनुपर्दछ ?

**ते पुत्रा ये पितुर्भक्ताः स पिता यस्तु पोषकः।**
**तन्मित्रं यत्र विश्वासः सा भार्या यत्र निर्वृतिः ॥४॥**

पुत्र हो त्यो पितृभक्त, पिता त्यो हो कि पाल्छ जो ।
मित्र हो जो छ विश्वासी, स्त्री हो जो सुख दिन्छि जो ॥

**पुत्र तिनै हुन् जो पितृभक्त छन्, पिता त्यही हो जसले पालन गर्दछ, त्यही मित्र हो, जसको विश्वास छ र त्यही स्त्री हो जसमा सुख छ ॥४॥**

लोकाचारे मित्रको भर नपर्नु :

**परोक्षे कार्यहन्तारं प्रत्यक्षे प्रियवादिनम् ।**
**वर्जयेत् तादृशं मित्रं विषकुम्भं पयोमुखम् ॥५॥**

सन्मुखमा मीठो बोल्ने, पछाडि काम नास्दिने ।
विषाक्त पात्रको दूधझैं त्यो मित्र छ छाड्दिने ॥

पछाड़ि हुँदा काम बिगार्ने र सम्मुख हुँदा राम्रा कुरा गर्नेवाला यस्तो मित्रलाई[1] विषले भरिएको मुखमा दूध अडिएको घड़ालाई झैं छोड़िदिनुपर्छ ॥५॥

विश्वास कतै नखोल्नु :

**न विश्वसेत् कुमित्रे च मित्रे वापि न विश्वसेत् ।**
**कदाचित् कुपितं मित्रं सर्व गुह्यं प्रकाशयेत् ॥६॥**

कुमित्र होस् कि सन्मित्र विश्वास हुन्न खोलनु ।
कदाचित् मित्र रिसाए गोप्य खोल्दछ सम्झनु ॥

कुमित्रमा विश्वास नगर्नु र मित्रमा पनि विश्वास गर्नु उचित छैन, किनकि कदाचित् मित्र क्रोधित भएमा सबै भेद प्रकट गरिदेओस् ॥६॥

कार्य सकेर मात्र प्रकाश गर्नु :

**मनसा चिन्तितं कार्यं वाचा नैव प्रकाशयेत् ।**
**मन्त्रेण रक्षयेत् गूढं कार्यं चाऽपि नियोजयेत् ॥७॥**

बुद्धिमान्ले काम गर्दा गरिसक्नु र कामले ।
प्रकाश गर्नु पहिल्यै नहॉक्नु मुख मात्रले ॥

मनले सोचेको कार्यलाई वचनले प्रकट नगर्नु, मन्त्रको समान त्यसको रक्षा गर्नु र गुप्त नै काम पनि गर्नु ॥७॥

तीनोटा दुःखहरू :

**कष्टं च खलु मूर्खत्वं कष्टं च खलु यौवनम् ।**
**कष्टात् कष्टतरं चैव परगेहनिवासनम् ॥८॥**

---

१. आपदि मित्र-परीक्षा, शूर-परीक्षा रथाङ्गणे भवति ।
विनये वंश-परीक्षा, स्त्रियः परीक्षा च निर्धने पुंसि ॥
—(सुभाषितरत्नभाण्डागार)॥

दु:ख दिन्छ मूर्खताले बैंसले दिन्छ दु:ख नै[१] ।
अर्काको घरमा बास गर्नु हो अझ दु:ख नै[२] ॥

**मूर्खताले निश्चय नै दुःख दिन्छ र यौवन (जवानी) ले पनि दुःख दिन्छ परन्तु अर्काको घरमा बस्नुभन्दा अरू दुःखदायी केही हुँदैन ॥८॥**

यति चीज कहीं-कहीं मात्र पाइन्छन् :

**शैले शैले न माणिक्यं मौक्तिकं न गजे गजे ।**
**साधवो न हि सर्वत्र चन्दनं न वने वने ॥९॥**

मोती न सर्व हात्तीमा, मणि न गिरि सर्वमा ।
श्रीखण्ड न सबै वन्मा साधु न सर्व ठाउँमा ॥

**सबै पर्वतहरूमा माणिक्य हुँदैन र मोती सबै हात्तीहरूमा पाइँदैन, साधुहरू सबै ठाउँमा मिल्दैनन् र सबै वनमा चन्दन पनि हुँदैन ॥९॥**

पुत्रलाई ज्ञानी बनाऔं :

**पुत्राश्च विविधाः शीलैर्नियोज्याः सततं बुधैः ।**
**नीतिज्ञाः शीलसंपन्ना भवन्ति कुलपूजिताः ॥१०॥**

बुद्धिमान्ले पुत्रलाई अनेकौं सत्यशीलमा ।
लगाउनुहोस् सत्पुत्र पूजित हुन्छ लोकमा ॥

**बुद्धिमान्हरूले पुत्रहरूलाई अनेक तरहका सुशीलतामा लगाउनू किनकि नीतिलाई जान्नेवाला यदि शीलवान् भएदेखि कुलमा पूजित हुन्छन् ॥१०॥**

---

१. बैंसले पार्छ उन्मत्त मूर्खता पार्छ दुःख नै ।
जितेन्द्रिय छ जो धीर सुख पाउँछ त्यहि नै ॥
२. विराटका घर गई पञ्चपाण्डव द्रौपदी ।
छिपेर बसनु पर्दा दुःख सहे हुनन् कति? ॥

कर्तव्य पूरा नगरे मातापिता पनि शत्रुसमान हुन्छन्:

**माता रिपुः पिता शत्रुर्बालो येन न पाठ्यते ।**
**सभामध्ये न शोभन्ते हंसमध्ये बको यथा ।।११।।**

शत्रु हुन् ती पिता माता पढाउन्नन् त पुत्र जो ।
सभाका बीचमा शोभा पाउन्न अज्ञ पुत्र त्यो ।।

**तिनकी माता शत्रु हुन् र पिता दुश्मन हुन् जसले आफ्ना बालकलाई पढ़ाउँदैनन्, यसकारण यी सभाका बीचमा शोभा पाउँदैनन् जस्तै हाँसहरूका बीचमा बकुल्लो ।।११।।**

**ऋणकर्ता पिता शत्रुर्माता च व्यभिचारिणी ।**
**नारी रूपवती शत्रुः पुत्रः शत्रुरपण्डितः[1] ।।१२।।**

ऋण गर्ने पिता शत्रु, आमा जो व्यभिचारिणी ।
मूर्ख पुत्र कुलटा स्त्री सम्झनु शत्रुझैं यिनी ।।

**ऋण गर्नेवाला पिता शत्रु हुन्, व्यभिचारिणी माता र सुन्दर स्त्री शत्रु हुन् र मूर्ख पुत्र वैरी हो ।।१२।।**

पुत्र र शिष्यलाई के गर्नुपर्छ ?

**लालनाद् बहवो दोषास्ताडनाद् बहवो गुणाः।**
**तस्मात्पुत्रं च शिष्यं च ताडयेन्न तु लालयेत् ।।१३।।**

पुल्पुल्याहटमा दोष, वेश हो हपकाउनु ।
तस्मात् पुत्र शिष्यलाई कैल्यै न पुल्पुल्याउनु ।।
(किन्तु लालित्य बोलीले कर्तव्यमा लगाउनु) ।।

**प्यारो गर्नाले धेरै दोष छन् र पिट्नाले धेरै गुण छन्, यसकारण पुत्र र शिष्यलाई दण्ड दिनु उचित छ, प्यारो गर्नु उचित छैन ।।१३।।**

---

१. यो "**ऋणकर्ता पिता शत्रु........पुत्रः शत्रुरपण्डितः**" नामक एक श्लोक यसै पुस्तकको अध्याय ६ बाट यहाँ प्रसङ्ग अनुकूल भएकोले ल्याइएको हो ।

सधैं गरिरहनु पर्ने कुराहरू :

**श्लोकेन वा तदर्धेन तदर्धार्धाक्षरेण च ।**
**अवन्ध्यं दिवसं कुर्याद् दानाध्ययनकर्मभिः ॥१४॥**

एक श्लोक वा जत्ति होस् सधैं नै पढ्नु वेश छ ।
पढ्नु, दानादि सत्कर्म कैल्यै हुन्न नि छुट्न त ॥

**एक श्लोक अथवा आधा श्लोक अथवा आधा श्लोकको आधा भए पनि प्रतिदिन पढ्नु उचित छ । यसप्रकार दान, विद्याध्ययन आदि कर्महरूले दिन बिताउनुपर्छ ॥१४॥**

आफैलाई सन्ताप दिने कुराहरू :

**कान्तावियोगः स्वजनापमानो**
**रणस्य शेषः कुनृपस्य सेवा ।**
**दरिद्रभावो विषमा सभा च**
**विनाग्निमेते प्रदहन्ति कायम् ॥१५॥**

रोगी वृद्ध गरीबका समयमा स्त्रीको वियोगै भयो
आफ्नाबाट भयो अनादर अनी गोष्ठी अविवेकिको ।
सेवा दुष्ट नरेन्द्रको र रणमा हारीयका शत्रुले
पोल्छन् भित्र शरीर अग्निसरि नै बस्नू छ है धैर्यले ॥

**स्त्रीवियोग, आफ्ना कुटुम्बद्वारा अनादर, दुष्ट राजाको सेवा, ऋणको शेष, दरिद्रता र मूर्खहरूको सभा हुन गयो भने बिना अग्निले नै शरीरलाई जलाउँदछन् ॥१५॥**

नाश हुने कारणहरू :

**नदी तीरे च ये वृक्षाः परगेहेषु कामिनी ।**
**मन्त्रीहीनाश्च राजानः शीघ्रं नश्यन्त्यसंशयः[१] ॥१६॥**

---

१. लुब्धस्य नश्यति यशः पिशुनस्य मैत्री नष्टक्रियस्य कुलमर्थपरस्य धर्मः।
विद्याफलं व्यसनिनः कृपणस्य सौख्यं राज्यं प्रमत्तसचिवस्य नराधिपस्य ॥
—(पञ्चतन्त्रम्)।

अर्काका घर डुल्ने स्त्री[1], वृक्ष नदी किनारको ।
राष्ट्राध्यक्ष विना मन्त्री हुन्छन् नाश अवश्य हो ॥
(राष्ट्रेशको सु-मन्त्री होस् सदा सत्योपदेशको ।
कुमन्त्रीको मन्त्रणाले कंशको शीघ्र मृत्यु भो) ॥

**नदीका किनारको वृक्ष, अर्काका घर जाने स्त्री, मन्त्री बिनाको राजा, निश्चय छ कि शीघ्र नष्ट हुन्छन् ॥१६॥**

**आलस्योपहता विद्या परहस्ते गतं धनम् ।**
**अल्पबीजं हतं क्षेत्रं हतं सैन्यमनायकम्[2]॥१७॥**

विना नायक सेनाको, धन अन्यत्र हातको ।
बीउ कम्ति भई खेती, विद्या नाशिन्छ अल्छिको॥

कसको कुन बल ?

**बलं विद्या च विप्राणां राज्ञः सैन्यबलं तथा ।**
**बलं वित्तं च वैश्यानां शूद्राणां च कनिष्ठिका ॥१८॥**

विद्वान्को बल हो विद्या, राष्ट्रको बल सैन्य हो ।
व्यापारीको बल धन, सेवा हो बल सर्वको ॥

**ब्राह्मणहरूको बल विद्या हो, त्यस्तै नै राजाहरूको बल सेना हो, वैश्यहरूको बल धन हो र शूद्रहरूको बल कालीगड़ी हो ॥१८॥**

कस्ताले कस्तालाई त्यागदछन् ?

**निर्धनं पुरुषं वेश्या प्रजा भग्नं नृपं त्यजेत् ।**
**खगा वीतफलं वृक्षं भुक्त्वा ह्यभ्यागता गृहम् ॥१९॥**

त्याग्छन् पैसा छैन ता कामिनीले
निर्-उद्योगी भूप त्याग्छन् प्रजाले ।

१. पेशा त्यस्तै भए डुल्नै पऱ्यो घर्घरमा तर ।
संयमी शीलवान् स्त्री त धैर्य राख्छन् सधैंभर ।।
(ब्राह्मण्का घरमा 'शैव्या' विराट्का घर द्रौपदी ।
बसेथे धर्म थामेर राखेथे दृढ सन्मति)।।

२. यो श्लोक अध्याय ६, श्लोक ७ बाट यहाँ प्रसङ्ग अनुकूल भएकोले राखिएको हो।

त्याग्छन् रित्तो वृक्षलाई चराले
खाई त्याग्छन् त्यो घरै पाहुनाले।
(मित्रै त्याग्छन् स्वार्थि-कृतघ्नि जन्ले)॥

**वेश्याले धनहीन मनुष्यलाई, रैतीले पराजित राजालाई, फलरहित वृक्षलाई पक्षीले र भोजन गरिसकेपछि पाहुनाले घरको त्याग गर्दछन् ॥१९॥**

**गृहीत्वा दक्षिणां विप्रास्त्यजन्ति यजमानकम्।**
**प्राप्तविद्या गुरुं शिष्या दग्धारण्यं मृगास्तथा ॥२०॥**

विप्रले दक्षिणा पाई यजमान्लाइ त्याग्दछन्।
विद्यार्थीले पढी सकी गुरुजीलाइ त्याग्दछन्॥
मृगादिहरुले त्याग्छन् डढेका निरसी त वन्।
(गृह नै त्याग्दछन् प्रौढ वैरागी ज्ञानि जो त छन्)॥

**ब्राह्मणले दक्षिणा पाएपछि यजमानलाई, शिष्यले विद्या प्राप्त गरेपछि गुरुलाई र डढेलो लागेको वनलाई मृगहरूले त्यागिदिन्छन् ॥२०॥**

कस्तो जुट्नु राम्रो हो ?

**समाने शोभते प्रीती राज्ञि सेवा च शोभते।**
**वाणिज्यं व्यवहारेषु स्त्री दिव्या शोभते गृहे ॥२१॥**

समान जनमा प्रीति, सेवा सत्पात्रको गर।
गर्नु सत्य व्यवहार, स्त्री होस् पतिव्रता घर॥

**बराबरीवालाहरूमा प्रीति शोभा दिन्छ र नोकरी राजाको शोभा दिन्छ, व्यवहारमा व्यापार र घरमा सुन्दर स्त्रीले शोभा दिन्छन्॥ २१॥**

**(अकुलिन जति नारीका सबै दुष्-स्वभाव**
**बुझिकन चतुरो भै गर्नुहोस् काम-काज।**
**कुपथ; सुपथ हेर्ने नीति चाणक्य यो छ**
**सुपथिक बनिएमा नित्य कल्याण मिल्छ)॥**

*॥ इति द्वितीयोऽध्याय: समाप्तम् ॥*



# अथ तृतीयोऽध्यायः

सबै सम्पन्न मात्रै हुँदैनन् :

**कस्य दोषः कुले नास्ति व्याधिना के न पीडिताः।**
**व्यसनं केन न प्राप्तं कस्य सौख्यं निरन्तरम् ॥१॥**

निर्दोष कुलको को छ ? निरोगी मात्र हुन्छ को ?।
दुःख नपाउने को छ ? सुखी नित्य रहन्छ को ?
(यो सम्झी शान्त सन्तोषी भै बस्ने बुद्धिमान् उ हो)॥

**कसका कुलमा दोष छैन र रोगले कसलाई पीड़ित गरेन, कसले दुःख पाएन र कसलाई बराबर सुख मात्र छ ? ॥१॥**

परीक्षाका विषय :

**आचारः कुलमाख्याति देशमाख्याति भाषणम्।**
**संभ्रमः स्नेहमाख्याति वपुराख्याति भोजनम् ॥२॥**

आचार्‌ले कुल जानिन्छ देश जानिन्छ बोलिले ।
आदर्‌ले प्रीति जानिन्छ, भोजन् जानिन्छ देहले ॥

**आचारले कुललाई बताउँछ र बोलीले देशलाई बताउँछ, आदरले प्रीतिलाई बताउँदछ र शरीरले नै भोजन जानिन्छ ॥२॥**

कस्तालाई के-केमा लगाउने ?

**सत्कुले योजयेत्कन्यां पुत्रं विद्यासु योजयेत् ।**
**व्यसनं योजयेत्छत्रुं मित्रं धर्मेण योजयेत् ॥३॥**

कन्या दिनु सत्-कुलमा विद्यामा पुत्र लाउनु ।
शत्रु लागोस् कुबाटोमा, सद्बुद्धि मित्रमा दिनु ॥

**कन्या श्रेष्ठ कुललाई दिनु उचित छ, पुत्रलाई विद्या पढ़ाउनु उचित छ, शत्रुलाई दुःख दिनु उचित छ र मित्रलाई धर्मको उपदेश दिनु उचित छ ॥३॥**

सर्पभन्दा दुर्जनको भय ठूलो हुन्छ :

**दुर्जनस्य च सर्पस्य वरं सर्पो न दुर्जनः ।**
**सर्पो दंशति काले तु दुर्जनस्तु पदे पदे ।।४।।**

दुर्जन्भन्दा सर्प वेश, दुर्जन वेश हुन्न नै ।
क्वै बेला सर्पले टोक्ला, दुर्जन्ले टोक्छ छिन्छिनै ।।
सर्पको औषधी हुन्छ, औषधी हुन्न मूर्खको ।।

**दुर्जन र सर्प यिनमा सर्प नै बेस हो, दुर्जन हैन, किनभने सर्पले बेला बखतमा मात्र डस्छ, तर दुर्जनले पाइला-पाइलामा दुःख दिन्छ।।४।।**

सत्पात्रलाई सधैं आदर गरौं :

**एतदर्थं कुलीनानां नृपाः कुर्वन्ति सङ्ग्रहम् ।**
**आदिमध्यावसानेषु न त्यजन्ति च ते नृपम् ।।५।।**

विज्ञजन्ले त सत्पात्रलाई आदर गर्दछन् ।
सत्पात्रले जुनै बेला पनि मद्दत गर्दछन् ।।

**राजाहरूले कुलीनहरूको संग्रह यस निमित्त गर्दछन् कि, ती आदि अर्थात् उन्नति, मध्य अर्थात् साधारण र अन्त अर्थात् विपत्तिमा पनि राजालाई छोड्दैनन् ।।५।।**

साधुको स्वभाव :

**प्रलये भिन्नमर्यादा भवन्ति किल सागराः ।**
**सागरा भेदमिच्छन्ति प्रलयेऽपि न साधवः ।।६।।**

कोही बेला त समुद्र-सागर पनि चल्दछन् ।
तर साधुहरू नित्य स्वधर्ममैं ति बस्दछन् ।।
(परोपकार जो गर्छन् तिन्लाई साधु भन्दछन् ।
उपकार सके गर्लान् नदिई दुःख बस्दछन्) ।।

**समुद्रले प्रलयका समयमा आफ्नो मर्यादा छोड्दछन् र सागरले भेदको इच्छा राख्दछन् परन्तु साधुहरूले प्रलय हुँदा पनि आफ्नु मर्यादालाई छोड्दैनन् ।।६।।**

मूर्खदेखि टाढा हुनु :

**मूर्खस्तु परिहर्तव्यः प्रत्यक्षो द्विपदः पशुः ।**
**भिनत्ति वाक्यशल्येन अदृशं कण्टकं यथा ।।७।।**

मूर्खदेखि हुनू टाढा, मूर्ख हुन्छन् पशुसरि ।
घोंच्छन् वाक्रुपि काँढाले, काँढाले अन्धमा सरि।।

**मूर्खलाई टाढ़ा गर्नु उचित छ यसकारण कि देखमा नै त्यो मनुष्य हो, यथार्थमा हेर्दा त्यो दुइखुट्टे पशु हो र वाक्यरूपी काँढ़ाले छेड्दछ, जस्तै अन्धालाई काँढ़ाले ।।७।।**

ज्ञानवान् हुनु नै मानवता हो :

**रूपयौवनसम्पन्ना विशालकुलसम्भवाः ।**
**विद्याहीना न शोभन्ते निर्गन्धा इव किंशुकाः ।।८।।**

जन्मीस् सत्कुलमा किन्तु तर जो ज्ञान हीन छ ।
पलॉश फूल काम् लाग्छ[१], मूर्ख पुत्र बिकाम छ ।।

**सुन्दरता, तरुणता र ठूला कुलमा जन्म भए पनि विद्याहीन पुरुष गन्ध नभएको पलाँशको फूलको समान शोभा दिंदैन ।।८।।**

कसको केले शोभा[२] ?

**कोकिलानां स्वरो रूपं स्त्रीणां रूपं पतिव्रतम् ।**
**विद्या रूपं कुरूपाणां क्षमा रूपं तपस्विनाम् ।।९।।**

---

१. मूलमा-'गन्धविहीन भएकोले पलॉशको फूल, बेकारमा गणना गरिएको छ, तर फूलको केशरी बनाउनमा प्रयोग गरिन्छ भने फल, पातहरू पनि विभिन्न औषधीमा काम आउँछन् । फूल पवित्रतामा नै गनिन्छ । यद्यपि फूलमा सुगन्ध हुनु नै पूर्ण गुण हो । यसर्थ ग्रन्थकर्ताले सुगन्ध विहीन फूलको उपमा दिनु भएको हो ।

२. पयसा कमलं कमलेन पयः, पयसा कमलेन विभाति सरः
मणिना बलयं बलयेन मणिर्, मणिना बलयेन विभाति करः।
शशिना च निशा निशया च शशी, शशिना निशया च विभाति नभः
भवता च सभा सभया च भवान्, भवता सभया च सदस्यगणः ।।
—(समयोचितपद्यमालिका)।।

स्वर शोभा कोइलीको, स्त्रीको शोभा सुशील हो ।
विद्या शोभा नराम्राको, क्षमा शोभा तपस्वीको ॥

**कोइलीको शोभा स्वर हो; स्त्रीहरूको शोभा पतिव्रत्य हो, कुरूपहरूको शोभा विद्या हो र तपस्वीहरूको शोभा क्षमा हो ॥९॥**

त्याज्य कुराहरू :

**त्यजेदेकं कुलस्यार्थे ग्रामस्यार्थे कुलं त्यजेत् ।**
**ग्रामं जनपदस्यार्थे आत्मार्थे पृथिवीं त्यजेत् ॥१०॥**

कुलका निम्तिमा यौटा, कुल गाउँ निमित्तमा ।
देशका निम्तिमा गाउँ, त्याग्नू पृथ्वी स्व-निम्तिमा ॥
(सत्य अर्ति नलिएर व्यास विदुर आदिका ।
धृतराष्ट्रजिले यौटा दुर्योधन न त्याग्दिँदा ॥
आफ्ना सबै इष्टमित्र, सय पुत्र समेतका ।
अठ्ठार हजार 'अक्षौ-हिणी'को मृत्यु भो बरा!)॥

**कुलका लागि एउटालाई छोड़िदिनु, गाउँका लागि कुलको त्याग उचित छ, देशका लागि गाउँलाई र आफ्नू लागि पृथ्वीलाई अर्थात् सबैको त्याग गरिदिनु उचित छ ॥१०॥**

कुन कुराले केबाट बचिन्छ ?

**उद्योगे नास्ति दारिद्र्यं जपतो नास्ति पातकम् ।**
**मौने च कलहो नास्ति नास्ति जागरिते भयम् ॥११॥**

दरिद्री हुन्न उद्योगी, पाप कट्दछ जप् गरे ।
जागा रहे डर हुन्न, झगडा हुन्न मौनले ॥

**उद्योग गरेमा दरिद्रता रहँदैन, जप गरिरहनेलाई पाप हुँदैन, नबोली रहेदेखि झगड़ा हुँदैन, नसुती रहे भय (डर) हुँदैन ॥११॥**

अति गर्नु योग्य हुँदैन :

**अति रूपेण वै सीता अति गर्वेण रावणः ।**
**अतिदानाद् बलिर्बद्धो ह्यति सर्वत्र वर्जयेत् ॥१२॥**

लङ्केशको मरण भो अति गर्व गर्दा
सीताजिको हरण भो अति रूप हूँदा[१] ।
बन्धन् परे बलि अतीशय दान गर्दा
जेमा हओस् हित छ है अति गर्न छाड्दा ॥

**अति सुन्दरी हुनाले सीता हरिइन्, धेरै गर्व (घमण्ड) गर्नाले रावण मारियो, अति दान गर्नाले बलिलाई बाँधिनु पऱ्यो, यसकारण अतिलाई सबै स्थानमा छोड़िदिनु उचित छ ॥१२॥**

कुन कुराले केको लाभ ?

**कोहि भारः समर्थानां कि दूरं व्यवसायिनाम् ।**
**को विदेशः सुविद्यानां कः परः प्रियवादिनाम् ॥१३॥**

शक्तिवान्लाइ के भारी? के टाढा तत्पर छ जो ?
विद्वान्लाई विदेश कुन् ? मीठो बोले पराई को?॥

**समर्थलाई कुन वस्तु भारी (गह्रौं) छ काममा तत्पर रहनेलाई के टाढ़ा छ, सुन्दर विद्या भएकालाई कुन विदेश हो र प्रिय बोल्नेहरूलाई अप्रिय को छ? ॥१३॥**

सत्पुत्रबाट लाभ :

**एकेनाऽपि सुवृक्षेण पुष्पितेन सुगन्धिना ।**
**वासितं तद्वनं सर्वं सुपुत्रेण कुलं[२] यथा ॥१४॥**

---

१. **लक्ष्मणको सत्य वाक्य न मान्दा हरिइन् सिता-**
**मान्नुपर्छ प्रिय वाक्य विश्वासी र हितैषिका ॥**
**गर्भिणी शुकीको हेला गर्नाले गर्भिणी हुँदा ।**
**वन्मा बस्नु पऱ्यो सीता हेला न गर्नु कोहिका ॥**
**रावणको मृत्यु भयो आशा गर्दा परस्त्रिमा ।**
**विभिन्न कारण जुट्छन् जस्को होस् नाश कालमा ॥**

२. नागो भाति मदेन कं जलरुहैः, पूर्णेन्दुना शर्वरी
शीलेन प्रमदा जवेन तुरगो, नित्योत्सवैर्मन्दिरम् ।
वाणी व्याकरणेन हंसमिथुनैः नद्यः सभा पण्डितैः
सत्पुत्रेण कुलं नृपेण वसुधा, लोकत्रयं विष्णुना ॥ —(पञ्चरत्न) ।

सुगन्ध वृक्ष यौटैले वनै सुगन्ध पार्दछ ।
सत्पुत्र छ त यौटैले कुलै मान बढाउँछ ॥

**एउटा मात्र पनि राम्रो वृक्षबाट जसमा सुन्दर फूल र गन्ध छ, त्यसले पूरा वन सुवासित हुन्छ, जस्तै सुपुत्रले कुल ॥१४॥**

**एकेनाऽपि सुपुत्रेण विद्यायुक्तेन साधुना ।**
**आह्लादितं कुलं सर्वं यथा चन्द्रेण शर्वरी[1]॥१५॥**

विद्वान् सत्पुत्र यौटैले कुलै आनन्द पार्दछ ।
शुक्लका चन्द्र यौटैले रात्री उज्ज्वल गर्दछ ॥

**एउटा सुकेको वृक्ष आगाले दन्किनाले त्यो वन त्यस्तै जल्दछ, जस्तै कुपुत्रले कुल ॥१५॥**

के काम धेर पुत्रले ?

**[2]एकोऽपि गुणवान् पुत्रो निर्गुणैश्च शतैर्वरः ।**
**एकश्चन्द्रस्तमो हन्ति न च तारा सहस्रशः ॥१६॥**

यौटै सद्गुणि पुत्र होस् कुगुणका के काम धेर् पुत्रले
दिन्नन् पूर्णतया प्रकाश कहिल्यै ताराहरू धेरले ।
रात्री उज्ज्वल हुन्छ एक् उदित भै ती शुक्लका चन्द्रले
(सत्पुत्र्यर्थ नियम् छ दम्पति बसुन् पैल्यै सदाचारले)॥

**विद्यायुक्त एउटा मात्र सुपुत्रले सबै कुल यसरी आनन्दित हुन्छ, जस्तै चन्द्रमाले रात्रि ॥१६॥**

मूर्ख पुत्रबाट हानि :

**एकेन शुष्कवृक्षेण दह्यमानेन वन्हिना ।**
**दह्यते तद्वनं सर्वं कुपुत्रेण कुलं यथा[3] ॥१७॥**

---

१. अङ्गेन गात्रं नयनेन वक्त्रं, न्यायेन राज्यं लवणेन भोज्यम् ।
धर्मेण हीनं खलु जीवितं च, न राजते चन्द्रमसा विना निशा ॥

२. यो श्लोक अध्याय ४ श्लोक ५ बाट यहाँ प्रसङ्ग अनुकूल भएकोले ल्याइएको हो।

३. दुर्मन्त्रान्नृपतिर्विनश्यति यतिः सङ्गात् सुतो लालनात्
विप्रोऽनध्ययनात् कुलं कुतनयात्, शीलं खलोपासनात् ।
मैत्री चाऽप्रणयात् समृद्धिरनयात्, स्नेहः प्रवासाश्रयात्
ह्रीर्मद्यादनवेक्षणादपि कृषिः, त्यागात् प्रमादाद्धनम् ॥ —(सुभाषितरत्नभाण्डागार)॥

सुकेको वृक्ष यौटैले सारा वन डढाउँछ ।
मूर्ख पुत्र हुन गए कुलै नाश गराउँछ ।
धेरै छोराहरू भए झन् चिन्ता पर्न सक्दछ ॥

**एउटा मात्र पनि राम्रो वृक्षबाट जसमा सुन्दर फूल र गन्ध छ, त्यसले पूरा वन सुवासित हुन्छ, जस्तै सुपुत्रले कुल ॥१७॥**

**किं जातैर्बहुभिः पुत्रैः शोकसन्तापकारकैः ।**
**वरमेकः कुलालम्बी यत्र विश्रम्यते कुलम् ॥१८॥**

शोक सन्ताप पार्छन् ता के गर्नु ? धेर पुत्रले ।
गर्दछ कुलकै रक्षा यौटै होस् त सुपुत्रले ॥
(होश राख्नु छ पैल्यै नै जन्मे के पछुताउनु ?
धेरै पुत्र भै सबैमा मेलमिलाप राखनु) ॥

**शोक सन्ताप उत्पन्न गर्ने धेरै पुत्र भएर के गर्ने ? विश्राम दिनेवाला एउटै पुत्र श्रेष्ठ छ, जसद्वारा कुलले विश्राम पाउँछ ॥१८॥**

**[1]मूर्खश्चिरायुर्जातोऽपि तस्याज्जातान्मृतो नरः ।**
**मृतस्तु चाल्पदुःखाय यावज्जीवं जडो दहेत् ॥१९॥**

नजन्मोस् बेवकुफ पुत्र जाओस् कि शीघ्र नै मरी ।
मर्नाले क्षणिक दुःख, बाँचे दुःख सधैंभरि ॥
(तेस्तै परे धैर्यसाथ बस्नु सम्झेर ॐहरि) ॥

**मूर्ख व्यक्ति चिरंजीवी हुनुभन्दा उत्पन्न हुनासाथ जो मरिगयो त्यो श्रेष्ठ छ । यसको कारण यो हो कि मरेको थोरै दुःखको कारण छ । मूर्ख जबसम्म जिउँदो रहन्छ तबसम्म जलाइरहन्छ ॥१९॥**

पितामाताको कर्तव्य :

**लालयेत् पञ्चवर्षाणि दशवर्षाणि ताडयेत् ।**
**प्राप्ते तु षोडशे वर्षे पुत्रं मित्रवदाचरेत् ॥२०॥**

१. यो श्लोक अ.४ श्लोक ७ को हो, यहाँ प्रसङ्ग अनुकूल भएकोले ल्याइएको हो।

प्यार गर्नु पाँचवर्ष, सत्-शिक्षा दिनु पन्ध्रतक् ।
सोह्र वर्ष पुग्यो पुत्र तब सम्झनु मित्रवत् ॥
(ताडनारूपले हैन अर्ति ता दिनु हर्‌बखत्) ॥

**पुत्रलाई पाँच वर्षसम्म पुल्पुल्याउनु, त्यसपछि दश वर्षसम्म पिटपाट पार्नु र सोह्र वर्षको भएपछि पुत्रसँग मित्रसमान व्यवहार गर्नु ॥२०॥**

लक्ष्मी बस्ने स्थान :

**मूर्खा यत्र न पूज्यन्ते धान्यं यत्र सुसज्जितम् ।**
**दाम्पत्ये कलहो नास्ति तत्र श्रीः स्वयमागता ॥२१॥**

दम्पति छन् जहाँ स्नेही, जहाँ छ अन्न सञ्चय ।
मूर्ख अग्र जहाँ छैनन् लक्ष्मी बस्छिन् त्यहाँ बुझ!॥
पूजिन्छन् पूज्य छन् जाहाँ लक्ष्मी स्थिर त्यहीँ बुझ!॥

**जहाँ मूर्खको पूजा हुँदैन, जहाँ अन्न सञ्चित रहन्छ र जहाँ स्त्री पुरुषको झगड़ा हुँदैन, त्यहाँ लक्ष्मी स्वयं आएर निवास गर्दछिन् ॥२१॥**

**(सब सुमति हउन् स्त्री विश्वमैं हुन्छ शान्ति**
**जगत जननि-स्त्री हुन् शिक्षिका मूल हुन् ती ।**
**नर पनि शुभमार्गी भै रहुन् विश्वमा नै**
**तब सकल विमान-स्वच्छ भै चल्दछन् नै)॥**

*॥ इति तृतीयोऽध्यायः समाप्तम् ॥*





# अथ चतुर्थोऽध्यायः

गर्भदेखिकै आउने कुरा :

**आयुः कर्म च वित्तं च विद्या निधनमेव च ।**
**पञ्चैतानि हि सृज्यन्ते गर्भस्थस्यैव देहिनः ॥१॥**

आयु, कर्म, धन, विद्या, मरण पाँच यी सब ।
लेखिन्छन् गर्भमैं किन्तु सत्य कर्म सधैं गर ॥

**यो निश्चय छ कि आयु, बल, कर्म, धन, विद्या र मरण यी पाँचै चीज जब जीव गर्भमा नै रहन्छ त्यतिखेर नै लेखिदिएको हुन्छ ॥१॥**

सधैं सत्सङ्ग गरौं :

**साधुभ्यस्ते निवर्तन्ते पुत्रा मित्राणि बान्धवाः ।**
**ये च तैः सह संसर्गस्तद्धर्मास्सुकृतं कुलम् ॥२॥**

बान्धव मित्र पुत्रादि गरुन् सज्जन सङ्गत ।
सत्सङ्ग पुण्यले गर्दा कुलै लाग्छन् नि सत्पथ ॥

**पुत्र, मित्र, बन्धु यी साधु सज्जनहरूदेखि निवृत्त हुन्छन् र जसले यिनको सेवन गर्छ, उसका पुण्यले उसका कुल सुकृत हुन्छन् ॥२॥**

सज्जनको सङ्गतबाट लाभ :

**दर्शन–ध्यानसंस्पर्शैर्मत्स्यी कुर्मी च पक्षिणी ।**
**शिशुं पालयते नित्यं तथा सज्जनसङ्गतिः[1] ॥३॥**

---

१. जाड्यं धियो हरति सिंचति वाचि सत्यं
मानोन्नतिं दिशति पापमपाकरोति ।
चेतः प्रसादयति दिक्षु तनोति कीर्तिम्
सत्सङ्गतिः कथय किं न करोति पुंसाम् ॥ —(नीतिशतक २३)।
वाञ्छा सज्जनसङ्गमे परगुणे प्रीतिर्गुरौ नम्रता
विद्यायां व्यसने स्वयोषिति रतिर्लोकापवादाद्भयम् ।
भक्तिः शूलिनि शक्तिरात्मदमने संसर्गमुक्तिःखले-
स्वेते येषु बसन्ति निर्मल गुणास्तेभ्यो नरेभ्यो नमः ॥

देख्नू, ध्यान, छुनू गरेर कछुवा माछा चरा आदिले
बच्चा पालन गर्दछन् यहिसरी सज्जन् सुहृद् विज्ञले ।
दिन्छन् ज्ञान सुमार्गको मनुजमा कल्याण होओस् भनी
सज्जन्को गरनू छ सङ्गत सदा जिज्ञासु प्रेमी बनी ॥

**माछो, कछुवा र पक्षी यी दर्शन, ध्यान र स्पर्शले जस्तै केटाकेटी-हरूलाई सधैंभरि पाल्दछन्, त्यस्तै नै सज्जनहरूको संगति छ॥ ३ ॥**

मौकामा नै सत्कर्म गरौं :

**यावत् स्वस्थो ह्ययं देहो यावन्मृत्युश्च दूरतः।**
**तावदात्महितं कुर्य्यात्प्राणान्ते किं करिष्यति ॥४॥**

उमेरै र निरोगीमैं हित काम् गर्नुपर्दछ ।
वृद्ध निर्बलमा बाह्य कर्म के गर्न सक्दछ ? ॥

**जबसम्म यो शरीर निरोग छ र जैलेसम्म मृत्यु टाढ़ा छ त्यति बेरसम्म पुण्य (हित हुने काम) आदि गर्नु उचित छ, प्राणको अन्त्य भएपछि कसले के गर्छ? ॥४॥**

कुन बेला के गर्नुपर्दछ ?

**[१]उपसर्गेऽन्यचक्रे च दुर्भिक्षे च भयावहे ।**
**असाधुजनसंपर्के यः पलायति स जीवति ॥५॥**

पर्दामा अनिकाल, दुष्टसँगमा बस्नै परेमा जहाँ
भैगो आक्रमणादि शत्रुहरूको, ठूलो उपद्रवो हुँदा ।
भाग्छन् जो जन होश राखिकन, आफ्नो देह रक्षा गर्‍यो
बस्ला होश नराखि त्यो जन भने सङ्कष्टमा नै पर्‍यो ॥

**उपद्रो भएमा, शत्रुले आक्रमण गरेमा, डरलाग्दो अनिकाल परेमा र दुष्ट मनुष्यको संगत हुँदा जो भाग्दछ त्यही मनुष्य जीवित रहन्छ ॥५॥**

---

१. "उपसर्गे.......जीवति" र "धमार्थ......केवलम्" यी दुई श्लोकहरू अध्याय ३, श्लोक १९-२० बाट यहाँ ल्याइएका हुन् ।

कस्ताको जन्म व्यर्थ छ? :

**धर्मार्थ काममोक्षेषु यस्यैकोऽपि न विद्यते ।**
**तस्मात् जन्मनि मर्त्येषु मरणं तस्य केवलम् ।।६।।**

धर्म अर्थ काम मोक्ष केही साधन् गरेन जो ।
जीवन ब्यर्थ हो, सार्थक् मोक्ष साधन मुख्य हो ।।

**धर्म, अर्थ, काम, मोक्ष यसमा जसले कुनै एक पनि प्राप्त गरेन त्यस मनुष्यको जन्म हुनुको फल मरण मात्र भयो ।।६।।**

विद्याको महिमा :

**कामधेनुगुणा विद्या ह्यकाले फलदायिनी ।**
**प्रवासे मातृसदृशी विद्या गुप्तधनं स्मृतम् ।।७।।**

कामधेनु र माताझैं जहीं होस् जहिले पनि ।
सत्-विद्या[१]ले फल दिन्छ, गोप्य धन त यै छ नि ।।

**विद्यामा कामधेनुको समान गुण छ, यसकारण अकालमा फल दिन्छ, विदेशमा माता समान छ त्यसैले विद्यालाई गुप्त धन भनिएको छ ।।७।।**

---

१. नहि विद्यासमो बन्धुः, न च व्याधिसमो रिपुः ।
न चाऽपत्यसमः स्नेहो, न च दैवात् परं बलम् ।। —(चाणक्यशतकम् )।।
विद्या ददाति विनयं विनयाद् याति पात्रताम् ।
पात्रत्वाद् धनमाप्नोति धनाद् धर्मस्ततः सुखम् ।। —(हितोपदेश) ।।
मातेव रक्षति पितेव हितं नियुंक्ते,
कान्तेव चाभिरमयत्यपनीय खेदम् ।
कीर्तिं तनोति वितनोति च दिक्षु लक्ष्मीं,
किं किं न साधयति कल्पलतेव विद्या ।। —(भोजप्रबन्ध ५)
न चौरहार्यं न च राजहार्यं, न भ्रातृभाज्यं न च भारकारि ।
व्यये कृते वर्द्धत एव नित्यं, विद्याधनं सर्वधन-प्रधानम् ।।—(नीतिशतकम्)।
**विद्या भै विनयादि छैन जसमा उल्टै अहंकार छ**
**विद्या पाइ विवाद गर्दछ भने, जान्नू उही हो खल ।**
**विद्या द्रव्य र शक्ति भै अरुमहाँ पीडा दिने गर्छ जो**
**जत्ती वैभव होस् परन्तु उसले कल्याण पाउन्न त्यो ।।**

## सन्ताप बढाउने कुराहरू :

**कुग्रामवासः कुलहीनसेवा**
**कुभोजनं क्रोधमुखी च भार्या ।**
**पुत्रश्च[१] मूर्खो विधवा च कन्या**
**विनाग्निना षट् प्रदहन्ति कायम् ॥८॥**

कुग्रामको वास र नीच सेवा, अशुद्ध खाना र रिसाहि भार्या ।
पट्मूर्ख छोरो विधवा छ पुत्री, आगोविना देह जलाउँछन् नि ॥
(कुग्रामको वास र नीच सेवा, कुभोजनादीहरू छाड्नु मिल्ला?
दुष्-पुत्र, 'पुत्री-विधवा' कुपत्नी, भए त प्राक्कर्म बुझ्नु नजाती ॥

**नराम्रो गाउँको बास, नीच कुलको सेवा, कुभोजन, झगडा गर्ने स्त्री, मूर्ख पुत्र, विधवा छोरी, यी छःले विना अग्निले नै शरीरलाई जलाउँछन् ॥८॥**

## गुणविहीन छोराको के काम ?

**किं तया क्रियते धेन्वा या न दोग्ध्री न गुर्विणी ।**
**कोऽर्थः पुत्रेण जातेन यो न विद्वान्न भक्तिमान् ॥९॥**

के होस् काम न ब्याउँछिन् अनि कहाँ दिन्छिन् र के दूध झन्?
त्यस्ती गाइ त पालना गरि कहाँ हुन्थ्यो र के लाभ कुन्?
तेस्तै पुत्र न भक्ति गर्छ हरिको विद्वान् पनी छैन जो
त्यस्तो पुत्र छ ब्यर्थ, किन्तु पछिको सन्तानको मात्र हो ॥
(बूढी गाई कसोरि ब्याउनु हरे ! के दूध दिन्छिन् बरा !
इच्छा गर्दछ को ? कुपुत्र, तर हा! हुन्छन् कुनै आबरा!।
पाल्नूपर्छ दया गरेर यहि हो निःस्वार्थ कर्तव्यता
सञ्चित् कर्म त भोग्नुपर्छ सबले यस्तै त हो बाध्यता !)॥

---

२. कुपुत्रे नास्ति विश्वासः कुभार्यायां कुतो रतिः ।
कुराज्ये निर्वृतिर्नास्ति, कुदेशे नास्ति जीविका ॥ —(सुभाषित सङ्ग्रह)॥

**त्यस गाईबाट के लाभ जसले न दूध दिन्छ म गर्भिणी हुन्छे र यस्तो पुत्र भएर के लाभ जो न विद्वान् भयो न भक्त भयो ॥ ९ ॥**

शान्ति दिने कुराहरू :

**संसार–तापदग्धानां त्रयो विश्रान्तिहेतवः ।**
**अपत्यं च कलत्रं च सतां सङ्गतिरेव च ॥१०॥**

भवाग्नि ताप जनका शान्तिका स्थान तीन छन् ।
पत्नी र पुत्र सत्सङ्ग साथै सद्भक्ति ज्ञान हुन् ॥
(अन्ततः मूल शान्ति हो प्रौढ वैराग्य राख्नु मन्)॥
(व्यभिचारिणी पत्नी र कुपुत्र र कुसङ्गत ।
भवाग्निका मूल ताप यीभन्दा अरू कुन् छ त?)॥

**संसारका तापले जलिरहेका पुरुषहरूको विश्रामको हेतु तीन छन्-पुत्र, स्त्री र सज्जनहरूको संगति ॥१०॥**

ताप दिने कुराहरू :

**सकृज्जल्पन्ति राजानः सकृज्जल्पन्ति पण्डिताः।**
**सकृत्कन्याः प्रदीयन्ते त्रीण्येतानि सकृत्सकृत् ॥११॥**

राष्ट्रेश, विज्ञ जनले बुझि एकपल्ट
बोल्छन् अकाट्य प्रिय सत्य कुरा चुनेर ।
एक्पल्ट कन्या दिनु[१] हो विधि शास्त्रमूल
छन् भेद क्यै वय रुची समयानुकूल ॥

---

१. विवाह विधि मात्र भै पति मरी, संभोग् विनाकी छँदी
नारी जो कि अछेद्य योनि, पतिको आसक्ति गर्दी हुँदी ।
यस्तीको त पुनर्विवाह गरने सङ्केत छन् शास्त्रमा
पाउन् सत्पति नै र 'हेय' नगरौं स्वेच्छा सुहृद् विज्ञमा !?।।
अनाचारी स्वामी मिलनु अति दुर्भाग्यवश हो,
सके शिक्षा गर्दै गरनु पति सेवा उचितको ।
अभक्षादी त्याग्नू जपनु 'शिव ॐ' भित्र मनमा
नहोऊ दिग्दारी विचलित नहौ सत्य-पथमा ।।

**राजाहरूले एकपल्ट मात्र आज्ञा दिन्छन्, विद्वान्हरू एकपल्ट मात्र बोल्दछन् । कन्याको दान एकपल्ट मात्र हुन्छ, यी तीनै कुरा एकपल्ट मात्र हुन्छन् ।।११।।**

के काम गर्दा कति जना साथी ?

**एकाकिना तपोद्वाभ्यां पठनं गायनं त्रिभिः ।**
**चतुर्भिर्गमनं क्षेत्रं पञ्चभिर्बहुभी[1] रणम् ।।१२।।**

तप् गर्नु एक्लै, दुई हुन् त पढ्दा
जत्ती हउन् खेति र गान गर्दा ।
हिंड्दा हउन् चार र युद्ध गर्दा-
धेरै हउन् साथि त चित्त मिल्दा ।।

**एक्लै तप गर्नू, दुई मिलेर पढ्नू, तीन मिली गाना गाउनु, चारजना मिलेर बाटो हिंड्नू, पाँच मिलेर खेती गर्नू र धेरैले युद्ध गर्दा राम्रोसँग हुन्छ ।।१२।।**

भार्या यस्ती हउन् :

**सा भार्या या शुचिर्दक्षा सा भार्या या पतिव्रता ।**
**सा भार्या या पतिप्रीता सा भार्या सत्यवादिनी[2] ।।१३।।**

शुद्धाचारी, पतिव्रता, प्यारी छ पतिको त जुन् ।
चतुरी सत्य बोल्ने छे; ती भार्या लक्ष्मी रूप हुन् ।।

१. पञ्चभिः सह गन्तव्यं, स्थातव्यं पञ्चभिः सह ।
पञ्चभिः सह वक्तव्यं, न दुःखं पञ्चभिः सह ।।—(सुभाषितरत्नभाण्डागारम्)
२. सा भार्या या प्रियं ब्रूते, स पुत्रो यत्र निर्वृतिः ।
तन्मित्रं यत्र विश्वासः, स देशो यत्र जीव्यते ।।—(सुभाषितरत्नभाण्डागारम्)।

***पतिव्रता नारीहरूको गरिमा***

सीता शैव्या च सावित्री गान्धारी दमयन्ती च ।
एते पञ्च स्मरेन्नित्यं महापातकनाशनम् ।।
**सम्झिदा जसको नाम महापातक नास्दछन् ।**
**ती नारीहरुमा हामी नित्य प्रणाम गर्दछौं ।।**

(सु-भार्या पाउनु आफ्नो पूर्वकै पुण्य कर्म हुन् ॥
सुपत्नी देवीको निम्ति प्रार्थना स्तुति मन्त्र छन्[१])॥

**त्यही पत्नी हो जो पवित्र चतुर छ, त्यही स्त्री हो जो पतिव्रता छ। त्यही पत्नी हो जसमा पतिको प्रीति छ, त्यही भार्या हो जो साँचो बोल्दछे, अर्थात् दान, मान, पालन, पोषणका योग्य छे ॥ १ ३ ॥**

के नभए के शून्य ?

**अपुत्रस्य गृहं शून्यं दिशोशून्यस्त्ववान्धवाः ।**
**मूर्खस्य हृदयं शून्यं सर्वशून्यं दरिद्रता ॥१४॥**

बन्धुहीन दिशा शून्य, घर सत्पुत्र हीनको ।
मूर्खको हृदय शून्य, दारिद्र्य सर्व शून्य हो ॥
(ज्ञन् मुख्य चित्तमा शून्य ब्रह्मज्ञान विहीन हो)॥

**अपुत्रको घर शून्य हुन्छ र बन्धु नहुनेको दिशा शून्य हुन्छ, मूर्खको हृदय शून्य हुन्छ, सबैभन्दा शून्य दरिद्रता हो ॥१४॥**

कसलाई केको विष ?

**अनभ्यासे विषं शास्त्रमजीर्णे भोजनं विषम् ।**
**दरिद्रस्य विषं गोष्ठी वृद्धस्य तरुणी विषम् ॥१५॥**

अभ्यास छाडे विषझैं छ शास्त्र
अजीर्णले भोजन हुन्छ वीष ।
दरिद्रलाई परिवार वीष
असक् बुढाको तरुणी छ वीष ॥

**बिना अभ्यासले विद्या विष हुन्छ, अजीर्णमा भोजन विष हुन्छ, दरिद्रहरूको सभा विष हुन्छ, र वृद्धहरूलाई युवती विषजत्तिकै हुन्छे ॥१५॥**

१. पत्नीं मनोरमां देहि मनोवृत्तानुसारिणीम् ।
तारिणीं दुर्गसंसारसागरस्य कुलोद्भवाम् ॥ —(अर्गलास्तोत्रम् २४) ।

## त्याज्य कुराहरू :

**त्यजेद् धर्मं दयाहीनं विद्याहीनं गुरुं त्यजेत् ।**
**त्यजेत्क्रोधमुखीं भार्यां निःस्नेहान्बान्धवांस्त्यजेत् ॥ १६ ॥**

छैनन् दया धर्म बुझेर त्याग्नु
सत्-ज्ञान्विनाको गुरुलाइ त्याग्नु[१]।
क्रोधी मुखाले छ त पत्नि त्याग्नु
निर्मायाका छन् त ती बन्धु त्याग्नु ॥

(कु-स्त्री परी त्याग्नु उपाय दुःखै, कुस्त्री परीयो त कुभाग्य आफ्नै।
स्त्री त्याग्नुभन्दा घर छाडि आफै, कोही हिँडेछन् हरि भज्छु भन्दै)॥

**दयारहित धर्मलाई छाड़िदिनु उचित छ, विद्याहीन गुरुलाई त्याग गर्नु उचित छ, जसका मुखबाट क्रोध प्रकट हुन्छ यस्ती स्त्रीलाई अलग गर्नु उचित छ र प्रीति नभएका बन्धुहरूको[१] त्याग गर्नु उचित छ ॥ १६ ॥**

---

१. गुरुर्न स स्यात् स्वजनो न स स्यात्, पिता न स स्याज्जननी न सा स्यात् ।
दैवं न तत्स्यान्न पतिश्च स स्यान्न मोचयेद्यः समुपेतमृत्युम् ॥
—(श्रीमद्भा. ५/५/१८)॥

बहवो गुरवः सन्ति शिष्यवित्तोपहारकाः ।
विरलाः गुरवः सन्ति शिष्यसंतापहारकाः ॥

**गुरु ति हैनन् न ति बान्धवै हुन्, न ती पिता हुन् जननी न ती हुन् ।**
**ती देव हैनन्, पति ती गनिन्नन् जो मुक्तिदायी उपदेश दिन्नन् ॥**
**पिता हिरण्यकशिपु त्यागे प्रह्लाद भक्तिले ।**
**शुक्राचार्य गुरुलाई त्यागे श्री बलि त्यागिले ॥**
**त्यागे भरतले माता कैकेयीलाइ नै पनि ।**
**रावणादि बन्धु त्यागे श्री विभीषणले पनि ।**
**धर्महीन पतिलाई त्याग्ने छन् धेर स्त्री पनि ॥**

१. राजा घृणी ब्राह्मणः सर्वभक्षी, स्त्री चाऽवशा दुष्टबुद्धिः सहायः ।
प्रेष्यः प्रतीपोऽधिकृतः प्रमादी, त्याज्या इमे यश्च कृतं न वेत्ति ॥
—(सुभाषितरत्न भाण्डागार)॥

जीर्ण हुने कारण :

**अध्वा जरा मनुष्याणां वाजिनं बन्धनं जरा ।**
**अमैथुनं जरा स्त्रीणां वस्त्राणामातपो जरा ।।१७।।**

मनुष्य धावा गरि दौडि राख्दा
घोडा बुढो बाँधिरहेर राख्दा ।
सङ्गम्‌विना शीघ्र बुढी स्त्री हुन्छिन्
(छिन् ब्रह्मचारीणि सशक्ति हुन्छिन् )
धेरै सुके वस्त्र त जीर्ण हुन्छन् ।।

**मनुष्यलाई बाटो बुढ़ौती हो, घोड़ालाई बाँधिराख्नु बुढ्याइँ हो, स्त्रीहरूलाई अमैथुन बुढ़ापा हो र कपड़ालाई घाम वृद्धता हो ।।१७।।**

चिन्तनीय कुराहरू :

**कः कालः कानि मित्राणि को देशः कौ व्ययागमौ ।**
**कस्याहं का च मे शक्तिरिति चिन्त्यं मुहूर्मुहूः ।।१८।।**

के गर्नुपर्छ कुन् बेला ? को मित्र[२] कुन देश हो ?
आय-व्यय? म कस्को हुँ? स्व-शक्ति नित्य सोच्नु यो।।

**कुन कालमा के गर्नुपर्छ, मित्र कुन हो, देश कुन हो, लाभ हानि के हो, कसको म हुँ, ममा के शक्ति छ, यी सबै विचार गर्नु योग्य छन् ।।१८।।**

समदर्शी बनौं :

**अग्निर्देवो द्विजातीनां मुनीनां हृदि दैवतम् ।**
**प्रतिमा स्वल्पबुद्धीनां सर्वत्र समदर्शिनः ।।१९।।**

२. मित्रं स्वच्छतया रिपुं नयबलैर, लुब्धं धनैरीश्वरम्
कार्येण द्विजमादरेण युवतिं, प्रेम्णाऽशनैर्बान्धिवान् ।
अत्युग्रं स्तुतिभिर्गुरुं प्रणतिभिः मूर्खं कथाभिर्बुधम्
विद्याभीः रसिकं रसेन सकलं, शीलेन कुर्याद् वशम् ।।

अग्नि देव द्विजातिको, अज्ञले प्रतिमादिमा
ब्रह्म देख्छन् समदर्शी मुनिले सर्व ठाउँमा ।।

**ब्राह्मण, क्षत्रिय, वैश्य यिनका देवता अग्नि हुन्, मुनिहरूका हृदयमा देवता बस्तछन्, अल्पबुद्धि भएकालाई मूर्तिहरूमा र समदर्शीहरूलाई सबै स्थानमा देवता बस्तछन् ॥ १९॥**

**(हुन त विविध शिक्षा लेखिएकै पनी छन्**
**कहिं कहिं परिभाषा थप्पिएका पनी छन् ।**
**सुपथिक सुदयालु विश्वमा हुन् विवेकी**
**हरबखत सबैमा शास्त्र यै गर्छ विन्ती)।।**

*।। इति चतुर्थोऽध्यायः समाप्तम् ।।*







# अथ पञ्चमोऽध्यायः

असल पति नै स्त्रीजातिका गुरु हुन् :

**पतिरेव गुरुः स्त्रीणां सर्वस्याभ्यागतो गुरुः ।**
**गुरुरग्निर्द्विजातीनां वर्णानां ब्राह्मणो गुरुः ॥१॥**

सत् पति गुरु हुन् स्त्रीका, अतिथि देव सर्वका ।
नित्य गुरु हुन् आचारी ब्रह्मज्ञ गुरु सर्वका ॥

**स्त्रीहरूका गुरु पति हुन्, अभ्यागत (अतिथि) सबैका गुरु हुन्, ब्राह्मण, क्षत्रिय, वैश्य यिनीहरूका गुरु अग्नि हुन् र चारै वर्णका गुरु ब्राह्मण हुन् ॥१॥**

मानव जाँच्ने चार विषय :

**यथा चतुर्भिः कनकं परीक्ष्यते,**
**निर्घर्षणच्छेदनतापताडनैः ।**
**यथा चतुर्भिः पुरुषः परीक्ष्यते,**
**त्यागेन शीलेन[1] गुणेन कर्मणा ॥२॥**

काटी, पोली, पिटी, कसी लाई जाँचिन्छ स्वर्ण त ।
दान, शील, गुण, आचारले जाँचिन्छ मानव ॥

**घोट्नु, काट्नु, तताउनु, पिट्नु यी चार प्रकारले जसरी सुवर्णको परीक्षा गरिन्छ त्यस्तै नै दान, शील, गुण र आचार यी चार प्रकारले पुरुषको पनि परीक्षा गरिन्छ ॥२॥**

---

१. जिता सभा वस्त्रवता, मिष्टाशा गोमता जिता ।
अध्वा जितो यानवता, सर्वं शीलवता जितम् ॥ —(नीति सङ्ग्रह) ॥
धने येन जितो गर्वो, यौवने मन्मथो जितः ।
तेन मानुषसिंहेन, जितं किं न महीतले ॥ —(पुरुषपरीक्षा ३०/५)।
**धनी भै गर्व गर्दैन, यौवन्मा काम जित्छ जो ।**
**उत्तम् पुरुष हो त्यस्ले संसार् जिते समान हो ॥**

नबिराउनु नडराउनु :

**तावद्भयाद्विभेतव्यं यावद् भयमनागतम् ।**
**आगतं तु भयं दृष्ट्वा प्रहर्त्तव्यमशङ्कया ।। ३ ।।**

भय न आउँदै मात्र डरनु, भय आइगो-
भने त भयको दूर गर्ने उपाय सोच्नु त्यो ।।

**भयदेखि तबसम्म डराउनुपर्छ जबसम्म भय आउँदैन र आएको भय देखिकन प्रहार गर्नु उचित छ ।। ३ ।।**

एउटै नक्षत्रमा जन्मेर मात्र समता हुँदैन :

**एकोदरसमुद्भूता एकनक्षत्रजातकाः ।**
**नाविदग्धः प्रियं ब्रूयात् स्पष्टवक्ता न वञ्चकः ।। ४ ।।**

यौटै नक्षत्र गर्भमा जन्मेर हुन्न एकता ।
जस्तै बयरका काँढा फलमा छैन एकता ।

**एउटै गर्भबाट उत्पन्न र एउटै नक्षत्रमा उत्पन्न भएकामा पनि शीलमा समानता हुँदैन, जस्तै बयरका काँढ़ा ।। ४ ।।**

शृङ्गार खोज्ने संयमी हुँदैन :

**निस्पृहो नाधिकारी स्यान्न कामी मण्डनप्रियः ।**
**नाविदग्धः प्रियं ब्रूयात् स्पष्टवक्ता न बञ्चकः ।। ५ ।।**

इच्छा छैन त काममा पनि अघी सर्दैन नै जान्नु यो
शृङ्गार् खोज्छ त संयमी कसरि होस् कामातुरै नै छ त्यो।
जान्दैनन् प्रिय बोल्नु ता यदि भने चातुर्यता छैन त्यो
बोल्छन् स्पष्ट भने छली पनि कुनै हुन्नन् कि झैं लाग्छ यो।।

**जसलाई कुनै विषयमा रूचि (इच्छा) छैन त्यो कुनै विषयको अधिकार लिंदैन, जो कामी छैन त्यो शरीरको शोभा गर्ने वस्तुहरूमा प्रीति राख्दैन र जो चतुरो छैन त्यो प्रिय बोली बोल्न सक्दैन र जसले स्पष्ट बोल्दछ त्यो छली हुँदैन ।। ५ ।।**

कसले कसलाई द्वेष गर्छन् ?

**मूर्खाणां पण्डिता द्वेष्या अधनानां महाधनाः ।**
**दुर्भगाणां च सुभगाः कुलटानां कुलाङ्गनाः ॥६॥**

विधवाले सधवाको[1] निर्धनीले धनाढ्यको ।
वेश्याले सुस्त्रीको द्वेष, मूर्खले बुद्धिमानको ॥
(अनाचारीले द्वेष गर्छन् सदाचारी सुमार्गिको)॥

**मूर्ख विद्वान्हरूदेखि, निर्धन धनीदेखि, व्यभिचारिणी कुलकी स्त्रीहरूदेखि र विधवा सौभ्याग्यवतीदेखि द्वेष मान्दछन् ॥६॥**

नाश हुने कारणहरू :

**आलस्योपहता विद्या परहस्ते गतं धनम् ।**
**अल्पबीजं हतं क्षेत्रं हतं सैन्यमनायकम् ॥७॥**

विना नायक सेनाको, धन अन्यत्र हातको ।
बीउ कम्ति भई खेती, विद्या नाशिन्छ अल्छिको ॥

**आलस्य गर्नाले विद्या, अर्काको हातमा जानाले धन, बीजको कमीले खेत, सेनापतिविनाका सेना नष्ट हुन्छन् ॥७॥**

केले केको नाश गर्न सकिन्छ ?

**दारिद्र्यनाशनं दानं शीलं दुर्गतिनाशनम् ।**
**अज्ञाननाशिनी प्रज्ञा भावना भयनाशिनी ॥८॥**

सुशीलताले दुर्गति, दारिद्र्य नाश दानले[2]।
अज्ञान नाश बुद्धिले, भय नाश सुभक्तिले ॥

---

१. **सधवाले त झन् घृणा गर्दछन् विधवा स्त्रीको ।**
**धनाढ्यले निर्धनीको, आचारीले कुकर्मीको ॥**
**वेश्यालाई अरू स्त्रीले हेर्दछन् हेयदृष्टिले ।**
**यस्तो गर्नु योग्य हैन हेर्नु सौहार्द्रभावले ॥**

२. अदत्त दानाच्च भवेद् दरिद्रो दरिद्रभावाच्च करोति पापम् ।
पापात् प्रभावान् नरके प्रयाति पुनर्दरिद्री पुनरेव पापी ॥
न दानतुल्यं धनमन्यदस्ति, न सत्यतुल्यं व्रतमन्यदस्ति ।
न शीलतुल्यं शुभमन्यदस्ति न क्षान्तितुल्यं हितमन्यदस्ति ॥-(चतुर्वर्गसंग्रह)

(दारिद्र्यमा दान गर्नु, यौवन्मा काम रोकनु ।
अज्ञान्मा सुमति झिक्नु धैर्य भै शिव सम्झनु)।।

**दारिद्र्य नाश गर्नको लागि दान, दुर्गति नाश गर्नको लागि शील, अज्ञानता नाश गर्नको लागि बुद्धि र भक्तिले भयको नाश गराउँछ ।।८।।**

लक्षणले थाहा पाउन सकिने :

**अभ्यासाद्धार्यते विद्या कुलं शीलेन धार्यते।**
**गुणेन ज्ञायते त्वार्यः कोपो नेत्रेण गम्यते ।।९।।**

आँखा देखेर रिसको, विद्या अभ्यासले गरी ।
मनुष्य गुणले, कुल जानिन्छ शीलले गरी ।।

**अभ्यास गरिरहनाले विद्या, सुशीलताले कुल, गुणले भलो र आँखाले कोपको ज्ञान हुन्छ ।।९।।**

केले केको रक्षा गर्ने ?

**वित्तेन रक्ष्यते धर्मो विद्या योगेन रक्ष्यते ।**
**मृदुना रक्ष्यते भूपः सत्स्त्रिया रक्ष्यते गृहम् ।।१०।।**

धनले धर्मको रक्षा[१], भूपको नम्रभावले ।
सत्-स्त्रीले घरको रक्षा, विद्या रक्षा त योगले ।।

**धनले धर्मको रक्षा गर्नु, यम नियम आदि योगले विद्याको रक्षा गर्नु, मृदुलताले राजा र सुशील स्त्रीले घरको रक्षा हुन्छ ।।१०।।**

१. सत्येन रक्ष्यते धर्मो, विद्या योगेन रक्ष्यते ।
मृजया रक्ष्यते रूपं, कुलं वृत्तेन रक्ष्यते ।। —(विदुरनीति ३४/३९) ।।
(मृजया=धन, माझनु, सफा गर्नु, सरलता, नम्रता ?)
द्वाविमौ पुरुषौ राजन् स्वर्गस्योपरि तिष्ठति।
प्रभुश्च क्षमया युक्ता दरिद्रश्च प्रदानवान् ।। —(विदुरनीति १/६३) ।।
*हे राजन् ! दुई प्रकारका व्यक्ति निश्चित रूपमा स्वर्गका समान सुख प्राप्त गर्दछन्, पहिलो व्यक्ति त्यो हो जो समर्थ एवं बलवान् भए पनि क्षमा गर्दछ र दोस्रो व्यक्ति त्यो हो जो निर्धन भएर पनि दान गर्दछ ।।*

यति विषयहरू वेवास्ता गरे नाशिन्छ :

**अन्यथा वेदपाण्डित्यं शास्त्रमाचारमन्यथा ।**
**अन्यथा यद्वदन् शान्तं लोकाः क्लिश्यन्ति चान्यथा ।। ११ ।।**

वेदार्थलाइ व्यर्थ र शास्त्राचार र शास्त्रको ।
शान्तात्मा पुरुष ब्यर्थ सम्झेमा दुःख भोग्छ त्यो ।।

**वेदका विद्वान्लाई बेकार भन्नेवाला, शास्त्र र आचारका विषय व्यर्थ मान्नेवाला, शान्त पुरुषलाई ग्वाँगे भन्ने यी जन व्यर्थमा क्लेश मात्र उठाउँदछन् ।।११।।**

यी समान अरू हुँदैनन् :

**नास्ति कामसमो व्याधिर्नास्ति मोहसमो रिपुः।**
**नास्ति कोपसमो वन्हिर्नास्ति ज्ञानात्परं सुखम् ।। १२।।**

कामासक्ति समान ता अरु कुनै छैनन् महारोग नै
छैनन् क्रोध समान अग्नि अरु ता अज्ञानझैं अन्ध नै ।
सत्य-ज्ञान समानको सुख कुनै संसारमैं छैन नै
तस्मात् क्रोध र काम जित्नु र लिनू शान्ती र सन्तोष नै।।

**कामको समान अर्को व्याधि छैन, अज्ञानको समान अर्को वैरी छैन, क्रोधको समान अर्को अग्नि छैन र ज्ञानको समान अर्को सुख पनि छैन ।।१२।।**

केमा कुन प्रिय ?

**नास्ति मेघसमं तोयं नास्ति चात्मसमं बलम् ।**
**नास्ति चक्षुसमं तेजो नास्ति चान्नसमं प्रियम् ।। १३।।**

जल उत्तम वर्षेको, बलमा आफनै प्रिय ।
इन्द्रियमा प्रिय आँखा, सबैमा अन्न नै प्रिय ।।

**मेघको जलको समान अर्को जल हुँदैन, आफ्नो आत्मबलको समान अर्काको बल हुँदैन, यसकारण कि आत्मबल समयमा**

**काम आउँछ । आँखाको समान अर्को प्रकाश गर्ने वस्तु छैन र अन्नको समान अर्को प्रिय पदार्थ छैन ॥१३॥**

एक्लै भोग्नुपर्ने कुराहरू :

**जन्म मृत्युं हि यात्येको भुनक्त्येकः शुभाऽशुभम् ।**
**नरकेषु पतत्येक एको याति परां गतिम् ॥१४॥**

एक्लै जन्मनु, मर्नु, नर्क परनु स्वर्गादि वा मोक्षको
एक्लै भोगनुपर्छ त्यो फल सबै यो निश्चयै बात हो।
आर्ज्यो जुन् रितले हओस् धनहरू भोग्छन् सबैले तर
भोग्दैनन् परिवारले त बुझि यो सत्कर्म मात्रै गर!!॥

**यो निश्चय छ कि जन एक्लै जन्म र मरण पाउँछ र सुख, दुःख एक्लै नै भोग्दछ, एक्लै नै नर्कमा पर्दछ र एक्लै नै मोक्ष प्राप्त गर्दछ अर्थात् यस कार्यमा कसैले कसैको सहायता गर्दैन॥१४॥**

कसले केमा आसक्ति राख्दैनन् ?

**तृणः ब्रह्मविदः स्वर्गस्तृणं शूरस्य जीवितम् ।**
**जिताक्षस्य तृणं नारी निस्पृहस्य तृणं जगत्[1]॥१५॥**

ब्रह्मज्ञानि त ब्रह्ममैं सुरत छन् स्वर्गादि के खोज्दछन्?
स्त्रीमा के मन गर्दथे र जसले कामेन्द्रियै जित्दछन्।
शूरा हुन् तिनि जीव नै पनि भने गर्दैन वास्ता कहीं
केवल् निस्पृह भै जगत् तृणसरी मान्छन् ति सन्तोष ली॥

**ब्रह्मज्ञानीलाई स्वर्ग तृण समान छ, शूरोलाई जीवन तृण समान छ, जसले इन्द्रियहरूलाई वशमा गरेको छ त्यसलाई स्त्री तृण समान बुझिन्छे र जो निस्पृह छ त्यसलाई सारा जगत् तृणतुल्य छ ॥१५॥**

१. उदारस्य तृणं वित्तं, शूरस्य मरणं तृणम् ।
विरक्तस्य तृणं भार्या, निःस्पृहस्य तृणं जगत् ॥
—(सुभाषितरत्नभाण्डागारम्) ॥

कस्को मित्र को ?

**विद्या मित्रं प्रवासेषु पत्नी मित्रं गृहेषु च ।**
**व्याधितस्यौषधं मित्रं धर्मो मित्रं मृतस्य च ॥१६॥**

रोगीको औषधी मित्र, नारी मित्र गृहस्थिको ।
परत्रमा धर्म मित्र, विद्या हो मित्र सर्वको ॥

**विदेशमा विद्या मित्र हुन्छ, घरमा स्त्री मित्र हुन्छे, रोगीको मित्र औषधि हुन्छ र मरेपछि धर्म मित्र हुन्छ ॥१५॥**

ब्यर्थ हुने कुराहरू :

**वृथा वृष्टिः समुद्रेषु वृथा तृप्तेषु भोजनम् ।**
**वृथा दानं धनाढ्येषु वृथा दीपो दिवापि च ॥१७॥**

अघाएमा वृथा भोजन्, ब्यर्थ वृष्टि समुद्रमा ।
धनीलाई दान दिनु, ब्यर्थ हो बत्ति दिन्महाँ ॥

**समुद्रमा वर्षा हुनु व्यर्थ हो र जो तृप्त भएको छ त्यसलाई मीठा-मीठा भोजन व्यर्थ छन्, धनीलाई दान दिनु व्यर्थ छ र दिनमा दियो बाल्नु व्यर्थ छ ।।१७।।**

के नभए के नाश हुन्छ ?

**अन्नहीनो दहेद्राष्ट्रं मन्त्रहीनाश्च ऋत्विजः ।**
**यजमानं दानहीनो नास्ति यज्ञसमो रिपुः ॥१८॥**

खाद्यान्नादि विहीन भो यदिभने भो दुःख त्यो राष्ट्रको
आचारादि र मन्त्रहीन यदि भो नाशिन्छ होता छ जो ।
यज्ञैका अनुसार दान नगरे कर्त्ता महादोषि भो
आचार-त्रुटि भो त पूर्णफल ता पाइन्न नै जान्नु यो ॥

**अन्नहीन यज्ञले राज्यलाई, मन्त्रहीन यज्ञले ऋत्विजलाई, दानहीन यज्ञले यजमानलाई डढाउँछ, त्यसकारण विधिहीन यज्ञसमान अर्को शत्रु छैन ॥१८॥**

सत्य हो सबमा ठूलो :

**सत्येन धार्यते पृथ्वी सत्येन तपते रविः ।**
**सत्येन वाति वायुश्च सर्वं सत्ये प्रतिष्ठितम् ॥१९॥**

सत्यले सूर्य प्रकाश, चल्दछन् वायु सत्यले ।
विश्व नै थाम्छिन् पृथ्वीले शक्ति पाइन्छ सत्यले ॥

**सत्यले नै पृथ्वी स्थिर छ, सत्यले नै सूर्य तपिरहेका छन्, सत्यले नै वायु बहन्छ र यो चराचर सारा जगत् सत्यमा नै स्थिर छ ॥१९॥**

धर्म मात्र निश्चल हो :

**चला लक्ष्मीश्चलाः प्राणाश्चले जीवितमन्दिरे ।**
**चलाऽचले च संसारे धर्म एको हि निश्चलः ॥२०॥**

लक्ष्मी, प्राण, घरहरू स्थिर छैनन् कुनै पनि ।
निश्चल धर्म मात्रै छ सम्झनु सत्य हो भनी ॥

**लक्ष्मी अनित्य छिन्, प्राण र घर यी सबै स्थिर छैनन् । यो निश्चय छ कि चराचर संसारमा धर्म मात्र निश्चल छ ॥२०॥**

कुन जातिमा कुन धूर्त :

**नराणां नापितो धूर्तः पक्षिणां चैव वायसः ।**
**चतुष्पदे शृगालस्तु स्त्रीणां धूर्ता च मालिनी ॥२१॥**

नरमा चतुरो नाऊ, पक्षीमा काग चङ्ख छ ।
स्त्रीमा क्वै मालिनी धूर्त, पशुमा स्याल चङ्ख छ ॥

**पुरुषहरूमा नापित (हजाम), पक्षीहरूमा काग चतुर हुन्छन् । पशुहरूमा स्याल चतुर हुन्छ र स्त्रीहरूमा मालिनी धूर्त हुन्छे ॥२१॥**

पञ्चपिता

**जनिता चोपनीता च यस्तु विद्यां प्रयच्छति ।**
**अन्नदाता भयत्राता पञ्चैते पितरः स्मृताः ॥२२॥**

जन्म दिने, अन्न दिने, विद्या सत्-ज्ञान दिन्छ जो।
रक्षा गर्ने भयबाट पिता हुन् भनि जान्नु यो ॥

**जन्माउने, संस्कार गरिदिने, विद्या पढ़ाउने, अन्न दिने र भयबाट जोगाउने यी पाँचलाई पिता भनिन्छ ॥२२॥**

पञ्चमाता

**राजपत्नी गुरोः पत्नी मित्रपत्नी तथैव च ।**
**पत्नीमाता स्वमाता च पञ्चैते मातरः स्मृताः ॥२३॥**

आफ्नी जन्म दिने माता, सासु र गुरुपत्नीजी ।
राजपत्नी, मित्रपत्नी माता मानिन्छ पाँच यी ॥

**राजाकी स्त्री, गुरुपत्नी त्यस्तै नै मित्रकी पत्नी, सासू र आफ्नी माता यी पाँचैलाई मात्त भनिन्छ ॥२३॥**

**(कुपथ सुपथ हेर्ने दर्पण-स्वच्छ नै छ,**
**कुमति सुमति आफ्नो के छ त्यो देखिने छ।**
**विमल हृदय; भित्री नेत्रले हेर्नुपर्छ**
**सुपथिक गुरुद्वारा तत्त्वको बोध हुन्छ )॥**

*॥ इति पञ्चमोऽध्यायः समाप्तम् ॥*





# अथ षष्ठोऽध्यायः

धेरै कुराहरू सुनेर नै बुझिन्छ :

**श्रुत्वा धर्मं विजानाति श्रुत्वा त्यजति दुर्मतिम् ।**
**श्रुत्वा ज्ञानमवाप्नोति श्रुत्वा मोक्षमवाप्नुयात् ।। १ ।।**

जानिन्छ सत्-शास्त्र सुनेर धर्म, सुनेर नै दुर्मति छोड्न सक्छ ।
सुनेर नै ज्ञान र मोक्ष मिल्छ, तत्त्वार्थ आफैं लिन सक्नुपर्छ ।।

**जुन मनुष्यले शास्त्रलाई सुनेर धर्मलाई जान्दछ, दुर्बुद्धिलाई छोड्दछ, त्यसले ज्ञान पाउँछ र मोक्ष पनि प्राप्त गर्दछ ।। १ ।।**

के-केले के-के शुद्ध हुन्छन्[1] ?

**भस्मना शुद्ध्यते कांस्यं ताम्रमम्लेन शुद्ध्यति ।**
**रजसा शुद्ध्यते नारी[2] नदी वेगेन शुद्ध्यति ।। २ ।।**

---

१. अद्‌भिर् गात्राणि शुद्ध्यन्ति, मनः सत्येन शुद्ध्यति ।
विद्या-तपोभ्यां भूतात्मा, बुद्धिर्ज्ञानेन शुद्ध्यति ।।—(मनुस्मृति ५/१०९)।।

२. गीताप्रेस, गोरखपुरबाट प्रकाशित स्वामी रामसुखदासकृत **आहार शुद्धि** नामक पुस्तिका पृ०सं०१७ मा, रजोवती स्त्रीका सम्बन्धमा यसप्रकारको नियम; परिभाषा लेखिएको छ: *स्त्रीजाति रजस्वला भएका तीन दिनभित्र अति अपवित्र भएका हुन्छन् । यसकारण उनीहरूसँग स्पर्श गर्नु (छोइनु) हुँदैन । रजोवतीसँग छोइँदैमा अपवित्र भइन्छ । रजस्वला स्त्रीको छायाँ सर्पमा पऱ्योभने सर्प अन्धो हुन्छ । तीनदिनभित्रकी रजस्वला स्त्रीले जलाशय छोएभने त्यो जलाशयमा विषैला (विषयुक्तका) कीटाणुहरू पैदा हुन्छन् (विशेषत: जल धेरै नबग्ने कुवा आदिमा) । कारण कि रजस्वला स्त्रीका रजबाट जहर-विष निस्कन्छ । जो सबैको लागि हानिकारक हुन्छ । रजस्वला भएका चार दिनमा सचैल स्नान गरेर पवित्र र सफा वस्त्रधारण गरेपछि शुद्ध हुन्छन् ।।*

**'रज-स्त्री' तीन दिन्भित्र हुन्छन् अति अशुद्ध नै ।**
**घृणा हैन संयमी भै हुन्छ कल्याण नारिकै ।।**
**'रज' हो फूल् फुलेका स्त्री शुद्ध हुन् भन्दछन् कुनै ।**
**लापर्बाही, बेवास्ताको दुष्फल भोगलान् उनै ।।**
**आमिषाशी छ ता बुद्धि हुन्छे मलिन वास्तव ।**
**सज्जन् सत्-शास्त्रको वाक्य मान्छे संशय प्रायशः ।।**

कांसो शुद्ध खरानि दल्नु, अमिलो दल्नू छ है ताम्रमा,
भेल् बाढी गइ शुद्ध हुन्छ नदी औ भन्दैछु स्त्रीजातिमा-
कन्यामा र रजोवती भइ पछी स्नान् गर्नु चारौं दिन
हुन्छन् स्त्रीहरू शुद्ध शास्त्ररित हो यो जान्नु नारीजन ! ॥

**काँसको भाँड़ो खरानीले, तामाको भाँड़ो अमिलोले, स्त्री रजस्वला भएपछि र नदी धाराका वेगले, (बगिरहनाले) पवित्र हुन्छन् ॥ २॥**

भ्रमण गर्न योग्यायोग्य व्यक्ति :

**भ्रमन् सम्पूज्यते राजा भ्रमन् सम्पूज्यते द्विजः।**
**भ्रमन् सम्पूज्यते योगी स्त्री भ्रमन्ति विनश्यन्ति ॥ ३॥**

राष्ट्राध्यक्ष, द्विज, योगी घुमेर मिल्छ आदर ।
संयमी नभई ब्यर्थै घुम्ने स्त्री भ्रष्टको डर ॥

**भ्रमण गर्नाले राजा, ब्राह्मण, योगी पूजित हुन्छन् तर स्त्री घुम्नाले नष्ट हुन्छन् ॥ ३॥**

धन[१] कस्तो छ ?

**यस्यार्थास्तस्य मित्राणि यस्यार्थास्तस्य बान्धवाः।**
**यस्यार्थाः स पुमाँल्लोके यस्यार्थाः स च पण्डितः॥ ४॥**

धन भए मित्र बन्धु मनुष्य गन्यमान्य भो ।
गनिन्छ पण्डितमा नै धन यो छ विचित्रको ॥
(धन ठूलो भनी झुट्टा काम् गरे नर्क पर्छ त्यो)॥

**जसका साथमा धन छ त्यसैका मित्र, बान्धव हुन्छन् र त्यसलाई पुरुष भनिन्छ र त्यसैलाई नै पण्डित पनि भनिन्छ ॥ ४॥**

---

१. माता निन्दति नाभिनन्दति, पिता भ्राता न सम्भाषते
भृत्यः कुप्यति नानुगच्छति सुतः कान्ता च नाऽऽलिङ्गते ।
अर्थ-प्रार्थन-शङ्कया न कुरुते सम्भाषणं वै सुहृत्
तस्माद् द्रव्यमुपाजर्यस्व सुमते द्रव्येण सर्वे वशाः ॥
—(सुभाषितरत्नभाण्डागार) ।
यथा तरुण्यः पतिमाश्रयन्ति, सर्वे गुणाः काञ्चनमाश्रयन्ति ॥
—(समयोचित पद्यमालिका) ।

प्रारब्धअनुसारकै पाइने :

**तादृशी जायते बुद्धिर्व्यवसायोऽपि तादृशः।**
**सहायास्तादृशाश्चैव यादृशी भवितव्यता ।।५।।**

जस्तो हुनु छ आफूमा उस्तै बुद्धि उपाय र ।
उस्तै मद्‌दत पाइन्छन्, भर ईश्वरकै पर ।।

**त्यस्तो नै बुद्धि र त्यस्तो नै कामधन्धा हुन्छ र त्यस्तै सहायक मिल्दछन् जस्तो हुनेहार (भवितव्यता) छ ।।५।।**

काल अकाट्य छ :

**कालः पचति भूतानि कालः संहरते प्रजाः ।**
**कालः सुप्तेषु जागर्ति कालो हि दुरतिक्रमः ।।६।।**

सबै प्राणीहरू खान्छ, कालले यो जगत्‌भरि ।
मार्न सकिन्न यो काल, सम्झनु छ सधैं हरि ।।

**कालले सबै प्राणीहरूलाई पचाउँछ र कालले नै सबै प्राणीहरूको नाश गर्दछ, सबै पदार्थ लय भएपछि काल जाग्दछ, काललाई कसैले पनि नाघ्न सक्तैनन् ।।६।।**

कस्ता व्यक्तिहरू अन्धा हुन्?

**न पश्यति च जन्मान्धः कामान्धो नैव पश्यति ।**
**न पश्यति मदोन्मत्तो ह्यर्थी दोषान्न पश्यति ।।७।।**

मदोन्मत्त र कामान्ध, द्रव्यान्ध जन्मअन्धझैं ।
अन्ध हुन् तर जन्मान्ध अन्याय गरदैन क्यै ।।
(बाली, रावण[२], किचक, पाण्डु कामान्ध भैकन।
पूर्ण भो न त भोगेच्छा, गुमाए व्यर्थ जीवन ।।

---

२. जानकीं रावणो नाऽहरिष्यद् यदि, राघवो रावणं नाऽहनिष्यत् तदा ।
कर्म निन्द्यं नरो नाऽचरिष्यद् यदि, भूतलं सङ्कटे नाऽपतिष्यत्तदा ।।
—(संस्कृत पद्य सङ्ग्रह) ।

स्वर्गेशको गर्व साथै परस्त्रीमा दिई मन ।
कामान्धले नै 'नहुष' पऱ्यो अजिङ्गरै हुन ) ॥

**जन्मै अन्धाले देख्दैनन्, कामले जो अन्धा भैरहेका छन् तिनलाई केही देखिंदैन, मदोन्मत्तले कसैलाई देख्दैनन्, अर्थीले दोषलाई देख्दैन ॥७॥**

आफ्नो कर्म आफैंले भोग्नुपर्छ :

**स्वयं कर्म करोत्यात्मा स्वयं तत्फलमश्नुते ।**
**स्वयं भ्रमति संसारे स्वयं तस्माद् विमुच्यते ॥८॥**

आफैं गर्दछ कर्म त्यो फल पनी आफैं स्वयं भोग्दछ
आफैं घुम्छ भवाब्धिमा शुभ कि वा दुष्कर्म के गर्दछ?।
*आफैं मुक्त भइन्छ इन्द्रियहरू सत् कर्ममा लाउँछ !*
रोक्नूपर्दछ चित्त दुष्-विषयमा जस्को त सद्बुद्धि छ ॥

**जीवले स्वयं कर्म गर्दछ र त्यसको फल स्वयं नै भोग्दछ, आफू स्वयं नै संसारमा घुम्दछ र आफै नै त्यसबाट मुक्त हुन्छ ॥८॥**

अरूबाटको पाप पनि भोग्नुपर्ने हुन्छ :

**राजा राष्ट्रकृतं पापं राज्ञः पापं पुरोहितः ।**
**भर्त्ता च स्त्रीकृतं पापं शिष्यपापं गुरुस्तथा ॥९॥**

आफ्ना राज्यभरी छ पाप नृपले भोग्नू पऱ्यो पाप त्यो
राजाबाट भए पुरोहितजिले, आचार्यले शिष्यको ।
स्त्रीको पाप त भोग्नु लौ पुरुषले पर्ने भनी वाक्य छ
('कर्ता मात्र छ पाप भागि कलिमा भन्ने पनी शास्त्र छ')॥
संसर्गी अथवा अजानहरुमा लाग्ला कि क्यै पाप त?
यौटाको त्रुटि भो त दुःख अरुमा पर्नै पनी सक्दछ ॥

**आफ्ना राज्यका प्रजाले गरेको पापलाई राजाले, राजाले गरेको पापलाई पुरोहितले भोग्दछन् । स्त्रीले गरेको पापलाई स्वामीले**

**भोग्दछ, त्यस्तै नै शिष्यले गरेको पाप गुरुले भोग्नुपर्दछ ॥९॥**

कस्ता व्यक्ति छिटै नाश हुन्छन् ?

**दुराचारी दुरादृष्टिर्दुरावासी च दुर्जनः ।**
**यन्मैत्री क्रियते पुंसां स तु शीघ्रं विनश्यति[1] ॥१०॥**

दुराचारी, दुष्टदृष्टि, बस्छ दुर्जन ठाउँमा ।
यस्ता दुर्जनमा मैत्री गर्छ ता पर्छ शोकमा ॥

**जसको आचरण खराब छ, जसको दृष्टि पापमा रहन्छ, जो नराम्रो स्थानमा बस्नेवाला र जो दुर्जन छ, यिनीहरूसँग मित्रता जो गर्दछन् ती चाँडै नष्ट हुन्छन् ॥१०॥**

कस्तालाई कसरी खुशी पार्ने ?

**लुब्धमर्थेन गृह्णीयात् स्तब्धानञ्जलिकर्मणा ।**
**मूर्खं छन्दानुवृत्या च यथार्थत्वेन पण्डितम् ॥११॥**

जे जे भन्दछ मूर्खले विनयि भै थाम्नू सही हो भनी
राख्नू पर्दछ होश मूर्ख जनमा चातुर्यताको बनी ।
लोभीलाई धनै, अहम्-मति छ जो ठूला तिमी हौ भनी
विद्वान्का सँग सत्य बोल्नु र खुसी पार्ने कुरा यै छ नि ॥

**लोभीलाई धनले, अहंकारीलाई हात जोड़ेर, मूर्खलाई उसले भनेअनुसार गरेर र पण्डितलाई सच्चाइले वश गर्नुपर्छ ॥११॥**

कुजन हुनुभन्दा नहुनु नै वेश:

**वरं न राज्यं न कुराजराज्यं**
**वरं न मित्रं न कुमित्रमित्रम् ।**
**वरं न शिष्यो न कुशिष्यशिष्यो**
**वरं न दारा न कुदारदारा ॥१३॥**

राम्रो राज्य हवोस् कुराज्य नहओस् दुर्मित्रभन्दा बरू
मित्रै नै नहउन् र शिष्य नहउन् दुष्टशिष्यभन्दा बरू ।

---

१. यो "दुराचारी...विनश्यति" श्लोक अ.२, श्लोक १९ बाट यहाँ ल्याइएको हो।

भार्या नै नहुनू छ वेश यदि जो दुष्-स्त्री भई दुःख झन्
'राम्रा हुन् यि कुरा परन्तु सहनू पर्छन् ति जे-जे परुन्' ॥

**राज्य नरहनु बरू यही राम्रो हुन्छ, कुराजाको राज्य होइन; मित्र नहुनु राम्रो छ, परन्तु कुमित्र हुनु राम्रो हुँदैन; शिष्य नहुनु बेस, परन्तु कुशिष्य हुनु राम्रो हुँदैन; स्त्री नभएको राम्रो छ, तर कुभार्या हुनु राम्रो हुँदैन ॥१३॥**

कुजनबाट कुनै लाभ छैन :

**कुराज्यराज्येन कुतः प्रजासुखं**
**कुमित्रमित्रेण कुतोऽभिनिर्वृतिः ।**
**कुदारदारैश्च कुतो गृहे रतिः**
**[1]कुशिष्यमध्यापयतः कुतो यशः ॥१३॥**

कुराज्यले के सुख होस् प्रजामा?
कुमित्रले के सुख होस् र काहाँ ? ।
दुष्-स्त्री छ ता प्रीति कसोरि हुन्छ ?
कुशिष्यले के गरि कीर्ति चल्छ? ॥

**दुष्ट राजाबाट प्रजालाई सुख कसरी हुन सक्छ? कुमित्रसँग आनन्द कसरी हुन सक्छ? दुष्ट स्त्रीले घरमा प्रीति कसरी हुन्छ र कुशिष्यलाई पढाउनाले कीर्ति कसरी हुन्छ ? ॥१३॥**

---

१. **शिष्य कस्तो हुनुपर्छ ?** (शिष्यको लक्षण):
शान्त, विनम्र, शुद्ध (कपट नभएको), गुरुमा श्रद्धा गर्ने, गुरुले बताएको कुरा सम्झिराख्ने, विद्या लिन सक्ने, निष्कलङ्क सदाचारी, विवेकी, बुद्धिमान्, सच्चरित्र, सद्‌व्रती आदि गुण भएको हुनुपर्दछ, यस्ता सद्‌गुणहरू नभएको कुशिष्य मानिन्छ ।

शान्तो विनीतः शुद्धात्मा श्रद्धावान् धारणक्षमः ।
समर्थश्च कुलीनश्च प्राज्ञः सच्चरितो व्रती ।
एवमादिगुणैर्युक्तः शिष्यो भवतु नान्यथा ॥ —(दीक्षाप्रकाश)॥

के-केबाट कति-कति गुण सिक्ने ?

**सिंहादेकं बकादेकं[१] शिक्षेच्चत्वारि कुक्कुटात् ।**
**वायसात् पञ्चशिक्षेच्च षट्शूनस्त्रीणि गर्दभात् ॥१४॥**

सिक्नू एक् गुण सिंहबाट, सिकनू-एक् गुण् बकुल्लासँग,
कुखाबाट त चार सिक्नु गुण लौ कागबाट ता पाँच् गुण।
सिक्नू कूकुरबाट 'षट्' गुणहरू तीन् गुण् गधाबाट भो,
जम्मा बीस् गुण भो विभिन्न तहका प्रत्येकका भन्छु त्यो॥

**सिंहबाट एक, बकुल्लाबाट एक र कुखुराबाट चार कुरा सिक्नुपर्छ, कागबाट पाँच, कुकुरबाट छः, र गदहाबाट तीन गुण सिक्नु उचित छ ॥१५॥**

सिंहबाट :

**प्रभूतं कार्यमल्पं वा यन्नरः कर्तुमिच्छति ।**
**सर्वारम्भेण तत्कार्यं सिंहादेकं प्रचक्षते ॥१५॥**

सानो होस् वा ठूलो होस् या काम गर्दा प्रयत्नले।
गर्नुपर्दछ यो सिक्नु सिंहबाट मनुष्यले ॥
(अगाडि पाइला सार्दै पछाडि पनि हेरनु ।
'सिंहावलोकन-न्याय' यो पनि गुण सम्झनु ) ॥

**कार्य सानो होस् या ठूलो जो गर्न लायक छ त्यसलाई एक प्रकारले प्रयत्न गरेर गर्नु उचित छ, यसलाई सिंहबाट सिक्नुपर्छ ॥१५॥**

बकुल्लाबाट :

**इन्द्रियाणि च संयम्य बकवत्पण्डितो वरः ।**
**देशं कालं बलं ज्ञात्वा सर्वकार्याणि साधयेत् ॥१६॥**

खिच्नू इन्द्रिय र देश काल बल विचारले ।
बकुल्लाले सरी काम सिद्ध गर्नु छ विज्ञले ॥

१. शुकवद् भाषणं कुर्याद्, बकवद् ध्यानमाचरेत् ।
अजवच्चर्वणं कुर्याद्, गजवत् स्नानमाचरेत् ॥ —(समयोचितपद्यमालिका)॥

**विद्वान् पुरुषले यो गरुन् कि इन्द्रियसंयम गरेर देश, काल र बल सम्झिएर समान सबै कर्म गरुन् यो एउटा गुण बकुल्लासँग सिक्नुपर्छ ॥ १७ ॥**

कुखुराबाट :

**प्रत्युत्थानं च युद्धे च सविभागं सबन्धुषु ।**
**स्वयमाक्रम्य भोगं च शिक्षेच्चत्वारि कुक्कुटात् ॥ १७ ॥**

जाग्नू यथासमयमा रणमा तयारी
भै, बन्धुलाइ दिनु खान र सर्वलाई ।
जित्नू र खानु कुखुरासँगबाट चार
सिक्नू छ यी गुणहरू मनमा विचार ॥

**उचित समयमा उठनु, रणमा उद्यत रहनु र बन्धुहरूलाई भाग दिनु र स्वयं आक्रमण गरेर भोजन गर्नु-यी चार कुरा कुखुराबाट सिक्नुपर्छ ॥ १७ ॥**

कागबाट :

**गूढं मैथुनचारित्वं काले काले च सङ्ग्रहम् ।**
**अप्रमत्तमविश्वासं पञ्च शिक्षेच्च वायसात् ॥ १८ ॥**

बस्नू हुन्न नि मत्त भै, नगरनू विश्वास कैल्यै कतै,
गर्नू मैथुन ता लुकी, चिजहरू खोज्नू यथाकालमैं।
बस्नूपर्दछ सावधान रितले सर्वत्र चेष्टा दिंदै
सिक्नू यी गुण पाँच कागसँगका मौका बुझी सम्झँदै॥

**लुकेर मैथुन गर्नु, समय समयमा संग्रह गर्नु, सदा सावधान भएर रहनु र कसैमा विश्वास नगर्नु-यी पाँच गुण कागसँग सिक्नु उचित छ ॥ १८ ॥**

कुकुरबाट :

**बह्वाशीः स्वल्पसन्तुष्टः सुनिद्रो लघुचेतनः ।**
**स्वामिभक्तश्च शूरश्च षडेतेश्वानतो गुणाः ॥ १९ ॥**

धेरै नै खान सक्ने, जति त कमि हओस्
सोहि सन्तोष गर्ने
जस्तै निद्रा हओस् लौ झटपट बिउँझी
स्वामिको भक्ति गर्ने ।
शूर्याइँ धेर गर्ने, मरण डर न ली
छः गुणै कुक्कुरैका
'सोच्नोस् निर्दोषिलाई पनि त भय दिने
बानि छन् दुष्ट यस्का' ।।

**धेरै नखाने शक्ति हुनु, थोरैले सन्तुष्ट हुनु, गहिरो निद्रामा रहनु, झटपट जागृत हुनु, मालिकको भक्ति र शूरोपन-यी छः गुण कुकुरबाट सिक्नु ।।२०।।**

गधाबाट :

**सुश्रान्तोऽपि बहेद्भारं शीतोष्णं न च पश्यति ।**
**सन्तुष्टश्चरते नित्यं त्रीणि शिक्षेच्च गर्दभात् ।।२०।।**

भारी बोक्न नथाक्छ त्यो जति सुकै थाकीरहे तापनि
जाडो होस् कि त गर्मि होस् सहि दिने निर्चेत जस्तो बनी ।
सन्तोषी भइ डूलने गुणहरू सिक्नू गधाबाट त
तीनोटा गुण हुन् कठिन् छ बुझँदा सोच्नोस् त यो काम त ।।

**धेरै थकाई लागे पनि बोझा (भारी) बोकिरहनु, जाडो र गर्मीमा दृष्टि नदिनु, सधैं सन्तुष्ट भएर हिंड्नु यी तीन गुणहरू गधासँग सिक्नु उचित छ ।।२०।।**

**य एतान् विंशति गुणानाचरिष्यति मानवः ।**
**कार्यावस्थासु सर्वासु अजेयः स भविष्यति ।।२१।।**

जो मनुष्य बीस गुण लिएर कार्य गर्दछ ।
होला त्यो विजयी, तस्मात् नीतिज्ञ हुनुपर्दछ ।।

जुन मनुष्यले यी माथि भनिएका बीस गुणहरूलाई धारण गर्छ, त्यो सदा सबै कार्यहरूमा विजयी हुनेछ ॥२१॥

(हुन त अधिक नै छन् जान्नुपर्ने कुरा त
तर पनि बीस मात्रै अर्ति छन् है यहाँ त ।
विषय त व्यवहारी छन् कुनै पारमार्थी
चुनि चुनि लिनुहोला भित्र छन् ज्ञान भक्ति) ॥

*॥ इति षष्ठोऽध्यायः समाप्तम् ॥*







# अथ सप्तमोऽध्यायः

कुन-कुन कुरा प्रकाश गर्न योग्य हुँदैन ?

**अर्थनाशं मनस्तापं गृहिणीचरितानि च ।**
**नीचवाक्यं मनस्तापं मतिमान्न प्रकाशयेत् ॥१॥**

आफ्नी स्त्रीको चरित्र स्तुति त्रुटि जति होस्
द्रव्यको नाशलाई
आफूलाई गरे क्वै यदि कहिं अपमान्,
नीचको वाक्यलाई ।
धेरै छन् ताप गर्ने, तर सब 'मन' हो
तापमा मूल भाइ
कैल्यै नै बुद्धिमान्‌ले अरुसित नभनून्
पाँच यी तापलाई ॥

**धनको नाश, मनको ताप, घरको चरित्र, नीचको वचन र अपमान यसलाई बुद्धिमान् मनुष्यले प्रकाश नगर्नु ॥१॥**

कुन-कुन कुरामा लाज मान्नु हुँदैन ?

**धनधान्य-प्रयोगेषु विद्यासङ्ग्रहणेषु च ।**
**आहारे व्यवहारे च त्यक्तलज्जाः सुखी भवेत् ॥२॥**

व्यापार गर्दा धन अन्न सर्व
सत्-शास्त्रको सङ्ग्रह-काल पर्व ।
आहार गर्दा व्यवहार गर्दा
मान्दैन लज्जा सुख सोहि भोग्ला ॥

**अन्न र धनका व्यवहारमा, विद्या संग्रह गर्नमा, आहार र व्यवहारमा लज्जालाई त्याग गर्ने पुरुष नै सुखी रहन्छ ॥२॥**

## सन्तोष नै परम सुख हो :

**सन्तोषामृततृप्तानां यत्सुखं शान्तचेतसाम्[१]।**
**न च तद्धनलुब्धानामितश्चेतश्च धावताम् ॥३॥**

जो छन् सन्तोषरूपि अमृत पिउँदछन्
चित्त जस्को छ शान्त
ब्रह्मानन्दी महात्मा सुखि जन उहि हो
बास जहाँ गरुन् त।
आसक्ती, मोह, लोभी हरचिजहरुमा
मुग्ध जस्को छ चित्त
जत्ती सम्पत्ति होओस् तर पनि उ सुखी
हुन्न है ज्ञान् नभै त ॥

**सन्तोषरूपी अमृतले तृप्त रहने, शान्तचित्त भएकालाई जो सुख छ, त्यो सुख धनका लोभले चारैतिर दौडिरहनेलाई हुन सक्तैन ॥३॥**

## केमा सन्तोष, केमा असन्तोष लिने ?

**सन्तोषस्त्रिषु कर्त्तव्यः स्वदारे भोजने धने ।**
**त्रिषु चैव न कर्त्तव्योऽध्ययने जपदानयोः ॥४॥**

सन्तोष लिनु आफ्नी स्त्री[१], भोजन र धनादिमा ।
पढ्नु, जप्नु, दान दिनु गर्छु म भन्नु चित्तमा ॥

**आफ्नी स्त्री, भोजन र धन, यी तीनमा सन्तोष गर्नुपर्छ । पढ्नु, जप गर्नु र दान गर्नमा सन्तोष कहिल्यै नगर्नू ॥४॥**

## केकेका माझबाट हिंड्नु हुँदैन ?

**विप्रयोर्विप्रवह्न्योश्च दम्पत्योः स्वामिभृत्ययोः।**
**अन्तरेण न गन्तव्यं हलस्य वृषभस्य च ॥५॥**

---

१. यो धर्मशीलो जितमानरोषो, विद्याविनीतो न परोपतापी ।
स्वदारतुष्टः परदारवर्जितो, न तस्य लोके भयमस्ति किञ्चित् ॥—(पद्मपुराण)

विप्र, मान्यजन, अग्नि, दम्पति, स्वामि, नोकर ।
हल्गोरु नाघि वा माझबाट नहिंडने गर[१] ॥

**ब्राह्मणका माझबाट, ब्राह्मण र अग्निका माझबाट, स्त्री पुरुषका माझबाट, मालिक र नोकरका माझबाट र हलो र गोरुका माझबाट कहिल्यै नहिंड्नु ॥५॥**

क-कसलाई अनादर गर्नु हुँदैन ?

**पादाभ्यां न स्पृशेदग्निं गुरु ब्राह्मणमेव च ।**
**नैव गां न कुमारीं च न वृद्धं न शिशुं तथा ॥६॥**

विप्र, गाई, गुरु, अग्नि[२], कन्या, वृद्ध र बालक ।
गोडाले न छुनू कैल्यै, गर्नु हुन्न अनादर ॥

**अग्नि, गुरु र ब्राह्मणलाई खुट्टाले कहिल्यै नछुनू, त्यस्तै नै गाईलाई, कुमारीलाई, वृद्ध र बालकलाई पनि खुट्टाले नछुनू ॥६॥**

केबाट कति टाढा हुनुपर्दछ ?

**शकटं पञ्चहस्तेन दशहस्तेन वाजिनम् ।**
**हस्ती हस्तसहस्रेण देशत्यागेन दुर्जनम् ॥७॥**

पाँच् हात बग्गी दश हात घोडा
हात्ती हजार् हात् गइ बस्नु टाढा ।
त्याग्नू छ दुर्जन्हरुबाट देश
गर्नू छ है होश् सबबाट वेश ॥

**गाड़ीलाई पाँच हातमा, घोड़ालाई दस हातमा, हात्तीलाई हजार हातमा र दुर्जनलाई देशै त्यागेर छोड़िदिनु ॥७॥**

---

१. होमकाले तथा दोहे स्वाध्याये दारसङ्ग्रहे ।
द्वौ विप्रौ ब्राह्मणाग्नी वा दम्पती गोद्विजोत्तमौ ।
अन्तरेण यदा गच्छेत् द्विजश्चान्द्रायणं चरेत् ॥

२. पाउले आगो नछुनु भन्नाको तात्पर्य आगोमा पाउ नसेकाउनु भन्ने हो ॥

केलाई केले वश गर्नु ?

**हस्ती अंकुशमात्रेण वाजी हस्तेन ताड्यते ।**
**शृङ्गी लगुडहस्तेन खड्गहस्तेन दुर्जनः ॥८॥**

लठ्ठीले सिङ् हुनेलाई, हात्ती अङ्कुश ताडन ।
घोडा ता हातले दण्ड, वाक्-शस्त्रले त दुर्जन[१] ॥
रुखो बोली गरी हैन जान्नु फुरुक्क पारन ॥

**हात्तीलाई अंकुश मात्रले पिटिन्छ, घोड़ालाई चाबुकले पिटिन्छ, सिंह भएका जन्तुलाई लौरोयुक्त हातले र दुर्जनलाई तरवारयुक्त हातले दण्ड दिन्छन् ॥८॥**

को केबाट खुशी हुन्छन् ?

**तुष्यन्ति भोजने विप्रा[२] मयूरा घनगर्जिते ।**
**साधवः परसम्पत्तौ खलाः परविपत्तिषु ॥९॥**

सबै हुन्छन् खुसी खाई, मयूर मेघ गर्जदा ।
अर्काको सुखमा साधु, दुष्ट पर विपत्तिमा ॥

**भोजनका समयमा ब्राह्मण र मेघ गर्जनाले मयूर आनन्द पाउँछन् । अर्कालाई सम्पत्ति प्राप्त हुँदा साधु प्रसन्न हुन्छन् र अर्काको विपत्तिका समयमा दुर्जन सन्तुष्ट हुन्छन् ॥९॥**

कोसँग कसरी व्यवहार गर्ने ?

**अनुलोमेन बलिनं प्रतिलोमेन दुर्बलम् ।**
**आत्मतुल्यबलं शत्रुं विनयेन बलेन वा ॥१०॥**

वैरी छन् बलवान् भने मिलिजुली, आफूसरीको भए-
नम्रै भैकन वा जितोस् कि बलले, यो जान्नु दुर्जन् भए ।

१. स्पृशन्नपि गजो हन्ति, जिघ्रन्नपि भुजङ्गमः।
हसन्नपि नृपो हन्ति, मानयन्नपि दुर्जनः ॥ —(हितोपदेश ४/१५) ॥

२. **विप्र सेवा प्राथमिक भन्ने तात्पर्य बुझ्नु यो ।**
**खानामा छन् सबै खुसी सर्व स्वसिद्ध नै छ यो ॥**

उल्टा अर्ति कि व्यङ्ग्य-हास्यरितले फुर्क्याउनू जुक्तिले
क्रोधी पारनु हुन्न शान्तपनले सोच्नोस सद्बुद्धिले[१]।।

**वैरीलाई उसका अनुकूल व्यवहार गर्नाले, यदि त्यो दुर्बल भए त्यसलाई प्रतिकूलले वश गर्नू । बलमा आफ्नू बराबरीको शत्रुलाई विनय अथवा बलले जित्नू ।।१०।।**

कसको के बल ?

**बाहुवीर्यबलं राज्ञो ब्राह्मणो ब्रह्मविद्बली ।**
**रूपयौवनमाधुर्यं स्त्रीणां बलमनूत्तमम् ।।११।।**

राजा[२]को बल वीर्य बाहु बल हो[३], ब्रह्मज्ञ विप्रादिका
स्त्रीको सुन्दर, नम्रता, तरुणता, आचार, माधुर्यता।
सत्याचार सदा लिनू छ सबले यै जान्नु ठूलो बल
सत्याचारविहीन साधनहरू हुन्छन् सबै निष्फल ।।

**राजालाई बाहुवीर्य बल हुन्छ, ब्राह्मण ब्रह्मज्ञानी र वेदपाठी बली हुन्छ, स्त्रीको सुन्दरता, तरुणता र मधुरता यो उत्तम बल हुन्छ ।।११।।**

सोझोपनको सीमा ?

**नात्यन्तं सरलैर्भाव्यं गत्वा पश्य वनस्थलीम् ।**
**छिद्यन्ते सरलास्तत्र कुब्जास्तिष्ठन्ति पादपाः ।।१२।।**

---

१. यस्मिन् यथा वर्तते यो मनुष्यः, तस्मिन् तथा वर्तितव्यं स धर्मः ।
मायाचारो मायया वारणीयः, साध्वाचारः साधुना प्रत्युपेयः ।।
—(महाभारत उद्योगपर्व) ।।

२. यस पुस्तकमा उल्लेख भएको राजन्; राजा शब्दको अर्थ व्यापक अर्थमा प्रयोग भएको मानुपर्दछ । 'राजृदीप्तौ' धातुबाट बनेको यो राजन् शब्द अतिशय चमत्कारको द्योतक हो । कहीं उच्च अधिकारको चमत्कार, कहीं भूमिपति हुन्नुको चमत्कार त कतै धनाढ्यताको चमत्कारको रूपमा लिइएको हो भन्ने कुरा बुझ्नुहुने नै छ ।।

३. दुर्बलस्य बलं राजा, बालानां रोदनं बलम् ।
बलं मूर्खस्य मौनित्वं, चौराणामनृतं बलम् ।। —(चाणक्यशतक ६८)

अति सोझो हुनू राम्रो हो, किन्तु व्यवहारमा-
ठग्छन्, काट्छन् सिधा वृक्ष, बाङ्गा[१] बच्छन् जहाँतहाँ।।
धर्म जान्छ भने बाङ्गो हुनुहुन्न नि लोकमा ।।

**धेरै सोझो स्वभावको हुनु हुँदैन । किनकि वनमा गएर हेर्दा जति सोझा वृक्ष छन् ती सबै काटिन्छन् र जति बाङ्गाटिङ्गा छन् ती सबै जस्ताका तस्तै रहन्छन् ।। १२।।**

अवसरवादी साथीहरूको के काम ?

**यत्रोदकं तत्र वसन्ति हंसास्तथैव शुष्कं परिवर्जयन्ति ।**
**न हंस-तुल्येन नरेण भाव्यं पुनस्त्यजन्तः पुनराश्रयन्तः ।। १३ ।।**

बस्छन् पानी भए हाँस, पानी सुके त भाग्दछन् ।
सुखमा साथि, दुःखमा भाग्ने हाँससरी न हुन् ।।

**जहाँ पानी रहन्छ, त्यहाँ हाँस बस्दछन्, त्यस्तै सुकेको सरोवरलाई छोड़िदिन्छन् । यसकारण मनुष्यले हंसको समान रहनु उचित छैन। ती बारबार छोडिदिन्छन् आश्रय पनि लिन्छन् ।। १३।।**

धनको उपयोगिता:

**उपार्जितानां वित्तानां त्याग एव हि रक्षणम् ।**
**तडागोदर-संस्थानां परिस्त्रव इवाम्भसाम् ।।१४।।**

साँचेको धनको दान[२] भोग सदैव गर्नु छ ।
मूल् कुवाको झिकी पानी बढ्छ र स्वच्छ बन्दछ ।।

**संचित धनलाई खर्च गर्नु नै रक्षा हो, जस्तै कुवाबाट जति पानी झिक्यो त्यति मीठो हुँदै जान्छ ।।१४।।**

१. टेढेको कटते न देखा कभी सीधे पे आरे चलाए गये ।
सिंहको बली देते न देखा कभी बकरेको बली दिए गये ।।

२. न्यायागतस्य द्रव्यस्य बोद्धव्यौ द्वावतिक्रमौ ।
अपात्रे प्रतिपत्तिश्च पात्रे चाप्रतिपादनम् ।।
न्यायपूर्वक कमाइ गरेको धन दुईप्रकारले दुरुपयोग हुन्छ। १. कुपात्रलाई दान दिएर र २. सत्पात्रलाई दान नदिएर ।। —(विदुरनीति) ।।

## सत्यपूर्वक धनार्जन गरौं:

**यस्यार्थास्तस्य मित्राणि यस्यार्थास्तस्य बान्धवाः।**
**यस्यार्थाः स पुमाँल्लोके यस्यार्थः स च जीवति ॥१५॥**

धन भए सबै मित्र बन्धु गनिन्छ त्यो नर ।
तर सत्कर्मले मात्र सञ्चय धनको गर[1] ॥

**जसका साथमा धन रहन्छ त्यसैका मित्र धेरै हुन्छन्, जसका साथमा द्रव्य रहन्छ त्यसैका बन्धु हुन्छन् र जोसँग धन छ, त्यही नै पुरुष गनिन्छ र जसका साथमा अर्थ (धन) छ त्यही नै बाँच्तछ ॥१५॥**

## स्वर्गबाट आएका मानिसको गुण:

**स्वर्गस्थितानामिह जीवलोके चत्वारि चिन्हानि वसन्ति देहे।**
**दानप्रसङ्गो मधुरा च वाणी देवार्चनं ब्राह्मणतर्पणं च ॥१६॥**

ज्ञानी दानी प्रियवचनको ब्रह्मवर्गीय देव
सेवा गर्ने सम सकलमा शान्त सन्तोषि जो छ ।
सत्याचारी गुण छ जसमा स्वर्गदिखी झरेको
पुण्यात्मा त्यो मनुज बुझनू देव हो मर्त्यलोक्को ॥

**स्वर्गवासीहरूका शरीरमा संसारमा चार चिह्न रहन्छन्-दानको इच्छा, मीठो वचन, देवता र ब्राह्मणलाई तृप्त गर्नु अर्थात् जसमा दानीको लक्षण छ, उनलाई स्वर्गीय चिन्नुपर्छ, ती आफ्नू पुण्यका प्रभावले स्वर्गवासी गएर भूलोकमा अवतार लिएका हुन् ॥१७॥**

## नरकबाट आएका मानिसको गुण:

**अत्यन्तकोपः कटुका च वाणी दरिद्रता सर्वजनेषु वैरम्।**
**नीचप्रसङ्गः कुलहीनसेवा चिह्नानि देहे नरकस्थितानाम् ॥१७॥**

---

१. अतिक्लेशेन येऽर्थाः स्युर्धर्मस्यातिक्रमेण वा ।
अरेर्वा प्रणिपातेन मा स्म तेषु मनः कृथा ॥
जो धन प्राप्ति या प्रयोजन अत्यधिक कष्टवाट, धर्मको उल्लङ्घनबाट अथवा शत्रुसमक्ष झुकेर मात्र सम्भव हुन्छ, त्यसमा कहिल्यै पनि मन नलगाउनु अर्थात् त्यस्तो इच्छा नगर्नु ॥ —(विदुरनीति ७/७५) ॥

ज्यादै क्रोधी र ठरों वचन गरिर'ने मित्रमा वैर राख्ने,
नीचाको सङ्ग सेवा, मलिन कुमतिको भ्रष्ट आचार गर्ने।
दारिद्रीभावको जो जुन मनुज छ त्यो जानन् नर्कदेखि
आएको हो, कसैले सुपथ मति दिंदा लिन्न झन् गर्छ शेखी॥

**अत्यन्त क्रोध, कटुवचन, दरिद्रता, स्वजनसँग वैर, नीचाहरूको सङ्ग, कुलहीनको सेवा-यो सबै चिह्न नरकबासीहरूका शरीरमा रहन्छन् ॥१७॥**

ज्ञानीका घर जानु वेश:

**गम्यते यदि मृगेन्द्रमन्दिरं लभ्यते करिकपोलमौक्तिकम् ।**
**जम्बुकालयगते च प्राप्यते वत्सपुच्छ खरचर्मखण्डकम् ॥१८॥**

भावार्थ:

सत्योपदेश सत्-ज्ञान पाइन्छ ज्ञानिका घर ।
सक्ला उब्जन दुर्भाव गएमा मूर्खका घर ॥
(हीरा मोती मिलोस् किन्तु को जान्छ सिंहका घर?
यो बुझ्नुपर्छ जानू छ सदैव ज्ञानीका घर ) ॥

**यदि सिंहका गुफामा कोही मनुष्य गयो भने त्यसलाई हात्तीको टाउकाको मोति पाइन्छ र यदि स्याल बस्ने ठाउँमा गयो भने बाछाको पुच्छर वा गधाको छालाको टुक्रा मात्र फेला पर्छ ॥१८॥**

कस्तो व्यक्तिको जन्म कुकुरको पुच्छरजस्तो हुन्छ ?

**शुनः पुच्छमिव व्यर्थं जीवितं विद्यया विना ।**
**न गुह्यगोपने शक्तं न च दंशनिवारणे ॥१९॥**

न ढाक्छ गोप्येन्द्रिय नै न त माखा धपाउँछ ।
कुक्कुरको पुच्छरझैं सत्-विद्याहीनको नर ॥

**कुकुरको पुच्छरको समान विद्याविना बाँच्नु व्यर्थ छ, कुकुरको पुच्छरले न त आफ्नू गुप्ताङ्गलाई छोप्न सक्छ र न त मच्छर आदि जीवहरूलाई उड़ाउन नै सक्छ ॥१९॥**

शुद्ध हुने उपायहरू:

**वाचा शौचं च मनसा शौचमिन्द्रियनिग्रहः ।**
**सर्वभूतदया शौचमेतच्छौचं परार्थिनाम् ॥२०॥**

धरैं छन् शुद्ध गर्ने शरीर त जलले, वाक्यको चित्तको त
सत्यैले हुन्छ, सर्वेन्द्रियहरू वशमा राखनूमैं छ शुद्ध ।
प्राणीमाथी दयावान् हुनु हरबखतै शुद्ध आहार गर्नु
सत्-विद्या ज्ञान नैं हो सकल मनुजको शुद्धिको हेतु जान्नु ॥

**वचनको शुद्धि, मनको शुद्धि, इन्द्रियको वशता, जीवहरूमा दया र पवित्रता-यी उपकारी मनुष्यका शुद्धि हुन् ॥२०॥**

आत्मा अदृश्य छ:

**पुष्पे गन्धं तिले तैलं काष्ठे वन्हिः पयो घृतम् ।**
**इक्षौ गुडं तथा देहे पश्यात्मानं विवेकतः ॥२१॥**

जस्ता रित्सित तेल तीलहरूमा, छन् काठमा अग्नि र
दूध्मा घीउ र ऊँखुमा गुड भयो छन् फूलमा गन्ध त ।
यीभन्दा नि अदृश्य सूक्ष्म छ अझै यो देहमा आत्म त
आचारस्थ र ध्यानगम्य परमात्मा ज्ञानले दृश्य छ ॥

**जस्तै फूलमा गन्ध, तिलमा तेल, काठमा अग्नि, दूधमा घिउ, ऊँखुमा गुड़ (सक्खर) छ, त्यस्तै नै देहमा आत्मालाई विचार गरेर हेर ॥२१॥**

**(शम दमहरू षट् छन् साथ अष्टाङ्गयोग-**
**यम नियम र अन्त्यंको समाधिस्थ शान्त ।**
**कठिन र सरलैका मोक्षका भूमिका छन्**
**परमपदतिरैको लक्ष्य राख्नू छ अन्त्यम् ॥**
**भवविषय त खोज्दा पाप दुःखादि मिल्छन्**
**यदि सुख मिलि जाला क्यै पनी नित्य छैनन् ।**
**परमसुखतिरैका साधना नै सरल् छन्**
**तर मनुज नजानी दुःख पापादि भोग्छन्) ॥**

॥ इति सप्तमोऽध्यायः समाप्तम् ॥

# अथ अष्टमोऽध्यायः

कसले के इच्छा गर्दछन्[1] ?

**अधना धनमिच्छन्ति धनं मानं च मध्यमाः ।**
**उत्तमा मानमिच्छन्ति मानो हि महतां धनम् ।।१।।**

खोज्छन् धनै मात्र त निर्धनीले
धन्, सम्मान, मध्यमवर्गि जन्ले ।
मान्मात्रले पूज्य विशिष्टवर्ग
मानापमान् साम्य छ साधुवर्ग ।।

**अधमले धन चाहन्छ, मध्यमले धन र मान चाहन्छ, उत्तमले मान मात्र चाहन्छ । यसकारण कि महात्माहरूको धन नै मान हो ।। १ ।।**

**[2]अधना धनमिच्छन्ति वाचं चैव चतुष्पदः ।**
**मानवाः स्वर्गमिच्छन्ति मोक्षमिच्छन्ति देवताः ।। २ ।।**

धन खोज्छन् निर्धनीले, पशुले बोल्न खोज्दछन् ।
मनुष्यले स्वर्ग खोज्छन्, ज्ञानीले मोक्ष रोज्दछन् ।।

**धनहीन मनुष्यहरू धनको इच्छा गर्दछन् र चारखुट्टे पशु बोली चाहन्छन्, मनुष्य स्वर्ग चाहन्छन् र देवता मुक्तिको इच्छा राख्दछन् ।। २ ।।**

---

१. कन्या वरयते रूपं माता वित्तं पिता श्रुतम् ।
बान्धवाः कुलमिच्छन्ति मिष्ठान्नमपरे जनाः ।।
**कन्याले रूप, माताले धन, विद्या पिताजिले ।**
**बन्धुले कुल, मिष्टान्न खोज्छन् आमन्त्रितादिले ।।**
**'शिक्षित् बुद्धिमति कन्या छन् भने रूप मात्र त-**
**हेर्दिनन्, हेर्दछिन् विद्या शील आदि विशेषतः ।।'**

२. यो 'अधना.........देवताः' श्लोक, अध्याय ५ श्लोक १८ औंबाट प्रसङ्ग अनुकूल भएकोले यहाँ ल्याइएको हो ।

यी चीजहरू खाएर पनि स्नान जपादि गर्न हुन्छ :

**इक्षुरापः पयो मूलं ताम्बूलं फलमौषधम् ।**
**भक्षयित्वापि कर्तव्या स्नानदानादिकाः क्रियाः ॥३॥**

पानी, दूध, उँखू, तरुल् र फल, पान् छन् औषधी ती सब
खाई स्नान र दान औ जपहरू गर्नूहओस् कर्म त ।
पान् ताम्बूल नखानुहोस् ब्रतमहाँ भन्ने पनी वाक्य छ
स्नान् सन्ध्या नगरी नखानुस[1] कुनै सक्ने भएसम्म त ॥

**ऊखु, पानी, दूध, फल-फूल र औषधि तथा ताम्बूल यी वस्तुहरूलाई भक्षण गरेर पनि स्नान, दान आदि कार्य गरे हुन्छ ॥३॥**

शुद्ध हविष्य मात्र भोजन गरौं:

**दीपो भक्षयते ध्वान्तं कज्जलं च प्रसूयते ।**
**यदन्नं भक्ष्यते नित्यं जायते तादृशी प्रजा ॥४॥**

तेल्को बत्ति बलेर खान्छ उसले सारा अँध्यारो अनि
कालो गाजल जन्म हुन्छ उसमा यो जान्नु मानिस् पनि ।
जस्तो खान्छ अशुद्ध शुद्ध उसरी त्यै बुद्धि उब्जन्छ र
खानू शुद्ध सदैव लोक[2] दुइटै आचारमैं छन् भर ॥

**दियोले अन्धकारलाई खान्छ र गाजल उत्पन्न गर्छ, जसले जस्तो अन्न सधैं खान्छ, त्यसको त्यस्तै नै 'सन्तति' हुन्छन् ॥४॥**

दान गर्दा सत्पात्रलाई गरौं:

**वित्तं देहि गुणान्वितेषु मतिमान्नान्यत्र देहि क्वचित्**
**प्राप्तं वारिनिधेर्जलं घनमुखे माधुर्ययुक्तं सदा ।**

१. अष्टौ तान्यव्रतघ्नानि आपो मूलं फलं पयः।
हविर्ब्राह्मणाकाम्या च गुरोर्वचनमौषधम् ॥
(जल, कन्दमूल, फल, दूध, यज्ञशेष (घीउ), ब्राह्मणको कामनापूर्तिका लागि खानु, गुरुको कथनानुसार खानु र औषधि यति आठले व्रत भङ्ग गर्दैनन्) ॥
२. उपनिषद्मा इहलोक र परलोक भनी दुई लोकको उल्लेख गरिएको छ भने पुराणहरूमा स्वर्ग, मर्त्य र पाताल गरी तीन लोक वा सात ऊर्ध्वलोक र सात अधोलोकको वर्णन छ ।

**जीवन् स्थावरजङ्गमांश्च सकलान् संजीव्य भूमण्डलं**
**भूयः पश्यति देवकोटिगणितं गच्छेत्तमंभोनिधिम् ॥५॥**

देऊ दान[१] सुपात्र[२]लाइ समझी सत्पुण्य मिल्छन् तब
हुन्नन् धर्म कुपात्रमा धन दिई यो बात हो वास्तव ।
पुग्छन् मेघ समुद्रबाट जल त्यो स्वच्छै भई झर्दछन्
सिञ्चित् पारि चराचरै जलनिधी पौंचेर ती मिल्दछन् ॥
तेस्तै दान सुपात्रमा गरियको धेर् नित्य फल् मिल्दछन् ॥

**हे मतिमान्! गुणवान्हरूलाई धन देऊ, अरूहरूलाई कहिल्यै नदेऊ । ..... मेघलाई प्राप्त भएर जल सधैं मधुर हुन्छ र पृथ्वीमा सबै चर-अचर जीवहरूलाई जिलाएर फेरि त्यही जल कोटि गुण भएर उही समुद्रमा नै जान्छ ॥५॥**

## चाण्डाल कुन कुन हुन् ?

**काकः पक्षिषु चाण्डालः पशूनां चैव कुक्कुरः ।**
**पापो मुनीनां चाण्डालः सर्वेषां चैव निन्दकः ॥६॥**

१. आफ्नो अधिकारमा रहेको वस्तुलाई आफ्नो अधिकार छाडी अर्काको अधिकारमा गराउने क्रियालाई दान भनिन्छ- **स्वस्वत्वनिवृत्तिपूर्वकं परस्वत्वापादानं दानम्-** (धर्मसिन्धौ) । दानका चार भेद छन्: ध्रुव, त्रिक, काम्य र नैमित्तिक । **ध्रुव=** पानी पँधेरो, बगैंचा, पोखरी, विद्यालय, चिकित्सालय आदिमा खर्च गरिएको दान चिरस्थायी हुनाले ध्रुव हुन्छ । **त्रिक=** सन्तान, विजय र ऐश्वर्य प्राप्तिको लागि खर्च गरिएको दान वा पुत्रैषणा, वित्तैषणा वा लोकैषणामा गरिएको दान लाई त्रिक भनिन्छ । **काम्य=** कुनै कुरा प्राप्त होस् भनी गरिएको दान काम्य कहलाउँछ । **नैमित्तिक=** विशेष चाडपर्वमा आदिमा गरिने दान नैमित्तिक हो। **तीनप्रकारका दानः =** उत्तम वस्तु, मध्यम वस्तु र तुच्छ वस्तुको दान । **त्रिनाशः =** दान दिएर पछुताउनु, अपात्रलाई दान दिनु र श्रद्धा नगरेर दान दिनु ॥ कर्म गरेर दिइएको द्रव्य दक्षिणा हुन्छ, त्यसलाई दान भनिंदैन । दान त त्यस्तोलाई भनिन्छ जो निःस्वार्थभावले र कुनै कर्म नगराइकन, नअराइकन द्रव्य वा वस्तु सत्पात्रमा प्रदान गरिन्छ ।

२. **कस्तो व्यक्ति सत्पात्र कहलाउँछ ?**
अहिंसकी सदाचारी निर्लोभी च दयाऽर्जव।
ब्रह्मज्ञानी हविष्याशीद्येते सत्पात्रलक्षणम् ॥

चाण्डाल पक्षीहरूमा त काग; चाण्डाल नै हो पशुमा कुकूर ।
चाण्डाल नै हो मुनिलाइ पाप; चाण्डाल हो हिंसक दुष्ट चित्त ।।
(दुष्कर्म-चाण्डाल भनिन्छ नाम; त्यै पाप हो गर्दछ जो कुकर्म ।
चाण्डाल नै हो मुनिलाइ पाप; दुष्कर्मले सकलमा भइरन्छ ताप)।।

कस्तालाई चाण्डाल भनिन्छ ?

**देवद्रव्यं गुरुद्रव्यं परदाराभिमर्शनम् ।**
**निर्वाहः सर्वभूतेषु विप्रश्चाण्डाल उच्यते ।।७।।**

देवद्रव्य, गुरुद्रव्य हर्ने, परस्त्रीमा रत ।
हिंसक मांसभोजी त्यो चाण्डाल कहलाउँछ ।।
(मांस खाने र मांसका निम्ति बाखादि पालने ।
तौलदा अझ हुन् दुष्ट मांसका निम्ति पालने)।।

**देवताको द्रव्य, गुरुको द्रव्य जसले हर्दछ, अर्काकी स्त्रीसँग जसले प्रसंग गर्दछ र सबै प्राणीमा छ्यानब्यान नगर्ने छ, त्यो ब्राह्मण चाण्डाल कहिन्छ ।। १७ ।।**

सबैभन्दा नीच 'यवन'

**चाण्डालानां सहस्रैश्च विद्वद्भिस्तत्त्वदर्शिभिः ।**
**एको हि यवनः प्रोक्तो न नीचो यवनात्परः ।।८।।**

हज्जार् चाण्डाल्समान्को यवन-मुसलवान् हुन्छ यौटै उ नीच
योभन्दा नीच अर्को मनुज अरु कुनै छैन यो सम्झ नित्य ।
आफ्नी माता र गाई उहिसरि बुझनू मानवी सम्पदा हो
गो मांसाशी र हिंसक् 'यवन' चलन हो सम्झ चाण्डाल त्यै हो ।।
(हैनन् चाण्डाल कोही यवन-मुसलवान्,छैन क्वै उच्च नीच,
कामैले नाम धेरै हुन गइ सब नै भेद भो उच्च नीच ।
मांसाशी हिंसकी भो श्रुति विपरितका कर्म जो 'गो' वधादि
यिन्कै चाण्डाल यद्वा यवन-मुसलमान् नाम हो दैत्य आदि) ।।

(यौटै ब्रह्मर्षिका हौं मनुज सकल नै सन्तति-मातृवर्ग
आचार् कर्मादि साथै मति फरक भई सम्झिए भिन्न मार्ग ।
छाडौं दुर्भक्ष्य जो छन् सुपथिक बनियौं एक हौं विश्ववर्ग
यो हो चाणक्य साथै श्रुति ऋषिमुनिका दिव्य सत्योपदेश) ॥

**तत्त्वदर्शीले भनेका छन् कि सहस्र चाण्डालका तुल्य एउटा यवन हुन्छ र यवन (मुसलमान्) भन्दा नीच अर्को कोही हुँदैन ॥७॥**

स्नान गरेर मात्र शुद्ध भइने अवस्था :

**तैलाभ्यङ्गे चिताधूमे मैथुने क्षौरकर्मणि ।**
**तावद्भवति चाण्डालो यावत्स्नानं समाचरेत् ॥८॥**

स्त्री सङ्गम् अनि क्षौर कर्म गरिंदा, धूवाँ चिताको पऱ्यो,
सर्वाङ्गैभर तेल् घसेर र अनी मल् त्यागदामा भयो ।
यी पाँच् कर्महरू गरिन्छ जसमा ज्यादै अशुद्धै भयो,
न्वाही शुद्ध भइन्छ वस्त्र पनि त्यो धूँदा अझै वेश् भयो ॥

(अस्पृश्यादिक स्पर्शमा पनि 'जनै' मालासरी लाउनु,
न्वाही शुद्ध भएर 'सव्य' र अनी अर्को जनै लाउनु ।
'माला' झैं गरि नित्य लाउनु जनै त्यो हुन्छ रे शुद्ध[१] नै,
पूजा होम जपादि पाठहरूमा लाऊनु है 'सव्य' नै)॥

**तेल लगाएमा, चिता जलेको धूवाँ लागेमा, स्त्री प्रसङ्ग गरेमा र केशमुण्डन गरेमा त्यो मानिस स्नान नगरेसम्म चाण्डाल समान नै रहन्छ ॥८॥**

जलपान गर्ने अवस्था:

**अजीर्णे भेषजं वारि जीर्णे वारि बलप्रदम् ।**
**भोजने चामृतं वारि भोजनान्ते विषप्रदम् ॥९॥**

---

१. विरक्ता भगवद्भक्ता त्यक्तसर्वैषणा मुने ।
मालाकारं यज्ञसूत्रं धारयेयुमनिषिभिः ॥ —(भक्तिसुधा) ॥

पानी खानु अजीर्णमा हित छ यो, खाई सकी भो विष,
पानी वास्तवमा सदैव हित हो शीतोष्ण के बानि छ? ।
क्वै भन्छन् जल प्यूनु अन्नसँगमा हित् हुन्न क्वै भन्दछन्[१]
आफ्नो स्वास्थ्य विचारनू, विषयमा कुन् चीज के गर्दछन्?॥

**अपच भएमा जल औषधि[२] हो, पचेपछि जलले बल दिन्छ, भोजनको समयमा पानी अमृत समान छ र भोजनका अन्त्यमा विष समानको फल दिन्छ ॥९॥**

नष्ट हुने कारणहरू:

**हतं ज्ञानं क्रियाहीनं हतश्चाशनतो नरः[३] ।**
**हतं निर्नायकं सैन्यं स्त्रियो नष्टा ह्यभर्तृकाः ॥१०॥**

सत्याचार र कर्म छाड्दछ भने ब्रह्मज्ञ होस् ध्यानि होस्
हुन्छन् ती अधुरा र खान नमिले मर्छन् ति जुन् प्राणि होस् ।
सेनाको भर हुन्न नायकविना स्वामीविना स्त्री पनि
सर्वाधारविहीनका भइ सदा अस्तित्व क्यै हुन्न नि ॥

---

१. दिनान्ते च पिबेद् दुग्धं, निशान्ते च पिबेत्पयः ।
भोजनान्ते पिबेत्तक्रं, किं वैद्यस्य प्रयोजनम् ॥ —(सुभाषितसंग्रह)॥
(घृतं न श्रूयते कर्णे, दधि स्वप्ने न दृश्यते ।
मुग्धे दुग्धस्य का वार्ता तक्रं शक्रस्य दुर्लभम्) ॥ (जनश्रुति)॥
गीताप्रेसद्वारा प्रकाशित **कल्याण** पत्रिकामा भोजन गर्नु आधाघण्टा-पूर्व नै पानी पिउनु उत्तम हुन्छ, भोजनका साथ-साथमै वा भोजनपछि (तुरुन्तै) धेरै पानी पिउनु हितकर छैन, भोजनपछि कम्तिमा एक घण्टापछि मात्र पानी पिउनु उपयुक्त मानिन्छ भन्ने कुरा उल्लेख गरिएको छ ।

२. विनापि भेषजैर्व्याधिः पथ्यदेव निवर्तते ।
न तु पथ्यविहीनस्य भेषजानां शतैरपि ॥ —(आयुर्वेद)॥
अर्थात् पथ्यमा रहिन्छ भने विना औषधि पनि रोगबाट बचिन्छ । पथ्यमा रहन सकिंदैन भने जतिसुकै औषधि सेवन गरे पनि रोग निदान हुन सम्भव हुँदैन ।

३. प्रमादः सम्पदं हन्ति, प्रश्रयं (नम्रता) हन्ति विस्मयः ।
व्यसनं हन्ति विनयं, हन्ति शोकश्च धीरताम् ॥—(कुन्दमाला ३/२)॥

**क्रियाविनाको ज्ञान व्यर्थ छ, अज्ञानी मनुष्य मरेकै समान छन्, सेनापतिविना सेना मारिन्छ र स्वामी (पुरुष) विनाका स्त्री नष्ट हुन्छन् ॥१०॥**

**असन्तुष्टा द्विजा नष्टाः सन्तुष्टश्च महीपतिः ।**
**सलज्जा गणिका नष्टा निर्लज्जाश्च कुलाङ्गनाः ॥११॥**

वेश्या भै यदि लाज मान्दिछ भने चल्दैन त्यो वृत्ति नै
स्त्री निर्लज्ज भए कुलीन यदि होस् हुन्छे उ ता नष्ट नै ।
सन्तोषी नृपको र विप्रहरू जो बिग्रे असन्तोषले
जस्तो काम छ शोच्नु त्यो उहिसरी बाटो लिनू होशले ॥

## दुःखका कारण

**वृद्धकाले मृता भार्या, बन्धुहस्ते गतं धनम् ।**
**भोजनं चापराधीनं तिस्रः पुंसां बिडम्बना ॥१२॥**

पत्नीको-पतिको वियोग हुनगो वृद्धातुरै भैकन
धीतो सम्पतिहीन बन्धुहरूका हात्मा गएको धन ।
खाना जो छ पराइका अधिनको भो ता महादुःख हो
रोगी, वृद्ध, गरीब जो छ त अझै भन्नै सकींदैन त्यो ॥

**वृद्धावस्थामा स्त्रीको मरण, बन्धुका हातमा गएको धन र अर्काको अधीन रहेको भोजन यी तीन पुरुषहरूका लागि अत्यन्त दुःखदायक हुन्छन् ॥१२॥**

## केविना के विफल हुन्छ ?

**अग्निहोत्रं विना वेदा न च दानं विना क्रियाः।**
**न भावेन विना सिद्धिस्तस्माद्भावो हि कारणम् ॥१३॥**

पढ्नू ब्यर्थ छ वेद कर्म नगरे दानै विना कर्मको
आचारादि र भक्तिभाव नभए क्यै सिद्धि नै हुन्न त्यो ।
शौचाचार विचार होस् दृढ सदा आहार होस् शुद्ध र
कामाशक्त न होस् भवाब्धितिरको हुन्छन् खुशी ईश्वर ॥

**अग्निहोत्र आदि विना वेद पढ्नु व्यर्थ हुन्छ, दानविना यज्ञादि क्रिया व्यर्थ हुन्छ, भावविनाले केही सिद्ध हुँदैन, यसकारण भाव नै सबैको कारण हो ॥१३॥**

## सिद्धिको कारण भावना

**काष्ठपाषाणधातूनां कृत्वा भावेन सेवनम् ।**
**श्रद्धया च तथा सिद्धिस्तस्य विष्णोः प्रसादतः ॥१४॥**

ढुङ्गा काठ र धातु वृक्षहरुमा[1] मात्रै त छैनन् तर
कुश् बेल श्री तुलसी अश्वत्थहरुमा श्रीशालग्रामादि र ।
गर्नूपर्छ विशेष भावहरिको सज्जन् महात्मादिमा
सर्व-व्यापक छन् र भाव छ ठुलो सोपान अल्पज्ञमा ॥

**धातु, काठ, ढुङ्गो, माटाको मूर्ति जुनसुकैमा पनि श्रद्धासहित भएर भक्ति सेवा गरे सबै कार्य विष्णुका प्रसादले सिद्ध हुन्छ ॥१४॥**

**न देवो विद्यते काष्ठे न पाषाणे न मृण्मये ।**
**भावे हि विद्यते देवस्तस्माद्भावो हि कारणम् ॥१५॥**

माटो ढुङ्गा काठ वा धातुमाहाँ, मात्रै छैनन् देव छन् भावनामा ।
प्रह्लादजीले भावले श्री हरिको, पाए दर्शन् भाव हो मुख्य ठूलो ॥

**भगवान् काठमा छैनन् न ढुङ्गामा छन् न माटाको मूर्तिमा छन्, निश्चय छ कि भगवान् भावनामा नै विद्यमान् छन्, यसकारण भाव नै सबैको कारण हो ॥१५॥**

## सबैमा ठूलो कुरा

**शान्ति तुल्यं तपो नास्ति न सन्तोषात् परं सुखम् ।**
**न तृष्णायाः परो व्याधिर्न च धर्मो दयापरः ॥१६॥**

---

१. भूमिरापोऽनलो वायुः खं मनो बुद्धिरेव च ।
भूतादिरादि प्रकृतिर्यस्य रूपं नतोऽस्मि तम् ॥
—(विष्णुपुराण १/१२/५)॥

छैनन् शान्ति[1] समानको तप अरू आनन्द सन्तोष हो
तृष्णाझैं अरु रोग छैन भवमा कुन् धर्म हो भन्छु त्यो ।
प्राणीमा सुदया विवेक् गरिलिनू हिंसा सदा छाडनू
सारा यज्ञ र दान तीर्थ फलमा ठूलो यही सम्झिनू ॥

**शान्तिको समान अर्को तप छैन र न सन्तोषभन्दा अर्को सुख छ, तृष्णा जस्तो अर्को व्याधि छैन र दया समान ठूलो अर्को धर्म छैन ॥१६॥**

क्रोध र तृष्णा कस्ता हुन् ?

**क्रोधो वैवस्वतो राजा तृष्णा वैतरणी नदी ।**
**विद्या कामदुधा धेनुः सन्तोषो नन्दनं वनम् ॥१७॥**

क्रोधै हो यमराज, वैतरणि औ तृष्णा भनी जाननू
तृष्णा पार भइन्छ पूल बलियो वैराग्य हो सम्झनू ।
सत्-विद्या बुझ कामधेनु सरि सन्तोषै छ कल्पैतरू
सन्तोष् साथ विराग राख्नु मनमा, निर्वाणका हुन् गुरु ॥

**क्रोध यमराज हो, तृष्णा वैतरणी नदी हो, विद्या कामधेनु गाई हो र सन्तोष नै इन्द्रको बगैचा हो ॥१७॥**

केबाट को भूषित हुन्छन् ?

**गुणा भूषयते रूपं शीलं भूषयते कुलम् ।**
**सिद्धिर्भूषयते विद्यां भोगो भूषयते धनम् ॥१८॥**

विद्या भूषित हुन्छ सिद्धि छ भने शीलै भएमा कुल,
पार्छन् भूषित रूपलाइ गुणले छन् है गुणैमा बल ।

---

१. शान्ति प्राप्ति हुने बाटो स्वप्न संसारमा पनि।
भए वैराग्य नै होला छैन नत्र कुनै पनि ।। —(वैराग्य कल्पतरु)।।
कसरी हुन्छ वैराग्य सत्सङ्ग र सुशास्त्रको ।
प्रलोभ छाडी सन्तोष लिनु वैराग्य हेतु हो ।।
नित्य भो प्रौढ वैराग्य प्रलोभ विषयादिको ।
गर्दैन त्यो त जीवनमुक्त शान्ति-स्वरूप भो ।।

पार्छन् भूषित[१] द्रव्य दान र अनी भोगै गरेमा सब
सत्याचार छ सर्व भूषित हुने आचार हो गौरव ॥

**गुणले रूपलाई भूषित गर्दछ, शीलले कुललाई भूषित गर्छ, सिद्धिले विद्यालाई भूषित गर्छ र भोगले धनलाई भूषित गर्छ ॥१८॥**

के-बाट के-के व्यर्थ हुन्छ ?

**निर्गुणस्य हतं रूपं दुःशीलस्य हतं कुलम् ।**
**असिद्धस्य हता विद्या अभोगेन हतं धनम् ॥१९॥**

छैनन् सद्गुण रूप ब्यर्थ हुन गो दुःशीलले ता कुल
विद्या सिद्धिविना छ व्यर्थ, धन त्यो भोगैविना व्यर्थ छ ।
तस्मात् सद्गुण शीलको छ महिमा आचार हो शील ता
सत्याचार उदारभाव समता राख्नु छ है नम्रता ॥

**निर्गुणको सुन्दरता व्यर्थ छ, शीलहीनको कुल निन्दित हुन्छ, सिद्धिविनाको विद्या व्यर्थ छ, भोगविनाको धन व्यर्थ छ ॥१९॥**

केले को शुद्ध हुन्छ ?

**शुद्धं भूमिगतं तोयं शुद्धा नारी प्रतिव्रता ।**
**शुचिः क्षेमकरो राजा सन्तुष्टो ब्राह्मणः शुचिः ॥२०॥**

शुद्धस्थान सदा जहाँ छ जल त्यै मानिन्छ है शुद्ध त
राष्ट्राध्यक्ष पवित्र हुन्छ सबको कल्याण जो गर्दछ ।
नारी शुद्ध पतिव्रता छ जुन त्यै ब्राह्मीयता शुद्ध त
आचारी छ सदैव शान्तपनको सन्तोषवान् शुद्ध छ ॥

---

१. ताराणां भूषणं चन्द्रो, नारीणां भूषणं पतिः ।
पृथिव्या भूषणं राजा, विद्या सर्वस्य भूषणम् ॥
ऐश्वर्यस्य विभूषणं सुजनता, शौर्यस्य वाक्संयमः
ज्ञानस्योपशमः कुलस्य विनयो, वित्तस्य पात्रे व्ययः ।
अक्रोधस्तपसः क्षमा बलवतां, धर्मस्य निर्व्याजता
सर्वेषामपि सर्वकारणमिदं, शीलं परं भूषणम् ॥
—(नीतिशतकम् ४१) ॥

**भूमिबाट निस्केको पानी पवित्र हुन्छ, पतिव्रता स्त्री पवित्र हुन्छे, कल्याण गर्ने राजा पवित्र मानिन्छ र सन्तोषी ब्राह्मण पवित्र हुन्छ ॥ २० ॥**

सत्-विद्याले नै सबै पूजनीय हुन्छन् :

**किं कुलेन विशालेन विद्याहीनेन देहिनाम् ।**
**दुष्कुलं चापि विदुषो देवैरपि सुपूज्यते ॥२१॥**

जन्मोस् त ठूला कुलमा मनुष्य, विद्याविना त्यो सब व्यर्थ हुन्छ ।
आचार विद्या छ त जोसुकै होस्, पूजिन्छ आचार र विज्ञ होओस् ॥

**विद्याहीन छ भने ठूलो कुलले पनि मनुष्यलाई के लाभ? नीच कुलका पनि विद्वान् देवताहरूबाट पनि आदर पाउँछन् ॥ २१ ॥**

सत्-विद्याको गौरवता :

**विद्वान् प्रशंस्यते लोके विद्वान् सर्वत्र गौरवम् ।**
**विद्यया लभते सर्वं विद्या सर्वत्र पूज्यते[1] ॥२२॥**

प्रशंसित र आदर विद्याले नै दिलाउँछ ।
सत्-विद्या ज्ञान भएमा मोक्षसमेत पाउँछ ॥

**संसारमा विद्वान् नै प्रशंसित हुन्छन्, विद्वान्ले नै सबै प्रतिष्ठा पाउँछ, विद्या नै सबै ठाउँमा पूजित हुन्छ ॥ २२ ॥**

सत्-विद्याविना सबै व्यर्थ:

**रूपयौवनसम्पन्ना विशालकुलसम्भवाः ।**
**विद्याविना न शोभन्ते निर्गन्धा इव किंशुकाः[2] ॥ २३ ॥**

जन्मोस् ठूला कुलमा नै रूप यौवन-पूर्णकै ।
हुन्न शोभा विनाविद्या, गन्धविहीन फूलझैं ॥

---

१. विदेशेषु धनं विद्या, व्यसनेषु धनं मतिः ।
परलोके धनं धर्मः, शीलं सर्वत्र वै धनम् ॥—(सुभाषितरत्नभाण्डागार)
स्वगृहे पूजितो मूर्खः, स्वग्रामे पूजितः प्रभुः ।
स्वदेशे पूजितो राजा, विद्वान् सर्वत्र पूजितः ॥ —(भर्तृहरिसुभाषितसंग्रह११)

२. यही भाव वा अर्थको श्लोक अध्याय३, श्लोक ८ मा पनि उल्लेख भइसकेको छ । किन्तु 'पलाँशको फूलझैं' दृष्टान्त दिइएको छ तापनि कुनै प्रकारको पनि औषधीमा काम नलाग्ने र पवित्रतामा पनि नगनिएको भन्ने सम्झनुपर्दछ ।

**सुन्दर, यौवन युक्त र ठूला कुलमा जन्म भएर पनि विद्याहीन पुरुषले शोभा पाउँदैन, जस्तै विनागन्धको पलाँशको फूल ॥ २१ ॥**

यस्ताबाट पृथ्वीलाई भार हुन्छः

**मांसमत्स्यैः सुरापानैः मूर्खैश्चाक्षरवर्जितैः ।**
**पशुभिः पुरुषाकारैर्भाराक्रान्तास्ति मेदिनी ॥२४॥**

छैनन् सत्सङ्ग विद्या अबुझ कुमतिको मूर्ख जो निर्दयाको
सर्वाशी मांसभक्षी मदहरू पिउने भार हो त्यो धराको ।
हेर्दा मात्रै छ मान्छे, तर उ त पशु हो घातकी हो सबैको
यस्ताको हुन्न सङ्गत् नगरनु कहिल्यै सत्यको बात हो यो ॥
(हुन्छन् है 'मद' धेर्थरी ति सबमा रक्सी प्रसिद्धै छ यो
गाँजा, भाङ, अफीम्हरू 'मद' यि हुन् सूर्ती मदैझैं छ यो।
यस्ता मादकवस्तु सेवन गरी धर्मार्थकामादि र
हानी गर्दछ देहमा पनि सखे ! छाडौं, भजौं ईश्वर !)॥

**मांस भक्षण गर्ने, मदिरा पान गर्ने, निरक्षर र मूर्ख पुरुषका र यी पशुहरूका भारले पृथ्वी पीड़ित हुन्छिन् ॥ २२॥**

के नभए के नाश हुन्छ ?

**अन्न हीनो दहेद्राष्ट्रं मन्त्रहीनाश्च ऋत्विजः ।**
**यजमानं दानहीनो नास्ति यज्ञसमो रिपुः ॥२५॥**

अन्न हीन भए राज्य, होतादि मन्त्रहीन भै ।
दानहीन यजमान नाशिन्छ यज्ञ त्रुटि भै ॥

**अन्नहीन यज्ञले राज्यलाई, मन्त्रहीन यज्ञले ऋत्विजलाई, दानहीन यज्ञले यजमानलाई डढाउँछ, त्यसकारण विधिहीन यज्ञसमान अर्को शत्रु छैन ॥ २५ ॥**

**(कुपथ सुपथ यस्ता यज्ञ ता धेर नै छन्**
**नगरनु पशु हिंसा, मांस मद्यादि सेवन् ।**
**यि त मनुज हुँदैनन्, हुन् पशूकै सरीका**
**भनिकन सब सत् शास्त्रादिमा लेखिएका ।।**

✤✤ *॥ इति अष्टमोऽध्यायः समाप्तम् ॥* ✤✤

# नवमोऽध्यायः

दिव्य पञ्चामृत :

**मुक्तिमिच्छसि चेत्तात विषयान् विषवत् त्यज ।**
**क्षमाऽर्जवदयाशौचं सत्यं पीयूषवत् पिब ॥१॥**

गर्छौ त मोक्षको इच्छा विषय विषवत् बुझ[1]!
क्षमा शौच दया सत्य सरल नित्य यै भज ! ॥
(पञ्चामृत यि हुन् दिव्य नित्य धारण गर्छ जो ।
मोक्षार्थि होस् कि जो होओस् परमानन्द भोग्छ त्यो ॥
अहिंसा, सत्य, आचार, दया, ब्रह्मात्मज्ञान भो ।
मानवमात्रको मूल धर्म हुन् भनि जान्नु यो) ॥

**हे भाइ बन्धु, यदि मोक्ष खोज्दछौ भने विषयलाई विष समान जानी छोड़िदेऊ । सहनशीलता, सरलता, दया, पवित्रता र सत्यलाई अमृतसमान पान गर ॥१॥**

अर्कालाई उपहास र मर्म पारेर नबोलौं[2]

**परस्परस्य मर्माणि ये भाषन्ते नराधमाः ।**
**त एव विलयं यान्ति वल्मीकोदरसर्पवत् ॥२॥**

---

१. मुक्तिमिच्छसि चेत्तात विषयान् विषवत् त्यज ।
क्षमाऽऽर्जव-दया-तोष-सत्यं पीयूषवद् भज ॥ —(अष्टावक्रगीता १/२)॥
**पैदा खातिर अस्पतालहरुमा जान्छन् र जन्माउँछन्**
**मातादेखि बढी सुसार शिशुको सिष्टर्हरू गर्दछन् ।**
**स्नेहाशक्ति कदापि हुन्न तिनमा मोक्षार्थिले त्यैसरी**
**आशक्ती भवमा नराखि मनले भज्छन् सदा श्रीहरि ।।**

२. सत्यं ब्रूयात् प्रियं ब्रूयात् न ब्रूयात् सत्यमप्रियम् ।
प्रियं च नानृतं ब्रूयात् एष धर्मः सनातनः ॥ —(मनुस्मृति) ॥
कस्यचित् किमपि नो हरणीयं, मर्मवाक्यमपि नोच्चरणीयम् ।
श्रीपतेः पदयुगं स्मरणीयं, लीलया भवजलं तरणीयम् ॥
—(सुभाषितरत्नभाण्डागार) ।

अर्कालाई मर्म[१] पारी बोल्ने त नष्ट हुन्छ नि ।
धमिराका गुँड भित्र परेका सर्पझैं भई ॥

**जो नराधम उसको उसले, उसको उसले पोल खोल्दछन् ती निश्चय नै नष्ट हुन्छन् । जस्तै धमिराका गोलामा परेको सर्प नष्ट हुन्छ ॥२॥**

केमा के छैन ?

**गन्धः सुवर्णे फलमिक्षुदण्डे नाकारि पुष्पं खलु चन्दनस्य ।**
**विद्वान् धनी भूपतिदीर्घजीवी धातुः पुरा कोऽपि न बुद्धिदोऽभूत् ॥३॥**

सुन्मा बास्ना, फल् उँखूमा, फूल भो न श्रीखण्डमा ।
विद्वान् राजा धनी, दीर्घ-जीवी छैनन् नि विश्वमा ॥
बुद्धिदाता भएनन् कि ब्रह्माका सृष्टिकालमा ॥
(श्रीखण्डमा फूल्, उँखुमा भए फल्
हुन्छन् ति फिक्का अरू वेश फूल्-फल् ।
चोरी हुने डर् सुनमा सुगन्ध
को सक्छ गुप्ती गरि राखनू त ॥
छन् वृद्ध विद्वान् नृपती धनी त
सर्वज्ञ छन् सृष्टि-विधातृजी त ।
के जाँचनू बुद्धि विधातृसीत
राम्रै गरे जे पनि भन्नुपर्छ )॥

१. श्री युधिष्ठिरका महामखमहाँ सारा जुटेका थिए
जल्मा स्थल् स्थलमा त जल् भ्रम हुने दर्बार कोठा थिए ।
दुर्योधन् भ्रममा परे उस बखत् श्रीद्रौपदी भीम त
हाँसे, वीष बिऊ छरे 'रण' फल्यो फैल्यो महाभारत ॥
वैषम्यता थियो पैल्यै हाँसे द्रौपदि भीम जो ।
दुर्योधन्मा बढ्यो ईर्ष्या अग्निमा घ्यू समान भो ॥
शुकी हेला गरी 'गर्भिणी' मा वन गई सीता ।
बस्नुपरेझैं, युद्धको बीउ भो उपहासता ॥
गर्नुहुन्न 'उपहास' जस्को होस् जहिले हओस् ।
मर्म पारी बोल्नु हुन्न यो सदा अर्ति मान्नु होस् ॥

**विधाताले सुनमा सुगन्ध (बास्ना), ऊखुमा फल, चन्दनमा फूल, विद्वान्, धनी र राजालाई दीर्घजीवी गरेनन्, निश्चय छ कि उनलाई पहिले कोही यस्तो बुद्धि दिनेवाला थिएनन् होला ॥ ३ ॥**

कुन् चीजमा के प्रधान[१] ?

**सर्वौषधीनाममृतं प्रधानं सर्वेषु सौख्येष्वशनं प्रधानम् ।**
**सर्वेन्द्रियाणां नयनं प्रधानम् सर्वेषु गात्रेषु शिरः प्रधानम् ॥ ४ ॥**

गुर्जो सबै औषधिमा छ श्रेष्ठ
आनन्दमा भोजन नै छ श्रेष्ठ ।
सर्वाङ्गमा नै शिर हो प्रधान
आँखा छ सर्वेन्द्रियमा प्रधान ।
सत्-चित्त हो जीवनको प्रधान ॥

**सबै औषधिहरूमा गुर्जो मुख्य छ, सबै सुखहरूमा भोजन मुख्य छ, सबै इन्द्रियहरूमा आँखा श्रेष्ठ छ, सबै शरीरमा शिर (टाउको) प्रधान छ ॥ ४ ॥**

विज्ञ-पूर्वजहरूको प्रशंसा

**दूती न संचरति खे न चलेच्च वार्ता**
**पूर्वं न जल्पितमिदं न च संगमोऽस्ति ।**
**व्योम्नि स्थितं रविशशीग्रहणं प्रशस्तम्**
**जानाति यो द्विजवरः स कथं न विद्वान् ॥ ५ ॥**

चर्चा भो न त डुल्दथें 'नभ'महाँ भेट् भो न कोहीसँग,
आकाश्का रविचन्द्रका ग्रहण जो जान्ने यथावत्सँग ।
तेस्ता पूर्वज विज्ञ हैन ति भनी को भन्न पो सक्दछन् ?
ती सर्वज्ञ महर्षि हुन् तिनीहरू सत्-वन्दना योग्य हुन् ॥

**दूत आकाशमा जाँदैन र न उहाँ वार्ता नै चल्न सक्छ, न पहिलेदेखि नै यो भनिदिएको छ र न कसैको संगति छ तैपनि**

१. यस्तै किसिमका-आशयका श्लोकहरू चौथौं अध्यायको श्लोक १० मा र सोह्रौं अध्यायको १७ मा पनि उल्लेख गरिएको छ ।

**आकाशमा बस्ने सूर्य चन्द्रमाको स्पष्ट ग्रहणहरूलाई जो ब्राह्मण जान्दछन् ती कसरी विद्वान् होइनन् ॥५॥**

कस्तालाई निद्राबाट ब्युँझाउँदा हित हुन्छ ?

**विद्यार्थी सेवकः पान्थः क्षुधार्तो भयकातरः।**
**भाण्डारी प्रतिहारश्च सप्त सुप्तान् प्रबोधयेत्॥६॥**

विद्यार्थी, बटुवा, भयातुर, अती भोको र भण्डारि भो,
पाले, सेवक निद्रमा परि गए ब्यूँझाउनू[1] वेश हो ।
मौका पात्र विचार गर्नु तिनको, बन्लान् ति शत्रुसरी
'तुलो' झैं छ दया र तौलनु हओस् गर्नोस् दया सोंच् गरी ॥

**विद्यार्थी, सेवक, पथिक, भोकले पीड़ित, भयले व्यग्र, भान्से र द्वारपाल-यी सातैलाई सुतेका भए पनि जगाई दिनुपर्छ ॥६॥**

कस्तालाई ब्युझाउँदा अहित हुन्छ ?

**अहिं नृपं च शार्दूलं[2] कीटं च बालकं तथा ।**
**परश्वानं च मूर्खं च सप्त सुप्तान्न बोधयेत्॥७॥**

अर्काको कुक्कुर, मूर्ख, राजा, बालक, सर्प भो ।
बारूलो, बाघलाई त न उठाउनु[3] वेश हो ॥
(शार्दूल मात्रै न कि क्रूर जाति
छन् धेर थर् जङ्गलका निवासी ।
बच्छीं-अरिङ्गाल्हरु उग्र 'कीट'
हिंड्नू छ थाहै नदिई सुटुक्क) ॥

१. उत्थापयन्ति पतितान्, निमग्नान् तारयन्ति च ।
प्रबोधयन्ति शयितान्, ते नरा भुवि दुर्लभाः ॥ —(संस्कृत-पद्य-संग्रह)
२. मूलमा 'शार्दूल' (बाघ), बारूलो आदिलाई नजगाउनु भनिएको छ तापनि यो मात्रै होइनन्, जङ्गलमा रहने अन्य जो कोही जीवजन्तुहरूलाई जगाउनु भनेको त कालसँग कुस्ती खेल्नुजस्तो हो ।
३. एकः स्वादु न भुञ्जीत, एकश्चार्थान् न चिन्तयेत् ।
एको न गच्छेदध्वानं, नैकः सुप्तेषु जागृयात् ॥ —(विदुरनीति ३२/४६)

**साँप, राजा, बाघ, बारूलो, बालक, अर्काको कुकुर र मूर्ख-यी सातलाई सुतेका बेलामा जगाउनु हुँदैन ॥७॥**

ब्रह्मत्व नाश हुने कामहरू :

**अर्थाधितश्च यैर्वेदास्तथा शूद्रान्नभोजिनः ।**
**ते द्विजाः किं करिष्यन्ति निर्विषा इव पन्नगाः ॥८॥**

धन् कमाउनका निम्ति वेद जो जन पढ्दछ ।
शूद्र पक्वान्न र मांस खाए ब्रह्मत्त्व नास्दछ ॥

**जसले वेदलाई धनको लागि पढ़ेका छन्, त्यस्तै नै जो शूद्रको अन्न भोजन गर्दछन्, ती ब्राह्मण बिनाविषको साँप समान के पो गर्न सक्दछन् र? ॥८॥**

कस्ता व्यक्ति रिसाउँदा पनि केही फरक पर्दैन ?

**यस्मिन् रुष्टे भयं नास्ति तुष्टे नैव धनागमः ।**
**निग्रहाऽनुग्रहो नास्ति स रुष्टः किं करिष्यति ॥९॥**

जो रिसाई भय हुन्न खुशी भै लाभ छैन क्यै ।
दण्ड अनुग्रह छैन त्यो रिसाएर हुन्न क्यै ॥
(हानि लाभ न होस् किन्तु रिस्सिने[१] पार्नुहुन्न क्वै) ॥

**जो रिसाउँदा केही डर छैन, खुशी हुँदा पनि धनको लाभ छैन, न दण्ड, न अनुग्रह हुन सक्छ, त्यो क्रोधित भएर के गर्न सक्दछ र? ॥९॥**

मौकामा आफ्नो शक्तिको चेष्टा झल्काउनु पनि पर्छः

**निर्विषेणापि सर्पेण कर्तव्या महती फणा ।**
**विषमस्तु न चाप्यस्तु घटाटोपो भयङ्करः ॥१०॥**

१. उत्तमे तु क्षणं कोपो, मध्यमे घटिका द्वयम् ।
अधमे स्यादहोरात्रं, चाण्डाले मरणान्तिकम् ॥ —(समयोचितपद्यमालिका) ।

सर्पले विष होस् नहोस् फँणा फैलाउनु सरि ।
आफ्नो सुरक्षा निम्तिमा ढाँचा पार्नु त्यसैगरी ॥
न होस् आघात अरुमा रक्षा होस् आफ्नु जे गरी ॥

**विषहीन साँपले पनि आफ्नो फणा बढ़ाउनुपर्छ, विष होस् अथवा नहोस्, बढ़ाएको फणा डराउनेवाला हुन्छ ॥१०॥**

समय सदा सर्वदा सत्कर्ममा लगाऔं

**प्रातर्द्यूतप्रसङ्गेन मध्यान्हे स्त्रीप्रसङ्गतः ।**
**रात्रौ चौरप्रसङ्गेन कालो गच्छति धीमताम् ॥११॥**

प्रातः कालमहाँ प्रसङ्ग त 'जुआ'पढ्नोस् 'महाभारत'
नारीको त प्रसङ्ग मध्यादिनमा रामायणै पढ्नु छ ।
रात्रीमा गर चोर बातहरू जो श्रीभागवत्का कथा
चर्चा होस् भगवद्कथा हरबखत् यी अर्ति हुन् मोक्षका ॥

(ब्यर्थै काल नफाल्नु नाम हरिको चर्चा गरौं नित्य र
जुन् बेला जुन शास्त्र होस् पढिरनू[1] यै लक्ष्य हो मुख्य त ।
जस्मा श्री शिव विष्णु भक्तहरूको सत्-वाक्यले युक्त होस्
भक्ति ज्ञान र योगसाथ जसमा निर्वाणको बोध होस्) ॥

**प्रातःकालमा जुवाड़ीहरूको कथा अर्थात् महाभारतको कथा जसमा यो स्पष्ट ज्ञात हुन्छ कि जुआले के हानि हुन्छ, यसका अतिरिक्त त्यसमा राजनीति र ज्ञानको विषय दुवै मिल्दछन् । दिऊँसो स्त्री प्रसङ्गले अर्थात् रामायणले यसलाई पढ़नाले मनुष्यलाई शिक्षा मिल्छ कि स्त्रीको वश हुनाले दुःख धेरै उठाउनुपर्छ र**

१. विवेको जन्यते येन, संयमो येन पाल्यते ।
धर्मः प्रकाश्यते येन, मोहो येन निहन्यते ॥
मनो नियम्यते येन, रागो येन निकृत्यते ।
तद् देयं भव्यजीवानां, शास्त्रं निर्धूत-कल्मषम् ॥
—(अमितगतिश्रावकाचार ९/१०३-१०४)।

**परस्त्रीमा दृष्टि लगाउने सर्वनाश हुन्छ । रात्रिमा चोरहरूको वार्ता अर्थात् भागवत यसलाई पढ़नाले अथवा सुन्नाले यो शिक्षा मिल्छ कि श्रीकृष्णजी आफ्ना १६ हजारभन्दा बढ़ी स्त्रीहरू हुँदा पनि तिनी आफ्ना इन्द्रियका वशमा थिएनन् यो पनि सिकिन्छ कि इन्द्रियहरूको संयम कसरी गर्नुपर्छ । रात्रिमा यसकारण भनियो कि सबै रात्रिमा इन्द्रियका वशमा हुन्छन् । यदि मनुष्य त्यस समय यस्तो कथा सुनुन् त ती पनि आफ्ना इन्द्रियका वशमा हुँदैनन् । बुद्धिमान्हरूको समय यसरी नै व्यतीत हुन्छ ॥११॥**

कुनै चीज देवादिलाई अर्पण गरेर मात्र प्रयोग गरौं :

**स्वहस्तग्रथिता माला स्वहस्ताद्घृष्टचन्दनम् ।**
**स्वहस्तलिखितं स्तोत्रं शक्रस्यापि श्रियं हरेत् ॥१२॥**

माला आफ्ना हातले जो उनेको चन्दन् आफ्ना हातले घोटिएको[१]।
आफ्ना हात्का स्तोत्र उल्लेख जो छन् देवी द्यौतामा प्रथम् गर्नु अर्पण्।।
(त्यस्का पश्चात् लाउनु त्यो प्रसाद पैल्यै आफैं आउँदा लाग्छ दोष।
खाने जेजे चीज हुन् ती सदैव ईश्वरार्पण् गर्नु त्यो खानु वेश)।।

**आफ्ना हातले उनेको माला, आफ्ना हातले घोटेको चन्दन, आफ्ना हातले लेखेको स्तोत्र-यी तीनलाई स्वयं सेवन गर्नाले इन्द्रको पनि लक्ष्मी हर्दछन् ॥१२॥**

कुनै चीज मर्दन गर्नाले गुण बढ्छ :

**इक्षुदण्डास्तिलाः शूद्रः कान्ता हेम च मेदिनी।**
**चन्दनं दधि ताम्बूलं मर्दनं गुणवर्द्धनम् ॥१३॥**

पृथ्वी, स्त्री, उँखु, पान, सेवक र तिल्, चन्दन्, दही औ सुन
गर्नू मर्दन युक्ति योग्य रितले सोचेर आफ्ना गुण ।

१. दानम् आत्मीयहस्तेन, मातृहस्तेन भोजनम् ।
तिलकं विप्रहस्तेन, परहस्तेन मर्दनम् ॥—(चित्रसेनपद्मावतीचरितम् २८६)॥

आफ्ना सेवकमा विवेक गरनू स्त्रीजातिलाई पनि
गर्नू प्रेम सचेष्टसाथ रहनू निर्मुग्धताको बनी ॥

**ऊँखु, तिल, शूद्र, स्त्री, सुन, पृथ्वी, चन्दन र मही (मोही) तथा पान यसको मर्दन नै गुणवर्द्धक हुन्छ ॥१३॥**

केलाई के गरे शोभा दिन्छन् ?

**दरिद्रता धीरतया विराजते कुवस्त्रता शुभ्रतया विराजते ।**
**कदन्नता चोष्णतया विराजते कुरूपता शीलतया विराजते ॥१४॥**

होस् स्वच्छ शुद्ध त कुवस्त्र पनी छ शोभा
होस् धीरता तब दरिद्र पनी छ शोभा ।
शोभा कुरूप पनि हुन्छ सुशीलताले
मीठो हुनेछ सब भोजन उष्णताले ॥

**दरिद्रता धीरताले शोभिन्छ, स्वच्छताले कुवस्त्र पनि शोभिन्छ, कुअन्न उष्णताले राम्रो लाग्छ, कुरूपता सुशीलताले शोभिन्छ ॥१४॥**

**(विषय विष समानै मानि आसक्ति छाड्नु**
**सरल र सु-दयालू सत्य शौचादि मान्नु ।**
**लिनु छ त मन सन्तोष्, भाव राख्नु क्षमादि**
**सहज छ 'गुणग्राही भै रहे मिल्छ शान्ति) ॥**

*॥ इति नवमोऽध्याय समाप्तम् ॥*





# अथ दशमोऽध्यायः

विद्या नभएका मानिस नै निर्धनी हुन्

**धनहीनो न हीनश्च धनिकः स सुनिश्चयः ।**
**विद्यारत्नेन यो हीनः स हीनः सर्ववस्तुषु ॥१॥**

धनरहित त्यो हैन, सत्-विद्या-हीन दीन हुन् ।
विद्या ब्रह्मज्ञ जो छन् ती धन जेहोस् धनी ति हुन्॥

**धनरहित जन हीन भनिँदैन, निश्चय नै त्यो धनी नै भनिन्छ । जो विद्यारत्नले हीन छ, त्यहीं सबै वस्तुहरूले रहित मानिन्छ ॥१॥**

मन पवित्र राखौं[1]

**दृष्टिपूतं न्यसेत्पादं वस्त्रपूतं पिवेज्जलम् ।**
**शास्त्रपूतं न्यसेद्वाक्यं मनः पूतं समाचरेत् ॥२॥**

पाउ चलाउनु हेरी, छानेर जल पिउनु ।
बोल्नु, सत्य-प्रिय-नित्य शुद्धात्म मन राखनु ॥

**आँखाले हेरेर पाइला चाल्नुपर्छ, कपड़ाले छानेर जल पिउनु उचित छ, शास्त्रले शुद्ध गरिएको वचन बोल्नु उचित छ, मन शुद्ध गरेर अर्थात् विचार गरेर मात्र कार्य गर्नु उचित छ ॥२॥**

विद्या र सुख चाहनेले के गर्ने ?

**सुखार्थी चेत्त्यजेद्विद्यां विद्यार्थि चेत्त्यजेत्सुखम् ।**
**सुखार्थिनः कुतो विद्या सुखं विद्यार्थिनः कुतः ॥३॥**

---

१. यो श्लोक मनुस्मृति ४/४६, र श्रीमद्भागवत स्कन्ध ११ मा पनि छ ।
अद्भिर्गात्राणि शुद्ध्यन्ति मनः सत्येन शुद्ध्यति ।
विद्यातपोभ्यां भूतात्मा बुद्धिर्ज्ञानेन शुद्ध्यति ॥ —(मनुस्मृति ५/१०९)
**जलादिले देह शुद्धि, मन शुद्धिन्छ सत्यले ।**
**विद्या तपले, जीवात्मा शुद्धिन्छ बुद्धि ज्ञानले ॥**

दु:ख सही पढोस् विद्या पछि आनन्द पाउँछ[१] ।
दु:ख मानी छुटे विद्या जीवन्भर् दु:ख पाउँछ
(मोक्षार्थिले पनि दु:ख सही साधन् गऱ्यो भनें ।
सुख पाउँछ आनन्द जो कि भनी नसक्किने) ॥

**यदि सुख चाहने भए विद्या छोड़िदिनू, यदि विद्या चाहन्छौ भने सुखलाई त्यागिदिनू, सुख चाहनेलाई विद्या कसरी हुन्छ र विद्यार्थीलाई सुख कसरी हुन्छ ॥ ३ ॥**

कसले के गर्न बाँकी राख्दैनन् ?

**कवयः किं न पश्यन्ति कि न कुर्वन्ति योषितः ।**
**मद्यपाः किं न जल्पन्ति किं न खादन्ति वायसाः ॥ ४ ॥**

स्त्रीले आँट गरे नसक्नु छ र के ? खाँदैन के कागले ?
देख्दैनन् कबिले र के ? मद[२] पिई भन्दैन त्यो बात के ?।
स्त्रीले जे पनि गर्दछन्, मल अनी खान्छन् सबै कागले,
देख्छन् नै कविले कुरा, मद पिई बोल्छन् ति बेशैलिले ॥

**कविहरूले कुन वस्तु देख्दैनन्, स्त्रीहरूले के गर्न सक्तैनन्, मदिरा पान गर्नेले के बोल्दैनन्, कागले के खाँदैनन् ? ॥ ४ ॥**

प्राक्कर्म बलवान् छ

**रङ्कं करोति राजानं राजानं रङ्कमेव च ।**
**धनिनं निर्धनं चैव निर्धनं धनिनं विधिः ॥ ५ ॥**

---

१. अलसस्य कुतो विद्या, अविद्यस्य कुतो धनम् ।
अधनस्य कुतो मित्रम्, अमित्रस्य कुत: सुखम् ॥—(सुभाषितरत्नभाण्डागार)
अनभ्यासेन विद्यानाम्, असंसर्गेण धीमताम् ।
अनिग्रहेण चाऽक्षाणां, व्यसनं जायते महत् ॥—(सुभाषितरत्नभाण्डागारम्)॥
२. हसति नृत्यति गायति वल्गति, भ्रमति धावति मूर्च्छति शोचते ।
पतति रोदिति जल्पति गद्‌गदं, धमति निन्दति मद्यमदातुरः ॥
—(सुभाषितरत्नसन्दोह ४९९)॥

राजा योगी अनि योगी राजा र निर्धनी धनी ।
धनी होस् त्यै दुःखी पार्ने प्राक्कर्म बलवान् छ नि ॥

**यदि विधि (भाग्य) ले चाह्यो भने दरिद्रलाई राजा, राजालाई कंगाल, धनीलाई दरिद्र (माग्ने) र दरिद्रलाई धनी पारिदिन्छ ॥५॥**

कसको को शत्रु ?

**लुब्धानां याचकः शत्रुः मूर्खाणां बोधको रिपुः।**
**जारस्त्रीणां पतिः शत्रुश्चौराणां चन्द्रमा रिपुः ॥६॥**

शिक्षा-दाता शत्रु हुन् मूर्खका त
लोभी जन्का शत्रु हुन् भिक्षुकी त ।
जार-स्त्रीका शत्रु हुन् स्वामि आफ्नै
चोर्ले मान्छन् शत्रु ता चन्द्रमा नै ॥

**लोभीहरूको लागि भिक्षुक बैरी हुन्छन्, मूर्खहरूलाई अर्ति दिने जन शत्रु हुन्छन्, व्यभिचारिणी स्त्रीहरूका शत्रु आफ्ना पति हुन्छन् र चोरको बैरी चन्द्रमा हुन्छन् ॥६॥**

सद्‌गुणविनाको मानिस पृथ्वीको भार मात्र हो :

**येषां न विद्या न तपो न दानं न चापि शीलं न गुणो न धर्मः।**
**ते मृत्युलोके भुवि भारभूता मनुष्यरूपेण मृगाश्चरन्ति ॥७॥**

विद्या, तप, दान, शील, गुण, धर्मादि छैन त ।
पृथ्वीको भार भएको पशुजस्तै भयो उ त ॥

**जसमा विद्या छैन, शील छैन, गुण र धर्म पनि छैन भने ती संसारमा पृथ्वीका भाररूप भएर मनुष्य रूपधारी मृग समान विचरण गरिरहेका छन् ॥७॥**

बुद्धि नहुनेले उपदेश लिंदैन :

**अन्तः सारविहीनानामुपदेशो न जायते ।**
**मलयाचलसंसर्गान् न वेणुश्चन्दनायते ॥८॥**

बुद्धिविहीन नरले सत् शिक्षादि लिंदैन नै ।
श्रीखण्ड सङ्गले बाँस कैल्यै चन्दन् हुँदैन नै ॥

**भित्री क्षमता विहीन पुरुषहरूलाई शिक्षा दिनु सफल हुँदैन, मलयाचलको संगत गर्दैमा बाँस चन्दन हुँदैन ॥८॥**

सद्बुद्धि नभए शास्त्रले केही गर्न सक्दैन :

**यस्य नास्ति स्वयं प्रज्ञा शास्त्रं तस्य करोति किम्?**
**लोचनाभ्यां विहीनस्तु दर्पणः किं करिष्यति? ॥९॥**

सत्-बुद्धि छैन जसमा शास्त्रले लाभ के छ र ?
आँखा छैन भने 'ऐना' के काम दिन सक्छ र? ॥

**जसको आफ्नू बुद्धि छैन त्यसलाई शास्त्र पढ़ेर के हुन्छ, जस्तै आँखा नभएकालाई दर्पण (ऐना) ले के गर्छ र ? ॥९॥**

दुर्जनलाई सज्जन गराउने उपाय छैन:

**दुर्जनं सज्जनं कर्तुमुपायो न हि भूतले ।**
**अपानं शतधा धौतं न श्रेष्ठमिन्द्रियं भवेत् ॥१०॥**

दुर्जन्लाई सज्जन् पार्ने उपाय छैन क्यै पनि[१] ।
श्रेष्ठ हुन्न मलद्वार जति धोइरहे पनि ॥

---

१. बालूमा बरु तेल खूब बलले पेले कतै आउँला
चर्का घाम चुसी-चुसी बरु कतै पीयास मेटीएला ।
मूसाको सिङ मीलला बरु कतै संसार घुम्ने गरे
प्राणी देउ परन्तु मूर्ख कहिल्यै रिझ्दैन कस्तै गरे ।।
आगाको जल, घामको र जलको छाता लुगा शीतको
तीखो अङ्कुश हात्तिको र लहुरो भैंसी गधा गोरुको ।
गर्मीको जल-वायु, मन्त्र विषको, बत्ती अँधीयारको,
सब्को औषधि दैवले रचिदियो, बिर्से छ की मूर्खको ।।
—(गुणरत्नमाला) ।
लेलान् वा बरू अर्ति मूर्ख जनले, मौका कुनै आउँदा
बुझ् पेल्ने जन जो बुझी अबुझ झैं हुन्छन् घमण्डी सदा ।
त्यस्ताले जति नै सुनुन् हित कुरा शिक्षा कहाँ धर्दछन्?
त्यस्ता सङ्गतमा त सज्जनहरू मौनी बनी बस्दछन् ।।

**दुर्जनलाई सज्जन पार्नको लागि पृथ्वीमा कुनै उपाय छैन, जस्तै मलद्वारलाई सयपल्ट धोए पनि यो उत्तम इन्द्रिय बन्दैन ॥१०॥**

कोसँग विरोध गरे केको भय हुन्छ ?

**आप्तद्वेषाद्भवेन्मृत्युः परद्वेषाद्धनक्षयः ।**
**राजद्वेषाद् भवेन्नाशो ब्रह्मद्वेषात् कुलक्षयः ॥११॥**

ब्यर्थैमा अरुको विरोध गरिए होला धनैको क्षय
आफ्ना सुजनको विरोध गरिए प्राणान्तकै भो भय ।
राष्ट्राध्यक्षको त विरोध गरिए सर्वस्वकै भो भय
ज्ञानीको गरियो कि द्वेष, कुलकै हुनेछ अन्त्यं क्षय ॥

**आप्तहरूको विरोध गर्नाले मृत्यु हुन्छ, अर्कासँग विरोध गर्नाले धनको नाश हुन्छ, राजाको विरोध गर्नाले सर्वस्व नाश हुन्छ र ब्राह्मणको द्वेष गर्नाले कुलै नष्ट हुन्छ ॥११॥**

निर्धनी भएर बस्नुभन्दा वनमा बस्नु वेश :

**वरं वने व्याघ्र गजेन्द्रसेवितं द्रुमालये पत्रफलाम्बुसेवनम् ।**
**तृणेषु शय्या शतजीर्णवल्कलम् न बन्धुमध्ये धनहीनजीवनम् ॥१२॥**

हात्ती बाघहरू हुने वनमहाँ की वृक्षका फेदमा
बास् गर्नू फलफूल खाइ खुसिले सन्तोष मानी त्यहाँ ।
आफ्ना बान्धवका समीप अति नै दुःखी भई बस्नु त
धेर् गर्छन् अपहेलना अबुझ भै टाढै हुनू वेश[१] छ ॥

**बरू बाघ हात्ती रहेको वनमा रहनु बेस छ, पाकेका फल तथा जल खाएर रूखमनि बस्नु बेस छ, घाँसमा शयन गर्नु श्रेष्ठ छ तर धनहीन भएर बन्धुहरूका बीच बस्नु श्रेष्ठ छैन ॥१२॥**

---

१. वयसि गते कः कामविकारः क्षीणे वित्ते कः परिवारः ।
शुष्के नीरे कः कासारः, ज्ञाते तत्त्वे कः संसारः ॥
—(सुभाषित सङ्ग्रह) ॥

विप्रको प्राणजस्तै हुन् गायत्री :

**विप्रो वृक्षस्तस्य मूलं च सन्ध्या वेदाः शाखा धर्मकर्माणि पत्रम् ।**
**तस्मान्मूलं यत्नतो रक्षणीयं छिन्ने मूले नैव शाखा न पत्रम् ॥१३॥**

ब्राह्मीयत्त्व छ वृक्ष मूल यिनि हुन् आचार सन्ध्या-जप
ब्राह्मीयत्त्व छ वृक्ष मूल यि त हुन् ॐकार, गायत्रि त ।
हाँगा वेद र पात धर्महरु हुन् रक्षा गरौं मूलकै[१]
(ब्राह्मीयत्व छ वृक्ष मूल त यि हुन् ॐकार, गायत्रि नै ॥
हाँगा वेद र पात धर्महरु हुन् रक्षा गरौं मूलकै ।
ॐ गायत्रि द्विजातिको 'मधु' यि हुन् आचारि भै पान् गरुन्
यै हो आश्रय मोक्ष प्राप्ति हुनमा ब्राह्मीयले यो बुझुन्) ॥

**ब्राह्मण वृक्ष र त्यसको जरा सन्ध्या (जप) हो, वेद हाँगा हो, धर्म र कर्म पात हुन्, यसलाई उद्योगले जराको रक्षा गर्नुपर्छ, जरो काटेपछि न हाँगा रहन्छन् न पत्ता, अर्थात् ब्राह्मणको मुख्य जरो सन्ध्या हो, त्यसलाई नगर्नाले न धर्म कर्म रहन्छन् न वेद रहन्छन् ॥१३॥**

तीनैलोक स्वर्गजस्तो कसरी गराइन्छ ?

**माता च कमलादेवी पिता देवो जनार्दनः ।**
**बान्धवाः विष्णुभक्ताश्च स्वदेशो भुवनत्रयम् ॥१४॥**

लक्ष्मी माता पिता विष्णु हुन् हरिभक्त बान्धव ।
यो सम्झी हरि भज्नेको तीनैलोक स्वदेश छ ॥

**जसकी माता लक्ष्मीदेवी छन्, पिता विष्णु छन् र बान्धव वा दाजु-भाइ विष्णुका भक्त छन्, तिनका निमित्त तीनै लोक आफ्नै देश हो ॥१४॥**

---

१. ॐकार प्रौढमूलः क्रमपदसहितश्छन्दविस्तीर्णशाखा
ऋक्पत्रः सामपुष्पो यजुरधिकफलोऽथर्वगन्धं दधानः ।
यज्ञच्छायासमेतो द्विजमधुपगणैः सेव्यमानः प्रभाते
मध्ये सायं त्रिकालं सुचरितचरितः पातु वो वेदवृक्षः ॥

बन्धुको साथ यस्तो छ :

**एकवृक्षसमारूढा नानावर्णा विहङ्गमाः ।**
**प्रभाते दिक्षु दशसु का तत्र परिवेदना ॥१५॥**

एउटै वृक्षमा नानाथरिका पक्षि बस्दछन् ।
लाग्छन् दशदिशातर्फ, त्यस्तै अन्त्यं जहान हुन्[१] ॥

**धेरै किसिमका पक्षीहरू एउटै वृक्षमाथि बस्दछन्, बिहान हुनासाथ दशै दिशातिर उड़िजान्छन्, त्यसमा के शोक छ? ॥१५॥**

बुद्धि नै बल हो :

**बुद्धिर्यस्य बलं तस्य निर्बुद्धेश्च कुतो बलम् ।**
**वने सिंहो मदोन्मत्तो शशकेन निपातितः ॥१६॥**

बुद्धि नै बल हो ठूलो निर्बुद्धि बलहीन हो ।
खरायोबाट उन्मत्त सिंह नै पनि मारियो ॥

**जसको बुद्धि छ त्यसैको बल छ, निर्बुद्धिलाई कहाँबाट बल हुन्छ, जस्तै वनमा मदले उन्मत्त सिंह स्यालबाट मारियो ॥१६॥**

परमात्मामा भरपर्नेलाई जीवनको चिन्ता रहँदैन:

**का चिन्ता मम जीवने यदि हरिर्विश्वम्भरो गीयते**
**नोचेदर्भकजीवनाय जननीस्तन्यं कथं निस्सरेत्।**
**इत्यालोच्य मुहुर्मुहुर्यदुपते लक्ष्मीपते केवलम्**
**त्वत्पादाम्बुजसेवनेन सततं कालो मया नीयते ॥१७॥**

के चिन्ता गरुँ खानमा हजुरको नामै छ विश्वम्भर
माताका स्तनभित्र दूध दिनुभो हे नाथ ! सर्वेश्वर ! ।

---

१. देशदेश्का बटुलिन्छन् बुझ तिमि मनले बाटका पाटिमाहाँ
बात्चित् गर्दै रहन्छन् खुसिसित मनले बन्धुझैं रात्रिमाहाँ ।
प्रातःकाल् भो सबेरै उठिकन ति सबै दश् दिशा लागि जान्छन्
बन्धूको सङ्ग यस्तो बुझिकन मुनिले दुःखसुख् एक मान्छन् ।।
—(भानुभक्तको रामायण)॥

खानानिम्ति कि वा अनेक भवका छाडी सबै चिन्तन
सम्झूँ हे परमात्म ! नित्य विभु नै आनन्द सत्-चित्-घन ॥
(रोगीवृद्ध अपाङ्ग दीन शिशुको सेवा गरौं ठान्छु म
अर्कालाइ विभिन्न शास्तिहरु दी सेवादि चाहन्न म ।
केही चीजमहाँ प्रलोभ नगरूँ चिन्ता कुनै लिन्न म
ॐ नाम स्मृति भैरहोस् हृदयमा यै प्रार्थना गर्छु म) ॥

**मैले बाँच्नमा के चिन्ता छ ? यदि विष्णु भगवान् जगत् (विश्व) कै रक्षा गर्ने छन् भने, यस्तो नभएदेखि बालकलाई बाँच्नका लागि माताको स्तनमा दूध कसरी बनाउँदथे, यसलाई बारम्बार विचार गरेर हे यदुपते ! हे लक्ष्मीपते ! सदा केवल तपाईका चरण-कमलको सेवाले म समय बिताउँछु ॥१७॥**

मोह हुने काम नगरौं :

**गीर्वाणवाणीषु विशिष्टबुद्धिस्तथापि भाषान्तरलोलुपोऽहम् ।**
**यथा सुराणाममृते च सेविते स्वर्गाङ्गनानामधरासवे रुचिः ॥१८॥**

स्वर्गैमा स्थिर छन् 'सुधा' तर अझै स्वर्गाङ्गना ओष्ठको
गर्छन् आश त तुच्छ देवहरुले मेरो त इच्छा छ यो।
भाषा संस्कृत जान्दछू, तर अरू भाषा सिके तापनि
आफ्नो मार्ग र लक्ष्यमा दृढ बनौं सम्झूँ सदा 'ॐ' भनी ॥

**यद्यपि संस्कृतमा विशेष बुद्धि छ, तर पनि अर्को भाषाको लोभी छु, जस्तै अमृत पान गर्दा पनि देवताहरूको इच्छा स्वर्गका स्त्रीहरूका ओठको रसमा पुगेकै हुन्छ ॥८॥**

विभिन्न चीजका गुणहरू:

**अन्नाद्दशगुणं पिष्टं पिष्टाद्दशगुणं पयः ।**
**पयसोऽष्टगुणं मांसं मांसाद्दशगुणं घृतम् ॥१९॥**

चामल्भन्दा त पीठो दशगुण छ बढी दशगुना दूधमा छ,
दूध्भन्दा मासु आठौंगुण बल छ बढी मासुभन्दा घिऊ त-

दश्भाग् ज्यादा गुणी हो स्वहित-अहित वा आफुल्यै सोच्नुपर्छ
हिंसक् मांसाशि कस्तो मन र पथ हो ? स्पष्ट छन् भन्नु के छ?॥

**चामलमा भन्दा दशगुना गुण पीठो (आटा) मा हुन्छ, पीठोमा भन्दा दशगुना गुण दूधमा हुन्छ, दूधमा भन्दा दशगुना मासुमा र मासुमा भन्दा दशगुना गुण घ्यूमा हुन्छ ॥१९॥**

**शाकेन रोगा वर्धन्ते पयसा वर्धते तनुः।**
**घृतेन वर्धते वीर्यं मांसान् मांसं प्रवर्धते ॥२०॥**

सागले रोग, दूध खाए शरीर, घ्यूले वीर्य, मासुले मासु बढ्छ ।
बढ्ला मासु, मासुका साथ पाप[1] बढ्छन् आफ्नै चित्तले शोच्नु वेश ॥

(हुन्छन् सागहरू अनेक थरिका छन् स्वास्थ्यकारी कुनै
कोही छन् अपवित्रमा गनियका अस्वास्थ्यकारी कुनै ।
स्थानाभाव छ ती वयान् गरुँभने जाँचेर खानू हओस्
शाकादी अनि मांस कुन् असल हो सत्-चित्तले शोच्नुहोस् ॥

मांसाशीहरुका कुरै पर रहोस् घ्यू दूध नै योग्य हुन्
घ्यूदुग्धादि पनी गरीब जनले किन्नै कहाँ सक्दछन् ?
शाकाशि पनि छन् निरोगि जन धेर् सुप्राप्य शाकादि छन्
धोई गर्नु सफा र पाक गरनू भान्से सिपालु हउन् ॥

घृणा, दया हीनका र धनाढ्यहरुका कुरा ।
छुट्टै छन् निम्नकोटिका निर्वाह निम्तिका कुरा ॥

---

१. दशरथ र पाण्डुले मांसका लोभले वन-
जाँदा पाए दूलो श्राप नपुंसकत्त्व जीवन ॥
वनविहार निहुँले मांसार्थ पशु मार्नु जो ।
देवी देवार्चना भन्दै मांस भोजन गर्नु जो ।
श्राद्धार्थ मधु हो भन्दै कीराका धन चोर्नु जो ।
राक्षसी कर्म हुन् यिन्ले हुन्न कल्याण ज्ञान्नु यो ॥

मांसाशीको अपेक्षा यदि छ त सब दिन् दूध हो स्वास्थ्य जान
गर्भैदेखिन् भएको स्तन-पय रचि यो जन्मनासाथ खान ।
यो पश्चात् अन्न शाकादि र रसहरु हो मानवी सृष्टिनिम्ति
हैनौं मांसाशि हामी ऋषिमुनि सब हौं यै सदा गर्छु विन्ति) ॥

**सागले रोग बढ्दछ, दूधले शरीर बढ्दछ, ध्यूले वीर्य बढ्दछ र मासुले मासु बढ्दछ ॥२०॥**

**(सत-रज-तम कुन् हुन् भावका छन् मनुष्य**
**उहि गुणअनुसारै खाद्यका चीज रोज्छ ।**
**विषय गुण छ जस्तो बुद्धि उब्जन्छ तेस्तै**
**बुझि सत-गुणि जन्ले नित्य खोज्छन् हविष्यै)।।**

*इति दशमोऽध्याय समाप्तम्*







# अथ एकादशोऽध्यायः

अध्ययनविना अभ्यास निरर्थक :

**दातृत्वं प्रियवक्तृत्वं धीरत्वमुचितज्ञता ।**
**अभ्यासेन न लभ्यन्ते चत्वारः सहजा गुणाः ॥१॥**

प्यारो वाणी, धीरता औ उदार
साथै सम्यक् ज्ञान मिल्नू विचार ।
अभ्यासैले मात्र पाइन्न भन्छन्
गर्नू अभ्यास् केहि दिन् सिद्ध हुन्छन्
'पूर्णाभ्यास्ले मोक्षतक् प्राप्त हुन्छन्' ॥

**दानशक्ति, प्रिय बोल्नु, धीर हुनु र उचितको ज्ञान अभ्यासबाट प्राप्त हुँदैनन्-यी चार स्वाभाविक गुण हुन् ॥१॥**

अरूको सहारा दुःखदायी पनि हुनसक्छ :

**आत्मवर्गं परित्यज्य परवर्गं समाश्रयेत् ।**
**स्वयमेव लयं याति यथा राज्यमधर्मतः ॥२॥**

स्ववर्ग सत्पथ छाडी, गर्दछ जो पराश्रय ।
नाशिन्छ त्यो, कुराजाको राज्य हुन्छ पराजय ॥

**जसले आफ्नालाई छोड़ेर अर्काको आश्रय लिन्छ, त्यो स्वयं नष्ट हुन्छ, जस्तै पापले राज्य नष्ट हुन्छ ॥२॥**

तेज नै ठूलो हो :

**हस्ती स्थूलतनूः स चाङ्कुशवशः किं हस्तिमात्रोंऽकुशः**
**दीपे प्रज्वलिते प्रणश्यति तमः किं दीपमात्रं तमः ।**
**वज्रेणाऽपि हताः पतन्ति गिरयः किं वज्रमात्रं नगाः।**
**तेजो यस्य विराजते स बलवान् स्थूलेषु कः प्रत्ययः ॥३॥**

हात्ती अङ्कुशले, बत्ती बालेर अन्धकारको ।
पहाड वज्रले फोर्छ तेज नै बलवान हो ॥
ब्रह्मज्ञान सदाचार नरको मुख्य तेज हो ॥

**हात्तीको स्थूल (मोटो) शरीर छ, तर पनि त्यो अंकुशको वशमा रहन्छ, के हात्तीको समान अंकुश छ ? दीयो बल्नासाथ अन्धकारको नाश हुन्छ, के दीयो अन्धकारको समान छ ? वज्रले पर्वत लडाउँछ के बज्र जत्रै पर्वत छ ? जसमा तेज विराजमान छ त्यही बलवान् हुन्छ ? मोटोमा के विश्वास छ र ? ॥३॥**

मानिसमा विश्वाशको ह्रास

**कलौ दशसहस्राणि हरिस्त्यजति मेदिनीम् ।**
**तदर्द्धं जान्हवीतोयं तदर्द्धं ग्रामदेवताः ॥४॥**

दशहजार् कलिमा विष्णु, गङ्गा पाँचहजारमा ।
पच्चीससयमा ग्रामदेव्ले छोड्छन् धरत्रिमा ।
(छाड्ने हैनन् देवताले भक्ति हुन्न मनुष्यमा) ॥

**दश हजार वर्ष कलियुग सकिएपछि विष्णुले पृथ्वीलाई त्यागिदिन्छन् त्यसको आधा भएपछि गंगाजीको जलले मुक्ति दिने शक्तिलाई छाड़िदिन्छन्, यसको आधा व्यतीत भएपछि ग्रामदेवताले गाउँलाई त्याग गरिदिन्छन् ॥४॥**

कसमा के हुँदैन ?

**गृहासक्तस्य नो विद्या नो दया मांसभोजिनः।**
**द्रव्यलुब्धस्य नो सत्यं स्त्रैणस्य न पवित्रता ॥५॥**

आसक्ती घरमा गरे त उसमा आओस् र विद्या कहाँ?
लोभीमा रहँदैन सत्य बुझनू त्यस्तै व्यभीचारिमा ।
हूँदैहुन्न पवित्रता, अनि दया हुँदैन मांसाशिमा
प्राणीघातविना त मांस कुन होस् ? यादै छ सम्पूर्णमा ॥
मांसाशी छ भने गए अरू सबै सत्-धर्म नै ब्यर्थमा ॥

**घरको काममा अत्यन्त लीन हुनेलाई विद्या हुँदैन, मासु खानेलाई दया हुँदैन, धनमा जो लोभी छ त्यसमा सच्चाइ हुँदैन र व्यभिचार गर्ने व्यक्तिमा पवित्रता हुँदैन ॥५॥**

## दुर्जनमा शिक्षा व्यर्थ

**न दुर्जनः साधुदशामुपैति बहुप्रकारैरपि शिक्ष्यमाणः ।**
**आमूलसिक्तः पयसा घृतेन न निम्बवृक्षो मधुरत्वमेति ॥६॥**

जति शिक्षा दिउँ किन्तु दुर्जन साधु हुन्न[1] है ।
नीममा मिश्रिले मीठो पार्न सक्दैन त्यो कसै ॥

**दुर्जनलाई धेरै प्रकारले सिकाए पनि त्यो साधुता अथवा साधुको अवस्थामा प्राप्त हुँदैन, जस्तै नीमको रुखलाई जरादेखि नै दूध घ्यूले नै जस्तै सिंचियोस्, तर पनि त्यो मधुरतामा प्राप्त हुँदैन ॥६॥**

## दुष्ट मानिसले तीर्थ स्नान गर्नु ब्यर्थ छ

**अन्तर्गतमलो दुष्टस्तीर्थस्नानशतैरपि ।**
**न शुद्ध्यति यथा भाण्डं सुराया दाहितं च यत् ॥७॥**

चित्त दुष्ट भए तीर्थ सयौं स्नान गरे पनि ।
शुद्ध हुन्न मद्य-मांस-पात्र माझोस तापनि ॥
(मद्य मांसाशिका शुद्धि-संस्कार विधि शास्त्रमा ।
छन्, दुष्टचित्तको शुद्धि पाइँदैनन् जहाँ-तहाँ)॥

**जसको हृदयमा पाप छ, अथवा तापादि छ, त्यस्तो दुष्टले सयौंपल्ट तीर्थस्नान गरे पनि शुद्ध हुँदैन, जस्तै मदिराको भाँडो आगामा जलाए पनि त्यो शुद्ध हुँदैन ॥७॥**

## आफूमा सद्गुण नहुनेले अरूको निन्दा गर्छ

**न वेत्ति यो यस्य गुणप्रकर्षं स तं सदा निन्दति नात्र चित्रम् ।**
**यथा किराती करिकुम्भलब्धां मुक्तां परित्यज्य विभर्त्ति गुञ्जाम् ॥८॥**

१. अमृतं किरति हिमांशुः, विषमेव फणी समुद्गिरति ।
गुणमेव वक्ति साधुः, दोषसमाधुः प्रकाशयति ॥ —(सुभाषितरत्नभाण्डागारम्)।

जस्ले सद्गुण जान्दैन निन्दा गर्छ अबूझले ।
मोती छाडी काँच भिर्छन् भिल्लिनी वनवासिले ।।
(वनवासी पनी अैले प्राय: गृहस्थि नै भए ।
तर सद्गुण छाडी क्वै दुर्गुणी जन् हुँदै गए) ।।

**जो जसको गुणको यथार्थ उत्तमतालाई जान्दैन, त्यो निरन्तर त्यसको निन्दा गर्दछ, यो आश्चर्य छैन, जस्तै भिल्लिनीहरू हात्तीका मस्तकको मोती छोडेर रातीगेड़ी लगाउँदछन् ॥८॥**

कुनै ठाउँमा मौन रहनु वेश हुन्छ

**ये तु संवत्सरं पूर्ण नित्यं मौनेन भुञ्जते ।**
**युगकोटिसहस्रान्तः स्वर्गलोके महीयते ॥९॥**

खाँदा, सन्ध्यादिमा नित्य मौन रहनु वेश छ ।
एक वर्ष गरे मात्रै पनि सत्पुण्य पाउँछ ।।

**संसारमा जो पूरा सालभरि सदा मौन भएर भोजन गर्दछन् ती कोटियुगसम्म नै स्वर्ग लोकमा पूजिन्छन् ॥९॥**

विद्या प्राप्त गर्न चाहनेले छोड्नु पर्ने आठ चीजहरू

**कामक्रोधौ तथा लोभः स्वादु शृङ्गारकौतुके ।**
**अतिनिद्राऽति सेवा च विद्यार्थीह्यष्ट वर्जयेत्[1] ॥१०॥**

अति निद्रा अती सेवा, काम, क्रोधादि लोभ र ।
शृङ्गार, यात्रा, मीठो चीज् त्यागुन् विद्यार्थीले यी त ।।
(यी आठ चीज र अनि आमिष्य तामसी चिज ।
योगाभ्यासी साधकीले पनि त्यागनु पर्दछ) ।।

**काम, क्रोध, लोभ, मीठो पदार्थ, शृङ्गार, तमाशा, अति निद्रा र अति सेवा-यी आठलाई विद्यार्थीले छोड़ि दिनुपर्छ ॥१०॥**

---

१. काकचेष्टा बकध्यानं श्वाननिद्रा तथैव च ।
अल्पाहारी गृहत्यागी विद्यार्थी पञ्चलक्षणम् ॥

ऋषि कस्तालाई भनिन्छ ?

**अकृष्टफलमूलानि वनवासरतिः सदा ।**
**कुरुतेऽहरहः श्राद्धमृषिविप्रः स उच्यते ॥११॥**

'कर्मानुसारका नाम भन्छु मानवमात्रको ।'
हविष्यान्न कि वा मूल[१] फलादि मात्र खान्छ जो ।
एकान्तवासी सत्कर्मी विप्र त्यो 'ऋषि' नाम हो॥

**कहिल्यै पनि नजोतिएको भूमिबाट उत्पन्न भएको फल अथवा मूल (कन्द) लाई खाएर सदा वनवासमा प्रीति गर्ने, प्रतिदिन श्राद्ध गर्ने, यस्ता ब्राह्मण ऋषि कहलाउँछन् ॥११॥**

द्विज कस्तालाई भनिन्छ ?

**एकाहारेण सन्तुष्टः षट्कर्मनिरतः सदा ।**
**ऋतुकालाभिगामी च स द्विजो द्विज उच्यते ॥१२॥**

सत् यज्ञादि गराउने, गरिलिने पढ्नू, पढाऊनु भो
दान् गर्नू, लिनु यी छ कर्म गरने हुन्छन् हविष्याशि जो।
स्त्रीसङ्गम् ऋतुकाल[२] मात्र गरने त्यो विप्र भन्छन् 'द्विज'
पढ्नू, दान दिनू र याज्ञिक हुनू यी मात्र उत्तम् बुझ ॥
यीभन्दा अतिरिक्त तीन् बुझनु है हुन् वृत्तिका[३] केवल ॥

---

१. मूल=जमिनभित्र रहने वा फल्ने कन्दमूल आदि, जस्तैः शकरकन्द, तरुल, पिंडालु आदि ।

२. **ऋतुकाल**=परसरेको (रजस्वला भएका) चारौं दिन उप्रान्त सोह्रराँतसम्मको बेला । यो समय गर्भाधानको लागि उपयुक्त मानिन्छ ।
ती सोह्र दिनभित्रमा जोरदिन (८,१०,१२,१४,१६ औं रात्री) को पुत्र र विजोर दिन (५-७-९ आदि) का गर्भ पुत्री हुन्छन् भन्ने कसैको मत छ।
**तत्रायुग्मदिने स्त्री स्यात् पुमान् युग्मदिने भवेत्** ।।(शिव गीता अ.८/श्लो.८)
**बाहुल्याद्रजसा स्त्रीस्याच्छुक्राधिक्ये पुमान्भवेत्** । —(शिव गीता ८/६)
साथै ती सोह्र दिनमा र अरू दिनमा पनि आत्मकल्याणार्थी जनले अमावास्या (औंसी); पूर्णिमा; एकादशी आदि तिथिहरूमा र अरू पुण्य पर्व एवं रवि (आइत) वार यस्तामा ऋतुदान (स्त्रीसङ्गम) गर्दैनन् ।

**एकछाक भोजनले सन्तुष्ट रहने, छः कर्म गर्नु, यज्ञादि गर्नु यज्ञादि गराउनु, दान दिनु, दान लिनुमा सधै तत्पर रहने, ऋतु समयमा मात्र स्त्री प्रसंग गर्ने त्यो द्विज ब्राह्मण कहिन्छ ॥१२॥**

## पारमार्थिक षट्कर्मी ब्राह्मण

(छन् 'षट्कर्म' त पारमार्थिकहरू ब्राह्मीयका भन्छु त्यो
स्नान्, सन्ध्या, र परोपकार गरने जप्, होम, वेद्‌पाठि भो।
सत्याचारि दयालु ब्रह्मरत जो त्यो ब्रह्मकै मूर्ति हो
सन्मार्गी यिनलाइ 'ब्राह्मण' भनी जान्नोस यो शास्त्रको ॥

## वैश्यसंज्ञक द्विज

**लौकिके कर्मणि रतः पशूनां परिपालकः ।**
**बाणिज्य कृषिकर्मा यः स द्विजो वैश्य उच्यते ॥१३॥**

संसारका कर्ममहाँ रमेको खेती र व्यापारहरू गरेको।
गाहर्स्थ्य भै जो पशु पालने हो त्यो विप्रको नाम त 'वैश्य' नै हो ॥

**सांसरिक कर्ममा रत भएका पशुहरूको पालन र खेती गर्ने ब्राह्मण वैश्य कहलाउँछ ॥१३॥**

## कस्ता व्यक्तिहरू शूद्र कहलाइन्छन् ?

**लाक्षादितैलनीलानां कौसुम्भमधुसर्पिषाम् ।**
**विक्रेता मद्यमांसानां स द्विजो शूद्र उच्यते ॥१४॥**

---

१. प्राणार्थ रक्षावश बाध्यताले, खेती र व्यापार गरोस् अरू जे ।
आमिष्य खाने मद मांस बेच्नु बाख्राकुखुरा पालने निन्द्य मान्नु ॥

लाहा, घिऊ, तेल र मद्य मांस बेच्ने छ जो दूध्, मह आदि चीज ।
जन्मोस् त त्यो ब्राह्मणलाइ किन्तु त्यो शूद्र मानिन्छ छ कर्म-हेतू ॥

**जसले लाहा आदि पदार्थ, तेल, नीर, कुसुम, मह, घ्यू मदिरा, मासुको व्यापार गर्छ त्यो ब्राह्मण शूद्र कहलाउँछ ॥१४॥**

कस्ता व्यक्तिहरू बिरालो जस्ता हुन् ?

**परकायनिहन्ता च दाम्भिकः स्वार्थसाधकः ।**
**छली द्वेषी मृदु क्रूरो विप्रो मार्जार उच्यते ॥१५॥**

अर्काको काम् बिगार्ने सुर गरिरहने; आफनै काम मात्र
हेर्दा शान्तात्म अन्तस्करण हरबखत् क्रूर द्वेषी छली छ ।
हिंसक् मांसाशि जो हो उसकन बुझनू त्यो बिरालोसरीको
जन्मोस् जुन् जातमा होस् सुमति कुमति हो उच्चनीचादि जात्को ॥

**अर्काको कामलाई नाश गर्ने, अहङ्कारी, आफ्नो कामलाई मात्र साध्ने, छली, क्रोधी, बाहिर कोमल र भित्र निष्ठुर छ, त्यो ब्राह्मण बिरालो कहलाउँछ ॥१५॥**

कस्तालाई म्लेच्छ भनिन्छ ?

**वापीकूपतडागानामाराम-सुर-वेश्मनाम् ।**
**उच्छेदनो निराशंकः स द्विजो म्लेच्छ उच्यते ॥१६॥**

देवालय, जलाशय, बगैंचाहरू तोड्छ जो ।
मांसाशी हिंसकी विप्र हो त्यो म्लेच्छ समानको ॥

**इनार, कुवा, तलाउ, बगैंचा, देवालय यिनलाई तोड्नमा जो निर्भय छ, त्यही ब्राह्मण म्लेच्छ कहलाउँछ ॥१६॥**

मौरीको गुनासो

**देयं भोज्यधनं धनं सुकृतिभिर्नो सञ्चयस्तस्य वै**
**श्रीकर्णश्च बलेश्च विक्रमपतेरद्यापि कीर्तिः स्थिता ।**

**अस्माकं मधु दानभोगरहितं नष्टं चिरात् सञ्चितम्**
**निर्वाणादतिनैजपादयुगलं घर्षत्यहो मक्षिकाः ॥१७॥**

खाउन् दान गरुन् न साँच्नु बढि ता द्रव्यादि सद्वर्गले
दानीमा बलि, कर्ण, विक्रमहरू गाइन्छ सत्कीर्तिले ।
ल्याऊँछौं 'मधु' लुट्दछन् मनुजले छाडी दया चित्तमा
पायौं खान न हामि दानि गनियौं मौरी त छौं शोकमा[१] ॥

(मनुज जुनि मिलेरै मात्र सार्थक्य छैनन्
पशुसरि अनि नाना वर्णमा यो गनिन्छन् ।
मधु बननु छ प्यारो आफ्नु मीठो स्वभाव
सकल मधुमयी भै पाउँछौ शान्ति लाभ) ॥

**पुण्यवान्हरूले सधै भोजन धन दान गर्नुपर्छ, यसको संचय गर्नु हुन्न । श्री कृष्णको, बलिको र विक्रमादित्यको कीर्ति आजसम्म पनि स्थित छ । दान भोग आदिले रहित भै धेरै दिनदेखि संचित गरेको हाम्रो मह नष्ट भयो भनी माहुरीहरू मधु नाश भएको पीरले दुवै खुट्टा रगड्छन् ॥१७॥**

**( ऋषि, द्विज अनि ब्राह्मीयत्व भो वैश्य, शूद्र**
**मनुज पनि बिरालो, म्लेच्छ, चाण्डालसंज्ञ ।**
**यवन-मुसलवान्तक् हामि नै पो भनिन्छौं**
**सुपथ-कुपथ कर्मैले विभिन्नै गनिन्छौं ) ॥**

*॥ इति एकादशोऽध्याय-समाप्तम् ॥*

१. महसम्बन्धी विशेष जानकारीका लागि **दिव्यमधुमा** मौरीको गुनासो र **ब्रह्मकर्म, कर्तव्य दर्पण, सुदामाको कनिका** आदि पुस्तकहरू अवश्य हेर्नुहोला ।
पिपीलिकार्जितं धान्यं, मक्षिका संचितं मधु ।
लुब्धेन सञ्चितं द्रव्यं, समूलं च विनश्यति ॥
दातव्यं भोक्तव्यं, सति विभवे सञ्चयो न कर्तव्यः ।
पश्यन्तु मधुकरीणां, सञ्चितमर्थं हरन्त्यन्ये ॥—(सुभाषितरत्नभाण्डागार) ॥

# अथ द्वादशोऽध्यायः

यस्तो गृहस्थाश्रम धन्य हो :

**सानन्दं सदनं सुतास्तु सुधियः कान्ता प्रियालापिनो**
**इच्छापूर्तिधनं स्वयोषितरतिः स्वाज्ञापराः सेवकाः।**
**आतिथ्यं शिवपूजनं प्रतिदिनं मिष्ठान्नपानं गृहे**
**साधोः सङ्गमुपासनं च सततं धन्यो गृहस्थाश्रमः ॥ १ ॥**

राम्रो होस् घर, पुत्र बुद्धिमत होस् नारी सुशीला हओस्,
इच्छामाफिक द्रव्य होस् र घरमा मिष्ठान्न भर्पूर होस् ।
सेवक् स्वाधिनका हउन्, अतिथिको सेवा र सत्सङ्ग होस्
भक्ति श्री परमात्मको गरुँ सदा हे ईश! यै बक्सियोस् ॥

**आनन्दयुक्त घर होस्, बुद्धिमान् पुत्र हुन्, स्त्री प्रिय बोल्ने होस्, इच्छा पूर्ति गर्ने धन होस्, आफ्नी स्त्रीमैं मैथुन होस्, आफ्नू आज्ञा पालन गर्ने नोकर हउन्, अतिथिको सेवा र शिवको पूजा भइरहोस्, प्रतिदिन घरमा खान-पान मीठो मिलोस्, सधैं साधुहरूको उपासना (आगमन) होस्, यस्तो गृहस्थाश्रम प्रशंसनीय र धन्य छ ॥ १ ॥**

दान कस्तालाई दिने ?

**आर्तेषु विप्रेषु दयान्वितश्च यच्छ्रद्धया स्वल्पमुपैति दानम् ।**
**अनन्तपारं समुपैति राजन्! यद्दीयते तन्न लभेद् द्विजेभ्यः ॥ २ ॥**

जो छन् दयावान् जनले गरीब[१]-ब्राह्मीयलाई दिनु दान वेश ।
थोरै हओस् त्यो फल धेर मिल्छ; धनीहरुमा दिनु ब्यर्थ हुन्छ ।

१. गेयं गीता नामसहस्रं, ध्येयं श्रीपतिरूपमजस्रम् ।
नेयं सज्जनसङ्गे चित्तं, देयं दीनजनाय च वित्तम् ॥
—(भजगोविन्दम्स्तोत्र) ॥

**दयावान् मनुष्यले दुःखी ब्राह्मणलाई जो श्रद्धाले दान दिन्छ, थोरै पनि त्यो त्यसलाई असीम भएर प्राप्त हुन्छ, जो दिइन्छ त्यो ब्राह्मणहरूबाट नहरियोस् तब ॥२॥**

कस्तासँग कस्तो व्यवहार गर्ने ?

**दाक्षिण्यं स्वजने दया परजने शाठ्यं सदा दुर्जने**
**प्रीतिः साधुजने स्मयः खलजने विद्वज्जने चार्जवम्।**
**शौर्यं शत्रुजने क्षमा गुरुजने नारीजने धूर्तता**
**इत्थं ये पुरुषाः कलासु कुशलास्तेष्वेव लोकस्थितिः॥३॥**

आफ्ना बान्धवमा उदार र दया गर्ने अरू सर्वमा
राखोस् प्रीति सुविज्ञ साधुहरुमा होस् शूरता शत्रुमा ।
स्त्रीका साथ त धैर्य, मूर्खसँगमा पर्दा बसोस् होशमा
जानोस् योग्य कला बन्यो प्रिय उही सम्झी लिनू चित्तमा ॥

**स्वजनमा चतुरता, परिवारमा दया, दुर्जनमा शठता, भला मानिससँग प्रेम, दुष्ट जनहरूमा खिल्ली, विद्वान्हरूमा नम्रता, शत्रुहरूमा शूरता, बड़ो मानिसका विषयमा क्षमा, स्त्रीसँग धूर्तता यी कलामा जो जनहरू कुशल हुन्छन् तिनीहरूमा नै लोकको स्थितिमा रहन्छ ॥३॥**

कस्तो शरीर निन्द्य हो ?

**हस्तौ दानविवर्जितौ श्रुतिपुटौ सारस्वतद्रोहिणौ**
**नेत्रे साधुविलोकनेन रहितं पादौ न तीर्थं गतौ।**
**अन्यायार्जितवित्तपूर्णमुदरं गर्वेण तुङ्गं शिरः**
**रे रे जम्बुक मुञ्च मुञ्च सहसा नीचं सुनिन्द्यं वपुः ॥४॥**

(मुर्दा खानै आउने स्यालनेर आकाशवाणी भो नखानू भनेर ।
यस्को देहै नीच औ निन्द्यको छ यो खाएमा के हुने हो भविष्य?)॥

सत्-शास्त्रादि सुन्यो न दान हुनगो, सज्जन् महात्मादिको
सेवा दर्शन नै गऱ्यो न यसले इच्छा न सत्कर्मको ।
अन्यायार्जित अन्न छन् उदरमा यो नीच हो निन्द्य हो
गर्वी हो बुझि यो नखा तँ कहिल्यै हे स्याल! सम्झी त यो ॥

**दान नदिने हात, श्रुति सुन्न द्रोह गर्ने कान, साधुको दर्शन नगर्ने आँखा, तीर्थ नजाने गोडा, अन्यायको आर्जनले भरिने पेट, घमण्डले घोर्लिएको शिर भएका अरे धूर्त स्याल हो ! यस्तो अति निन्दित शरीरलाई तुरन्त त्याग ॥४॥**

हरिभक्तिविनाको जीवन व्यर्थ छ :

**येषां श्रीमद्यशोदासुतपदकमले नास्ति भक्तिर्नराणां**
**येषामाभीरकन्याप्रियगुणकथने नानुरक्तारसज्ञा ।**
**येषां श्रीकृष्णलीलाललितरसकथा सादरौ नैवकर्णौ**
**धिक्तान् धिक्तान् धिगेतान् कथयति सततं कीर्तनस्थो मृदङ्गः ॥५॥**

श्रीहरि नाम[१] जप्दैन कथा सुन्दैन जो नर ।
मृदङ्गले त्यसलाई धिक्-धिक् छ भनि भन्दछ ॥

**जसको भक्ति श्रीयशोदा नन्दन (भगवान् कृष्ण) का चरण कमलमा छैन, जसको जिभ्रो गोपिनीहरूको प्रियकथा कहनामा छैन, जसका कान श्रीकृष्णजीको मनोहर कथाको रसमा आदर गर्दैनन्; तिनलाई धिक्कार छ, तिनलाई धिक्कार छ भनी कीर्तनमा रहेको मादलले सधैं भन्दछ ॥५॥**

कुनैमा केही नहुँदैमा प्रकृतिलाई दोष दिनु हुँदैन :

**पत्रं नैव दया करीर विटपे दोषो वसन्तस्य किं**
**नोलूकोऽप्यवलोकते यदि दिवा सूर्यस्य किं दूषणम् ।**

---

१. हरिः सेव्यो हरिर्ज्ञेयो, हरिर्ध्येयो निरन्तरम् ।
हरिः श्रव्यो हरिर्गेयो, हरिमेवाप्नुयात् तदा ॥—(सिद्धान्तसंक्षेपनिरुपणम्)॥
अविनयमपनय विष्णो दमय, मनः शमय विषय-मृगतृष्णाम् ।
भूतदयां विस्तारय, तारय संसार-सागरतः ॥—(षट्पदीस्तोत्र) ॥

**वर्षा नैव पतन्ति चातकमुखे मेघस्य किं दूषणम्**
**यत्पूर्वं विधिना ललाट लिखितं तन्मार्जितुं कः क्षमः ।।६।।**

केको दोष वसन्तमा 'करिर[१]'मा आएन पातै भनी
के होस् दोष त सूर्यको 'उलुक' ले देखेन आँखा भनी ।
पाउन्नन् जल खान 'चातक' हरू के दोष होस् मेघको
भोग्नै पर्दछ पूर्वकर्म सबले आ-आफनै जो छ त्यो ।।

**यदि करीरको वृक्षमा पात हुँदैन भने वसन्तको के दोष छ, यदि लाटोकोसेरो दिनमा देख्दैन भने सूर्यको के दोष छ, काकाकुलको मुखमा वर्षेको पानी पर्दैन भने मेघको के दोष छ, जो ब्रह्माले पहिले ललाटमा लेखिदिएका छन् त्यसलाई मेट्न को समर्थ छ ?।।६।।**

सत्सङ्ग महिमा :

**सत्सङ्गाद् भवति हि साधुता खलानां**
**साधूनां न हि खलसङ्गतः खलत्वम् ।**
**आमोदं कुसुमभवं मृदेव धत्ते**
**मृद्गन्धं नहि कुसुमानि धारयन्ति ।।७।।**

दुर्जन् नै पनि साधु-सङ्गत भई साधुत्वमा आउँछन्
सज्जन्वर्ग त दुष्टको सँग पनी साधुत्वमैं बस्दछन् ।
माटाले लिन सक्छ फूलहरूको जो गन्ध हो, फूलले
सक्दैनन् लिन गन्ध ता पृथिविको पूर्णाङ्गता चालले ।।

**निश्चय छ कि राम्रो संगतले दुष्टहरूमा साधुता हुन्छ, परन्तु दुष्टहरूको संगतले साधुहरूमा दुष्टता हुँदैन । जस्तै माटोले फूलबाट उत्पन्न गन्ध ग्रहण गर्दछ, परन्तु फूलले माटोको गन्ध ग्रहण गर्दैन ।।७।।**

साधुको महिमा :

**साधूनां दर्शनं पुण्यं, तीर्थभूता हि साधवः ।**
**कालेन फलते तीर्थं सद्यः साधुसमागमः ।।८।।**

---

१. करीर = हरियो बाँसको टुप्पा, उलूक=उल्लू, लाटोकोसेरो ।
चातक=काकाकुल ।

गर्छन् शुद्ध त बाह्यतीर्थ जलले भित्री त तेसै रहे
ठूलो तीर्थ त साधु सङ्गत[1] छ है सेवा र शिक्षा लिए।
षट् छन् शत्रु ति जित्नु युक्तिहरुले ब्रह्मज्ञता पारने
ज्ञानी सज्जनमा छ शक्ति भवको यो सिन्धु नै तारने ॥

**साधुहरूको दर्शन नै पुण्य हो, यसकारण साधु तीर्थरूप हुन्, तीर्थ समयले फल दिन्छ, तर साधुहरूको संगत गर्नाले तुरुन्त नै फल दिन्छन् ॥८॥**

भवाटवी शहर यस्तो छ :

**विप्रस्मिन्नगरे महान् कथय कस्तालद्रुमाणां गणाः।**
**को दाता रजको ददाति वसनं प्रातर्गृहीत्वा निशि ॥**
**को दक्षः परवित्तदारहरणे सर्वोऽपि दक्षो जनः**
**कस्माज्जीवसि हे सखे !विषकृमि न्यायेन जीवाम्यहम् ।।९॥**

ठूलो के छ त ? ताडको रुख छ यो, दाता छ को ? धोबि छ
लान्छन् बस्त्र बिहान साँझ त दिने, को छन् चलाख् ? द्रव्य र
स्त्री हर्ने अरुका चलाख यि त छन् बाँच्छौ कसोरी यहाँ ?
बाँच्छन् ती विषका किरादि विषमैं त्यस्तै म बाँच्छू यहाँ ॥

**हे विप्र हो ! भन, यस नगरमा को महान् छ ? तारका वृक्षका समूह । को दानशील छ ? धोबी । जो प्रातःकालमा**

१. न ह्यम्मयानि तीर्थानि न देवा: मृच्छिलामया: ।
न पुनन्त्युरुकालेन दर्शनादेव साधव: ॥ (श्रीमद्भागवत १०/४८/३१)॥
तृणां छिन्धि भज क्षमां जहि मदं, पापे रतिं मा कृथा: ।
सत्यं ब्रूह्यनुयाहि साधु-पदवीं, सेवस्व विद्वज्जनान् ॥
मान्यान् मानय विद्विषोऽप्यनुनय, ह्याच्छादय स्वान् गुणान् ।
कीर्तिं पालय दु:खिते कुरु दयामेतत् सतां लक्षणम् ॥
—(नीति शतक ७८) ।
गङ्गा पापं शशी तापं, दैन्यं कल्पतरूस्तथा ।
पापं तापं च दैन्यं च हन्ति साधुसमागम: ॥ —(सुभाषितरत्नभाण्डागारम्)।

**कपड़ा लिएर साँझमा दिन्छ ? चतुरो को छ ? अर्काको धन र स्त्रीहरण गर्नमा सबै निपुण छन् । तब कसरी बाँच्दछौ ? हे मित्र! विषको कीराको नियमले म बाँच्दछु ॥९॥**

यस्तो घर स्मशानघाट समान हो :

**न विप्रदादोदककर्दमानि**
**न वेदशास्त्रध्वनिगर्जितानि ।**
**स्वाहास्वधादानविवर्जितानि**
**श्मशानतुल्याणि गृहाणि तानि॥१०॥**

सज्जन् विप्रादि सेवा न त छ श्रुति र सत्-शास्त्रको नै ध्वनीको
हुन्न् होमार्चना श्री हरिहर विभुको, साथ मातापिताको-
शुश्रूषा छैन जाहाँ त्यस घर बुझनू त्याज्य यद्वा श्मशान
मूर्दाघाटै सरी हो भनि सकल नै शास्त्रको वाक्य जान ॥

**जुन घरमा ब्राह्मणको चरणोदकले हिलो भएको छैन, जुन घरमा वेदशास्त्रको शब्दको ध्वनि गर्जन्न, जुन घर स्वाहा र स्वधाले हीन छ, त्यस घरलाई श्मशान समान संझे हुन्छ ॥१०॥**

षट् बान्धवहरू कुन् कुन् हुन् ?

**सत्यं माता पिता ज्ञानं धर्मो भ्राता दया सखा ।**
**शान्तिः पत्नी क्षमा पुत्रः षडेते मम बान्धवाः ॥११॥**

सत्य माता, पिता ज्ञान, धर्म भाइ, दया सखा ।
शान्ति पत्नी, क्षमा पुत्र, मेरा हुन् यी 'छ' बन्धु ता॥
छः ओटा बन्धु छन् जस्का जीवनै मुक्त हो उ ता ॥

**सत्य मेरी माता, ज्ञान मेरा पिता, धर्म मेरो दाजु, दया मेरो मित्र, शान्ति मेरो पुत्र-यिनै छः मेरा बन्धु हुन् ॥११॥**

धर्ममैं मन लगाऔं :

**अनित्यानि शरीराणि विभवो नैव शाश्वतः ।**
**नित्यं सन्निहितो मृत्युः कर्तव्यो धर्मसङ्ग्रहः ॥१२॥**

अनित्य देह छ, नित्य रहँदैन कुनै धन ।
काल समीपमा नै छ धर्ममैं लाउ हे मन! ॥

**यो शरीर अनित्य छ, धन पनि स्थिर छैन, मृत्यु सधैं निकटै छ, यसै कारणाले हमेशा धर्मको सङ्ग्रह गर्नुपर्दछ ॥१२॥**

को केबाट खुसी ?

**निमन्त्रणोत्सवा विप्रा गावो नवतृणोत्सवाः ।**
**पत्युत्सववती नारी अहं कृष्ण रणोत्सवः ॥१३॥**

विद्वान् खुशी आदरले, गौ खुसी वेश घाँसले ॥
स्त्री खुसी सत्पति पाए, म खुशी छु स्व-धर्मले ॥—अर्जुन

**ब्राह्मणहरू निमन्त्रणाले, गाईहरू हरियो घाँसले, स्त्रीहरू पतिले रमाउँछन्, मचाहिं हे कृष्ण ! धर्मसहितको लड़ाइँमा उत्सुक छु ॥१३॥**

वास्तविक आँखा देख्ने को हो ?

**मातृवत् परदारांश्च[1] परद्रव्याणि लोष्ठवत् ।**
**आत्मवत्सर्वभूतानि यः पश्यति स पश्यति ॥१४॥**

परस्त्रीलाई माताझैं, परद्रव्य विषैसरि ।
आफूजस्तै सबै प्राणी देख्छ जो नेत्रवान् हो उही ॥
यो देख्दैन त अन्धो हो, अन्धो 'गँडेउला' सरि ॥
(परस्त्री र मद्य मांस जुवा कुकर्म हुन् सबै ।
बुद्धिमान् मानिस कैल्यै नलाग्नु यिनमा कसै) ॥

**अर्काकी स्त्रीलाई माता समान, अर्काको धनलाई माटो समान, सबै जीवहरूलाई आफ्नै समान जसले देख्दछ, त्यही पण्डित हो ॥१४॥**

१. अहरत् न परद्रव्यम्, अपश्यत् न परस्त्रियः ।
नाऽपीडयत् परप्राणान्, स धर्मज्ञो नरःस्मृतः ॥ —(संस्कृत पद्य संग्रह)
नो दृष्टवान् परस्त्रीं, नो परहृदयं कदापि पीडितवान् ।
न स्पृष्टवान् परस्वं, मनुजसमाजं स भूषितवान् ॥
**कुदृष्टि राख्दैन परस्त्रिमा जो, गर्दैन आशा परद्रव्यमा जो ।**
**दुखाउँदैनन् मन जो कसैको, त्यो धन्य हो मानव देवजस्तो ॥**

भगवान् राममा भएका सद्गुणहरूको झलक :

**धर्मे तत्परता मुखे मधुरता दाने समुत्साहता,**
**मित्रेऽवञ्चकता गुरौ विनयता चित्तेऽति गम्भीरता!**
**आचारे शुचिता गुणे रसिकता शास्त्रेषु विज्ञप्तृता**
**रूपे सुन्दरता शिवे भजनता त्वय्यस्ति भो राघव! ॥१५॥**

तत्पर् धर्ममहाँ छ जो मुख सदा माधुर्यता युक्त छ
दानी चित्त छ, नम्रता गुरुजिमा मित्रादिमा प्रेम छ ।
सत्-शास्त्रज्ञ र भक्ति श्री शिवजिमा आचारमा शुद्ध छ
सारा सत्गुण छन् हजूरसँग नै हे राम ! सर्वेश्वर!॥

**धर्ममा तत्परता, मुखमा मधुरता, दानमा अति उत्सुकता, मित्रमा निश्छलता, गुरुमा नम्रता, चित्तमा गम्भीरता, आचरणमा पवित्रता, गुणमा रसिकता, शास्त्रहरूमा विशेष ज्ञान, रूपमा सुन्दरता, शिवजीमा भक्ति, हे राघव ! यी सबै विशेषता हजूरमा नै छन् ॥१५॥**

परमात्मा निरुपमेय छन् :

**काष्ठं कल्पतरुः सुमेरुरचलश्चिन्तामणिः प्रस्तरः।**
**सूर्यस्तीव्रकरः शशिक्षयकरः क्षारो हि वारां निधिः॥**
**कामो नष्टतनुर्बलिर्दितिसुतो नित्यं पशुः कामगौ-**
**र्नैतांस्ते तुलयामि भो रघुपते कस्योपमा दीयते ॥१६॥**

काठ् हो कल्पतरू, सुमेरु छ अचल् पत्थर् छ चिन्तामणि
ताता छन् रवि, चन्द्र क्षीण बनिने दैत्यै गनिन्छन् बलि ।
ठूलो भन्नु समुद्र त्यो छ नुनिलो हुन् कामधेनू पशू
छैनन् क्यै उपमा हजूरसँगका हे राम ! धेर् के भनुँ ? ॥

**कल्पवृक्ष काठ हो, सुमेरु पर्वत हो, चिन्तामणि पत्थर हो, सूर्यको किरण अत्यन्त उष्ण हो, चन्द्रमाको किरण क्षीणशील हो, समुद्र खारो हो, बलि दितिको पुत्र हो, कामदेव विनाशरीरको हो, कामधेनु पशु नै हो, यसकारण यिनको म हजूरसँग तुलना गर्न सक्तिनँ, हे रघुपते! तपाईंलाई अरू के कसको उपमा दिन सकिन्छ र? ॥१६॥**

कसको मित्र को ?

**विद्या मित्रं प्रवासे च भार्या मित्रं गृहेषु च ।**
**व्याधितस्यौषधं मित्रं धर्ममित्रं मृतस्य च ।।१७।।**

विद्या मित्र विदेशको, सत्-स्त्री मित्र गृहस्थिको ।
रोगीको औषधी मित्र[१] धर्म मित्र छ सर्वको ।।

**परदेशमा विद्या हित गर्छ, घरमा स्त्री मित्र हुन्छे, रोगले ग्रस्त पुरुषको हित गर्ने औषधि हुन्छ, मरेकाको मित्र धर्म हुन्छ ।।१७।।**

कसमा के स्वभाव ?

**विनयं राजपुत्रेभ्यः पण्डितेभ्यः सुभाषितम् ।**
**अनृतं द्यूतकारेभ्यः स्त्रीभ्यः शिक्षेत कैतवम् ।।१८।।**

सभ्यता शिक्षित् कुल्‌बाट प्यारो बोली त विज्ञमा ।
जुवाडेमा झुठो हुन्छ, छल् कप्ट्यायींस्त्रीजातिमा ।।
सबै छली न होलान् लौ तर होश् राख्नु काममा ।।

**नम्रता राजाका पुत्रहरूसित, सत्य वचन पण्डितसित, असत्य वचन जुवोड़हरूसित र छल स्त्रीसित सिक्नुपर्छ ।।१८।।**

व्यभिचारको कामले विनाश निम्त्याउँछ :

**अनालोक्य व्ययं कर्ता अनर्थः कलहप्रियः ।**
**आतुरः सर्वक्षेत्रेषु नरः शीघ्रं विनश्यति ।।१९।।**

विनाविचारले खर्च ब्यर्थैमा कलह-प्रिय ।
विवर्ग स्त्रीमा भोगेच्छा गर्ने त्यो हुन्छ है क्षय ।।
(स्वजात स्वाचारदेखी परैकी, आचारादी हीनकी वा परस्त्री ।
कामासक्ती भै जउन् भोग गर्छ त्यो ता नित्यै शोकमा पर्नुपर्छ ।।

**विचार नगरी खर्च गर्ने, विनाकारणको प्रीति राख्ने, सबै जातका स्त्रीहरूसँग भोग विलास गर्नमा व्याकुल रहने मानिस शीघ्र नै नष्ट हुन्छ।।१९।।**

---

१. **कस्लाइ हो शत्रु भनेर जान्नु ? आफ्ना दशैइन्द्रिय शत्रु मान्नु !**
**कस्लाइ खूब् मित्र भनेर मान्नु? जीत्या तिनै इन्द्रिय नित्य जान्नू ।।**—(भानुभक्त)।

## ब्यर्थैमा चिन्ता किन ?

**नाहारं चिन्तयेत् प्राज्ञो धर्ममेकं हि चिन्तयेत् ।**
**आहारो हि मनुष्याणां जन्मना सह जायते ॥२०॥**

आहारको अपेक्षामा चिन्तना गर धर्मकै ।
जन्मैदेखि छ आहार भन्ने त्यो सोच्नु है सधैं ॥

**बुद्धिमान्‌ले खानाको चिन्ता छोड़ेर केवल धर्मको चिन्ता गरोस्। किनकि आहार त मनुष्यको जन्मदेखि नै उत्पन्न हुन्छ ॥२०॥**

## सत्कर्म गर्दै गर :

**जलबिन्दु निपातेन क्रमशः पूर्यते घटः ।**
**स हेतुः सर्वविद्यानां धर्मस्य च धनस्य च ॥२१॥**

घडा भरिन्छ एक् एक थोपा सँगालँदा जल ।
जल निखन्छ चुहेमा त्यस्तै धर्माऽयुको फल ॥

**जलको एक एक बूँद (थोपा) चुहाउनाले घड़ा भरिन्छ, विद्या र धर्मको पनि त्यही कारण छ ॥२२॥**

## दुष्टको दुष्ट्याइँ सितिमिति जाँदैन :

**वयसः परिणामेऽपि यः खलः खल एव सः ।**
**संपक्वमपि माधुर्यं नोपयातीन्द्रवारुणम् ॥२२॥**

उमेरको दुष्ट दुष्टै हुन्छ बूढो हुँदा पनि ।
गुलियो हुन्न पाकेर तीतो फल कसै पनि ॥

**जस्तै उमेर पुगेपछि पनि जो खल छ त्यो दुष्टै रहन्छ, अत्यन्त पाकेर गले पनि दुष्ट तीतो फल मीठो (गुलियो) हुँदैन ॥२३॥**

**(गुण सिकिलिनु श्रीरामचन्द्रजीकै समान**
**जडभरतसरि निर्द्वन्दि भै बस्नु जान ।**
**बनिरहनु दयालू हिंसकी बन्नु हुन्न**
**परम सुख त मिल्छन् गर्व ता राख्नु हुन्न) ॥**

*॥ इति द्वादशोऽध्याय; समाप्त ॥*

# अथ त्रयोदशोऽध्यायः

## राम्रो काम गरेरै बाँचौं

**मुहूर्तमपि जीवेच्च नरः शुक्लेन कर्मणा ।**
**न कल्पमपि कष्टेन लोकद्वयविरोधिना ॥१॥**

मुहूर्त[1] मात्र होस् वेश् हो, राम्रो काम गरी बचोस्।
दुष्कर्म गर्छ के लाभ ? यदि धेरै बँची रहोस् ॥

**दुईचार घण्टै बाँचे पनि असल कर्मले मनुष्य बाँचोस् । यस लोक र परलोक दुवैमा विरोधी र कष्टदायी छुच्चोपनाले एक कल्पै बाँचे पनि सुख छैन ॥१॥**

## चिन्ता लिनु कैल्यै पनि लाभ छैन

**गते शोको न कर्तव्यो भविष्यं नैव चिन्तयेत्।**
**वर्तमानेन कालेन प्रवर्तन्ते विचक्षणाः ॥२॥**

गएका कामको[2]शोच, चिन्तना पछिको पनि ।
नगर्नु जुन मौकामा जे पर्छ गर्नु त्यो गुनी ॥

**गइसकेका वस्तुको शोक नगर्नू, पछि के होला भन्ने चिन्ता पनि नगर्नू, पण्डितहरू जुन समय जस्तो पर्छ त्यस्तै ब्यहोर्दछन् ॥२॥**

## के गरे को खुशी हुन्छन् ?

**स्वभावेन हि तुष्यन्ति देवाः सत्पुरुषाः पिता।**
**ज्ञातयः स्नानपानाभ्यां वाक्यदानेन पण्डिताः ॥३॥**

---

१. मुहूर्तः **छ श्वाशको एक पला कहिन्छ, साठी पलाको घडि एक हुन्छ ।**
**दुई घडीको त मुहूर्त मान साठी घडीका दिन-रात जान ॥**
(दुईघडी भन्नाले ४८ मिनेटको समयलाई जनाउँछ ) ।

२. खादन्न गच्छामि हसन्न जल्पे गतं न शोचामि कृतं नमन्ये ।
द्वाभ्यां तृतीयो नभवामि राजन्, किं कारणं भोज ! भवामि मूर्खः ॥
—(भोज-कालिदास) ॥

**खाँदै हिंड्ने, हाँस्छ जो क्यै नबोल्दै, पैल्यैका भो हालका बात सोच्ने ।**
**द्विजानामा तीन होला नसोधी, त्यै मान्छे हो मूर्ख यद्वा विहोशी ॥**

माता पिता देवता मान्यवर्ग सेवा र सत्-प्रेम गरे प्रसन्न ।
हुन्छन् सुखी बान्धव खान पाए हुन्छन् सुखी सज्जन प्रेम बोले ।।

**देवता, उत्तम मनुष्यहरू र पिता स्वभावले नै सन्तुष्ट रहन्छन्, बन्धुहरू खान-पिनले र पण्डितहरू प्रिय वचनले मात्र सन्तुष्ट हुन्छन् ।। ३ ।।**

यी कुराहरू गर्भैमा रहँदा लेखिन्छन्

**आयुः कर्म च वित्तं च विद्या निधनमेव च ।**
**पञ्चैतानि च सृज्यन्ते गर्भस्थस्यैव देहिनः[1] ।। ४ ।।**

विद्या, आयु, द्रव्य, कर्मादि, मृत्यु प्राक्कर्मैका हेतु हुन् ती परन्तु ।
सर्वात्मामा राखिए भक्ति लक्ष्य क्वै राम्रा ता हुन्छ यो हो स्व-सिद्ध।।

**आयु, कर्म, धन, विद्या र मरण यी पाँच थोक प्राणीका गर्भबाट नै सिर्जना हुन्छन् ।। ४ ।।**

महात्माहरूको चरित्र

**अहो ! वत विचित्राणि चरितानि महात्मनाम् ।**
**लक्ष्मी तृणाय मन्यन्ते तद्भारेण नमन्ति च ।। ५ ।।**

महात्माहरुले लक्ष्मी तृणसमान मान्दछन् ।
पाए पनि हर्ष छाडी निर्वेद भइ बस्दछन् ।।
(महात्मालाई महात्मा मात्रले चिन्न सक्दछन्
अरुले चिन्न सक्दैनन् बाहिरी मात्र हेर्दछन्) ।।

**आश्चर्य छ कि बड़ा मानिसको विचित्र स्वभाव हुन्छ, ती लक्ष्मीलाई तृण समान सम्झन्छन् । यदि प्राप्त भएमा पनि त्यसका भारले झुक्तछन् अर्थात् नम्र हुन्छन् ।। ५ ।।**

---

१. स हि गगनविहारी कल्मषध्वंसकारी
दशशतकरधारी ज्योतिषां मध्यचारी ।
विधुरपि विधियोगाद्ग्रस्यते राहुणाऽसौ
लिखितमपि ललाटे प्रोज्झितं कः समर्थः ।।
—(हितोपदेश, मित्रलाभ) ।

दुःखको कारण यो पनि हुन सक्छ

**यस्य स्नेहो भयं तस्य स्नेहो दुःखस्य भाजनम् ।**
**स्नेहमूलानि दुःखानि तानि त्यक्त्वा वसेत्सुखम् ।। ६ ।।**

जस्मा प्रीति गर्‍यो उहीबाट नै भय आउँछ ।
भित्री आसक्ति छाडेर 'सम' भै बस्नुपर्दछ ।।

**जसमा प्रीति छ उसैलाई भय छ, प्रीति दुःखको पात्र हो र प्रीति दुःखको कारण हो, यसैले त्यसलाई छोड़ेर सुखी रहनुपर्छ ।। ६ ।।**

दुःख पर्ला भनेर पहिल्यै होश गर्नु

**अनागताविधाता च प्रात्युत्पन्नामस्तिथा ।**
**द्वावेतौ सुखमेधेते यद्भविष्यो विनश्यति ।। ७ ।।**

पर्ला दुःख भनेर शोच्नु पहिल्यै आई परे दुःख त्यो
टार्ने युक्ति बुझेर बस्नु नहिं ता सङ्कष्टमा पर्छ त्यो ।
'खानू पथ्य विचारले, कुपथ नै जे होस् भनी खान्छ जो
मौकामा उपचार् नपाएर कठै ! रोएर बस्ने छ त्यो ।।

**आउन लागेको विपत्तिलाई पहिलेदेखि नै उपाय गर्ने, त्यस्तै नै आपत्ति आइगएपछि त्यसलाई निवारण गर्नको लागि शीघ्र नै उपाय सोच्ने बुद्धि यी दुवैले सुख बढ्दछ र जसले जे होला होला भन्दछ त्यसको विनाश हुन्छ ।। ७ ।।**

सबै धर्मी बनुन्

**राज्ञि धर्मिणि धर्मिष्ठाः पापे पापाः समे समाः ।**
**राजानमनुवर्तन्ते यथा राजा तथा प्रजाः ।। ८ ।।**

राष्ट्राध्यक्ष भए धर्मी हुन सक्छन् अरू पनि ।
घरमूली भए धर्मी हुन सक्छन् जहान् पनि ।।

**राजा धर्मात्मा भए प्रजा पनि धर्मिष्ठ हुन्छन्, राजा पापी भए प्रजा पनि पापी नै हुन्छन्, राजा सम भए प्रजा पनि सम नै हुन्छन्, प्रजा राजाको अनुसारले व्यवहार गर्दछन् अर्थात् जस्तो राजा हुन्छ त्यस्तै प्रजा पनि ।। ८ ।।**

धर्म नभएको मानिस मरेसमान हो

**जीवन्तं मृतवन्मन्ये देहिनं धर्मवर्जितम् ।**
**मृतो धर्मेण संयुक्तो दीर्घजीवि न संशयः ॥९॥**

मरेसरि हो जिउँदै धर्मविहीनको नर ।
मरे तापनि धर्मीको कीर्ति हुन्छ सधैंभर ॥

**धर्मरहित जीउँदोलाई पनि मृतसमान सम्झिन्छ, धर्मयुक्त मरेको पनि चिरंजीवी छ, यसमा सन्देह छैन ॥९॥**

चतुर्वर्गविहीनको जन्म निरर्थक

**धर्मार्थकाममोक्षाणां यस्यैकोऽपि न विद्यते ।**
**अजागलस्तनस्यैव तस्य जन्म निरर्थकम् ॥१०॥**

धर्मार्थकाम[१] ता जे होस् मोक्ष चिन्तन् गरेन जो ।
बाख्राको घाँटिको लुर्का जस्तै जीवन व्यर्थ भो ॥

**धर्म, अर्थ काम र मोक्ष यतिमा जसको यौटा पनि छैन त्यसको जन्म बाख्राको गलस्तन अर्थात बाख्राको घाँटीको लुर्को जस्तै निरर्थक छ ॥१०॥**

मात्सर्य लिनु ठूलो दुर्गुण हो

**दह्यमानाः सुतीव्रेण नीचाः परयशोऽग्निना ।**
**अशक्तास्तत्पदं गन्तुं ततो निन्दां प्रकुर्वते ॥११॥**

सत्कीर्ति अरुको देखी दुष्ट मात्सर्य गर्दछ ।
सत्याचारी हुन आफू जिज्ञासा पनि छोड्दछ ॥

**दुर्जन अर्काको कीर्ति देखेर दुस्सह अग्निले डढ्दडन्, किनकि उसको पद प्राप्त गर्नमा असमर्थ भएर उसको निन्दा गर्दछन् ॥११॥**

---

१. यस्तै भाव (तात्पर्य) चारौं अध्यायको श्लोक ६ मा पनि उल्लेख गरिएको छ र यो मूल श्लोकमा धर्म, अर्थ, र काम र मोक्ष यी सबैलाई समानरूपमा जोडिएको छ । तर काम औ अर्थको इच्छा नराख्ने व्यक्ति विरलै हुन्छन्, बरु मोक्षको चिन्तन नगर्ने धेरै हुन्छन् ।

## बन्ध वा मोक्ष भइने कारण

**बन्धाय विषयासङ्गो मुक्तो निर्विषयं मनः ।**
**मन एव मनुष्याणां कारणं बन्धमोक्षयोः ॥१२॥**

विषयासक्त हो बन्ध भवाशा छाड्नु मोक्ष हो ।
बन्ध मोक्ष हुने हेतु आफूकै भित्रि चित्त हो ॥

**विषय आदिमा आसक्त मन बन्धनको कारण हो, र विषयले रहित मन मोक्ष हो । मनुष्यको मन नै बन्धन र मोक्षको कारण हो ॥१२॥**

## देहाभिमान गलित पुरुष ब्रह्मस्वरूप हो

**देहाभिमाने गलिते ज्ञानेन परमात्मनि ।**
**यत्र यत्र मनो याति तत्र तत्र समाधयः ॥१३॥**

परमात्माको ज्ञानले देहाभिमान नाश भो ।
जहाँ बसे पनी त्यो ता निर्विकल्प समाधि भो[१] ॥

**परब्रह्मको ज्ञानले देहको अभिमान नष्ट भएपछि जहाँ जहाँ जान्छ त्यहाँ त्यहाँ समाधि नै छ ॥१३॥**

## मनले मात्र चाहेर संसारी विषय पाइँदैन

**ईप्सितं मनसः सर्वं यस्य सम्पद्यते सुखम् ।**
**दैवायत्तं यतः सर्वं तस्मात् सन्तोषमाश्रयेत् ॥१४॥**

हुँदैन मन इच्छाले दैवेच्छा वश छन् सब ।
सन्तोष र परमात्मा स्मृति गर्नु छ गौरव ॥

**मनको इच्छापूर्वक सबै सुख कसलाई प्राप्त छ ? जब त्यो सबै दैवको वशमा छ, यसमा सन्तोषको नै आश्रय लिनुपर्छ ॥१४॥**

---

१. समाधि निर्धौत मलस्य चेतसो
निवेशितस्यात्मनि यत्सुखं भवेत् ।
न शक्यते वर्णयितुं गिरा तदा
स्वयं तदन्तः करणेन गृह्यते ॥
—(मैत्रायण्युपनिषद् ६/२४, भव. उ. ३/३२) ॥

कर्मको फल कर्ताले नै भोग्नुपर्छ

**यथा धेनुसहस्रेषु वत्सो गच्छति मातरम् ।**
**तथा यच्च कृतं कर्म कर्तारमनुगच्छति ॥१५॥**

अरू छाडेर बाच्छाले आमाकै पछि लाग्दछ ।
जे गर्छ कर्म फल त्यो कर्त्तैले भोग्नुपर्दछ ॥

**जस्तै हजारौं गाईका बीचमा पनि बाछो आफ्नी माताका सँगमा जान्छ, त्यस्तै नै जो कर्म गरिन्छ त्यो गर्नेका साथ साथ नै जान्छ अर्थात् जो राम्रो नराम्रो कर्म गरिएको छ, त्यो गर्नेलाई नै मिल्छ ॥५॥**

सत्कर्ममा मन स्थिर नगरे सुख पाइन्न

**अनवस्थितकार्यस्य न जने न वने सुखम् ।**
**जनो दहति संसर्गाद्वनसङ्गविवर्जितात् ॥१६॥**

जस्को मन स्थिर छैन सुख पाउन्न त्यो कतै ।
सत्सङ्ग हुन्न वनमा, संसर्ग जनसङ्ग भै-
वैराग्याभ्यास छुट्दछ, मोक्षाप्ति छ स्थितात्ममैं ॥

**जसको चित्त स्थिर रहँदैन उसले न जनमा सुख पाउँछ न वनमा सुख पाउँछ, जनमा त्यसलाई संसर्ग गर्नाले जलाउँछ, वनमा सत्सङ्गको अभावले जलाउँछ ॥१६॥**

सद्गुरु[१]को सङ्ग-सेवाले परमलाभ

**यथा खात्वा खनित्रेण भूतले वारि विन्दति ।**
**तथा गुरुगतां विद्यां सुश्रूषुरधिगच्छति ॥१७॥**

---

१. गुरु=अविद्यालाई नाशेर ब्रह्म ज्ञान दिने पुरुषलाई गुरु भनिन्छ—
अविद्याहृदयग्रन्थि बन्धमोक्षो यतो भवेत् ।
तमेव गुरुरित्याहुर्गुरुशब्देन योगिनः॥ (सर्ववेदान्तसिद्धान्तसारे) ॥
उपाध्याय वेदादि सत्-शास्त्रको उपदेशक, पिता, माता, दाजु, राष्ट्राध्यक्ष (राजा वा राष्ट्रपति), मामा, ससुरा, मावली हजुरबुबा, जिजुबुबा (हजुरबुबा) सदाचारी ब्राह्मण (साधुजन) र काका पनि गुरु हुन् ।

खनेर भूमिको जल जसरी प्राप्त गर्दछन् ।
सद्गुरु सङ्ग सेवा ले शिष्यले ज्ञान पाउँछन् ॥

**जस्तै कोदालो आदिले खनेर मनुष्य पातालको जल पाउँछ, त्यस्तै गुरु सेवाले गुरुमा रहेको विद्या प्राप्त हुन्छ ॥१७॥**

मानवले कर्मानुसार फल पाउँछन्

**कर्मायत्तं फलं पुंसां बुद्धिः कर्मानुसारिणी ।**
**तथापि सुधियाचार्याः सुविचार्यैव कुर्वते ॥१८॥**

पाउँछन् फल व्यक्तिले मन कर्मानुसारले ।
सत्-प्रज्ञा लिइ सत्कर्म गर्छन् ज्ञानी महात्मले ॥

**फल मनुष्यको कर्मको अधीनमा छ, बुद्धि कर्मको अनुसार नै चल्दछ तथापि विद्वान् र महात्माहरूले राम्रोसँग विचार गर्न सक्दछन् ॥१८॥**

गुरुलाई प्रणाम नगरे महापाप लाग्छ

**एकाक्षर[1] प्रदातारं यो गुरुं नाभिवन्दते ।**
**श्वानयोनिशतं भुक्त्वा चाण्डालेष्वभिजायते ॥१९॥**

'ॐ' मन्त्रदाता गुरुमा गर्दैन त प्रणाम जो ।
सय जन्म कुकुर् योनि पाई चाण्डाल हुन्छ त्यो ॥

**जो एउटै अक्षर पनि दिने गुरुको वन्दना गर्दैन त्यो कुकुरको सय योनि भोग गरेर चाण्डाल योनिमा जन्मन्छ ॥१९॥**

साधुहरू सन्मार्गमा दृढ रहन्छन्

**युगान्ते प्रचलेत् मेरुः कल्पान्ते सप्तसागराः ।**
**साधवः प्रतिपन्नार्था न चलन्ति कदाचन ॥२०॥**

---

१. एकाक्षरम् = एकअक्षर, प्रणव (अर्थात् ॐकार अ.उ.म.तीन अक्षरबाट बनेको हो तापनि ॐ कार एकाक्षर मानिन्छ) ।
**असङ्ख्य नाम छन् पूर्णब्रह्म श्रीपरमात्मको ।**
**सबै उत्तम छन् किन्तु 'ॐ' नाम परमोच्च हो ॥**

सप्तसागर सुमेरु चलायमान् हुनन् बरू ।
छाड्दैनन् सत्पथ कैल्यै[1] महात्मा साधुजन्हरू ॥

**युगका अन्त्यमा सुमेरु चलायमान हुन्छ, कल्पका अन्त्यमा सातै समुद्रहरू चलायमान् हुन्छन्, तर साधुहरू स्वीकृत अर्थबाट कहिल्यै पनि विचलित हुँदैनन् ॥२०॥**

**(सरस पद त उल्टो हुन्न यो सिद्ध नै छ**
**सरस हुनु दया हो थप्नु त्यस्मा विवेक ।**
**हरबखत दया नै भै रहोस् चित्तभित्र**
**विभु हरि शिव ॐ श्री नाम सम्झूँ म नित्य ॥**

*॥ इति त्रयोदशोऽध्यायः समाप्तम् ॥*





१. निन्दन्तु नीतिनिपुणा यदि वा स्तुवन्तु
लक्ष्मीः समाविशतु गच्छतु वा यथेष्टम् ।
अद्यैव वा मरणमस्तु युगान्तरे वा
न्यायात् पथः प्रविचलन्ति पदं न धीराः ॥—(भर्तृहरि नीतिशतक ८४)॥
**नीतिज्ञले स्तुति गरुन् कि गरुन् ति निन्दा**
**लक्ष्मी मिलुन्, बसुन जाउन जे गरुन् वा ।**
**धेर् बाँचियोस् कि यदि मर्नु परोस अैल्यै**
**छाड्दैन न्याय-पथ सज्जनवर्ग कैल्यै** ॥ —(कर्तव्य दर्पण) ॥

# अथ चतुर्दशोऽध्यायः

पृथ्वीमा तीन रत्न छन्

**पृथिव्यां त्रीणि रत्नानि जलमन्नं सुभाषितम् ।**
**मूढैः पाषाणखण्डेषु रत्नसंज्ञा विधीयते ॥१॥**

जल, अन्न, प्रिय वाक्य पृथ्वीमा तीन रत्न छन् ।
अज्ञानीले कॉच ढुङ्गाहरूको रत्न मान्दछन् ॥

**पृथ्वीमा जल, अन्न र प्रिय वचन यी तीन रत्न छन् । मूर्खहरूले पत्थरका टुक्रामा रत्नको गन्ती गरेका छन् ॥१॥**

अपराधरूपी वृक्षमा धेरैथरिका फलहरू फल्दछन्

**आत्मापराधवृक्षस्य फलान्येतानि देहिनाम् ।**
**दारिद्र्यरोगदुःखानि बन्धनं व्यसनानि च ॥२॥**

प्राणीहरूका अपराधरूप त्यो वृक्षमा फल्दछन् रोग, दुःख ।
दारिद्र्यता, बन्धन औ विपत्ति फल्ने छ राम्रो लिनुहोस् सुबुद्धि ॥

**प्राणीहरूको आफ्नू पापरूप वृक्षका दरिद्रता, रोग, दुःख, बन्धन र आपत्ति यी फल हुन् ॥२॥**

आफ्नो शरीरको सुरक्षा गरौं

**पुनर्वित्तं पुनर्मित्रं पुनर्भार्या पुनर्मही ।**
**एतत्सर्वं पुनर्लभ्यं न शरीरं पुनः पुनः ॥३॥**

पृथ्वी, स्त्री, धन, मित्रादि मौकामा मिल्न सक्दछन् ।
देह पाइन्न यो जानी ज्ञानीले हरि भज्दछन् ॥

**धन, मित्र, स्त्री र पृथ्वी यी सबै बार-बार प्राप्त हुन्छन्, तर शरीर बार-बार मिल्दैन ॥३॥**

धेरै समूहबाट हुने फाइदा

**बहूनां चैव सत्त्वानां समवायो रिपुञ्जयः ।**
**वर्षाधाराधरो मेघस्तृणैरपि निवार्यते ॥४॥**

धेरै जन समूहले परेमा शत्रु जित्दछन् ।
तृण-खर समूहले वर्षाको जल छेक्दछन् ॥
(होऊन् समूह सुहृद्का, नत्र यो सोच्नुपर्छ कि ।
ज्ञानी निम्ती छ कृष्णोक्ति "अरतिर्जनसंसदि" ॥
बोलीले मात्र यो हुन्न चाहिन्छ सत्य सङ्गति) ॥

**निश्चय छ कि धेरै मानिसको समुदाय शत्रुलाई जित्न सक्छ, जस्तै तृण समूहले पनि वृष्टिको धारालाई राख्ने मेघको निवारण गर्दछ ॥४॥**

थोरै भए पनि पछि फैलिने विषय

**जले तैलं खले गुह्यं पात्रे दानं मनागपि ।**
**प्राज्ञे शास्त्रं स्वयं याति विस्तारं वस्तुशक्तितः ॥५॥**

दुर्जन्मा यदि गोप्य बात कहिए, सत्-पात्रमा दान् भयो,
विद्वान्-सज्जनमा त शास्त्र, जलमा राखिन्छ ता तेल जो ।
थोरै नै यदि हुन् तथापि सब ती आ-आफ्नु नै शक्तिले
धेरै भै उहि फैलिने छ बुझनू पात्रादिका भेदले ॥

**जलमा तेल, दुर्जनसँग गुप्तवार्ता, सुपात्रमा दान, बुद्धिमान्मा शास्त्र, थोरै भए पनि वस्तुको शक्तिले आफैआफ विस्तार हुन्छ अर्थात् फैलिन्छ ॥५॥**

यस्तै बुद्धि सधैं राख्ने कोसिस गरौं

**धर्माख्याने श्मशाने च रोगीणां या मतिर्भवेत्।**
**सर्वदैव स तिष्ठेच्चेत् को न मुच्येत बन्धनात्[1]॥६॥**

१. गर्भे व्याधे श्मशाने च पुराणे या मतिर्भवेत् ।
सा यदि स्थिरतां याति को न मुच्येत बन्धनात् ॥ (गरुडपुराण) ॥
पुराणान्ते श्मशानान्ते मैथुनान्ते च या मतिः ।
सा मतिःस्थिरतां याति को न मुच्येत बन्धनात् ॥ (ग्रन्थान्तरे) ॥
**रोग लाग्दा, पुराणादि सुन्दा र मैथुनान्त्यमा ।**
**जुन् बुद्धि हुन्छ त्यो नित्य बसे को पर्छ नर्कमा ?।।**

सत्-शास्त्र, वेदान्त, पुराण[१] सुन्दा आत्मीय जन्को शव घाट लॉदा ।
जुन् हुन्छ बुद्धि-स्थिर त्यै रहे ता पर्थ्यो र कुन् मानव नर्क त्यो ता ॥

१. **पुराणः** वेदव्यासले रचना गरेको पुरानो कथा वा ब्रह्मा, विष्णु, शिव, शक्ति आदि देवताको भुवन आदिको वर्णन गरिएको सर्ग, प्रतिसर्ग, वंश, मन्वन्तर, वंशानुचरित यी पाँच कुरा भएको र सर्ग, विसर्ग, स्थान, पोषण, अति, मन्वन्तर-कथा, ईश्वरकथा, निरोध, मुक्ति र आश्रय, यति १० लक्षण भएको व्यासादि मुनिकृत ग्रन्थ, जसका सङ्ख्या अठार छन्-ब्रह्म, पद्म, विष्णु, शिव, भागवत, नारद, मार्कण्डेय, अग्नि, भविष्य, ब्रह्मवैवर्त, लिङ्ग, वाराह, स्कन्द, वामन, कूर्म, मत्स्य, गरुड र ब्रह्माण्ड।

सर्गश्च प्रतिसर्गश्च वंशो मन्वन्तराणि च ।
वंशानुचरितं चेति पुराणं पञ्चलक्षणम् ॥
ब्रह्मविष्ण्वर्करूद्राणां माहात्म्यं भुवनस्य च ।
ससंहारं च दृश्येत पुराणं पञ्चवर्णता ॥
ब्राह्मं पाद्मं वैष्णवं च शैवं भागवतं तथा ।
तथामन्नारदीयं च मार्कण्डेयं च सप्तमम् ॥
आग्नेयमष्टमं प्रोक्तं भविष्यं नवमं तथा ।
दशमं ब्रह्मवैवर्तं लिङ्गमेकादशं तथा ॥
वाराहं द्वादशं प्रोक्तं स्कान्दं चात्र त्रयोदशम् ।
चतुर्दशं वामनं च कौर्मं पञ्चदशं तथा ॥
मात्स्यं च गारुडं चैव ब्रह्माण्डमष्टादशं तथा ।

**उपपुराणः** अठार पुराणको निर्माणपछि बनाइएका साना-अरू अठार पुराणहरू-सनत्कुमारपुराण, नारसिंह, नारद, शिव, दुर्वासा, कपिल, मानव, औशन, वरुण, कालिका, साम्ब, नन्दी, सौर, पाराशर, आदित्य, माहेश्वर, भार्गव र वाशिष्ठ पुराण ।

अथान्युपपुराणानि मुनिभिः कथितान्यपि ।
आद्यं सनत्कुमारोक्तं नारसिंहमतः परम् ॥
तृतीयं वायवीयं च कुमारेण तु भाषितम् ।
चतुर्थं शिवधर्माख्यं साक्षान्नन्दीशभाषितम् ॥
दुर्वाससोक्तमाश्चर्यं नारदीयमतः परम् ।
कापिलं मानवं चैव तथैवोशनसेरितम् ॥
ब्रह्माण्डं वारुणं चाथ कालिकाह्वयमेव च ।
माहेश्वरं तथा साम्बं सौरं सर्वार्थसञ्चयम् ॥
पराशरोक्तमपरं मारीचं भास्कराह्वयम् ।
इदमष्टादशं प्रोक्तं पुराणं कौर्मसंज्ञितम् ॥ हेमाद्रिः

यसमा पाठान्तरहरू पनि पाइन्छन् र अन्य उपपुराणहरूको उल्लेख यसरी पाइन्छ-अङ्गिरा, आखेटक, आत्म, आदि, आदित्य, उशनः, एकपाद, एकाम्र, कपिल, कल्कि, कालिका, क्रियायोगसार, गणेश, गरुड, जालन्धर, तत्त्वसार, नारसिंह, नारद, नीलमत, परानन्द, पराशर, पाशुपत, प्रभास, बृहद्धर्म, बृहद्धर्मोत्तर, बृहन्नन्दीश्वर, बृहन्नारसिंह, बृहन्नारदीय, भविष्योत्तर, देवीभागवत, भार्गव, मरीचि, महाभागवत, वामन, महेश्वर, मुद्गल, रेणुका, लघुनारद, लीलावती, वसिष्ठ, वह्नि, वायवीय, वारुण, वासुकि, विष्णुधर्म, श्रीविष्णुधर्मोत्तर, विष्णुरहस्य, शिव, शिवधर्मोत्तर, सनत्कुमार, साम्ब, सौर, स्कन्द, हंस र हरिवंशपुराण। —(वृहद् संस्कृत नेपाली शब्दकोश)—

बृहद्विवेकअनुसारः **औपपुराणहरू** पनि अठ्ठार छन्- सनत्कुमारपुराण, बृहन्नारदीय, आदित्य, वामन प्रोक्त, नन्दिकेश्वर, कौर्म, भागवत, वासिष्ठ, भार्गव, मुद्गल, कल्कि, देवी, महाभागवत, बृहद्धर्म, परानन्द, वन्हि, पशुपति र हरिवंशपुराण । (उपर्युक्त उपपुराण र औपपुराणहरूको नामावलीमा केही पाठभेद वा ग्रन्थभेद पाउन सकिन्छ) ।

अब प्रश्न उठ्दछ कि प्रमुख अष्टादश पुराणमा केवल भागवत शब्दको उल्लेख छ, श्रीमद्भागवत या देवीभागवत भनेर स्पष्ट उल्लेख गरिएको छैन । अर्को तर्क महापुराणहरुको सङ्ख्या अठ्ठार (१८) मात्र मानिएको छ ।

यदि अठार पुराणमा श्रीमद्देवीभागवत गणना गर्ने हो भने अष्टादश सङ्ख्या निरर्थक (व्यर्थ) हुन जान्छ । यदि त्यहाँ यस (पुराण) को गणना नगर्ने हो भने यस पुराणलाई दिइदै आएको श्रीमद्देवीभागवत महापुराण अर्थात् 'महा' विशेषण-पद व्यर्थ नै हुनजान्छ । यस परिप्रेक्ष्यमा पुराण गणनामा केवल भागवत शब्दको उल्लेख हुनुले यही विदित हुन्छ कि भागवतलाई प्रणयन गर्दाका समयमा वेदव्यासजीले यसलाई दुई भागमा प्रस्तुत गर्नुभएको थियो । तर नामचाहिं एउटै दिनुभयो । यही कारण हो कि दुवै भागवतको श्रीमद्भागवत र श्रीमद्देवीभागवत स्कन्ध-सङ्ख्या, श्लोक-सङ्ख्या समान छन् । मात्र वक्ता र श्रोतामा केही भेद-अन्तर छ । तर पनि तात्त्विक दृष्टिले यही विदित हुन्छ कि वेदव्यासजीले प्रकृति-पुरुषको अभेदतालाई ध्यानमा राख्दै दुई अर्ध-अङ्गका रुपमा अलग-अलग निरुपण त गर्नुभयो, तर नाम एउटै राखेर भक्तप्रवर सूरदासजीको यस भनाइलाई सार्थक बनाउनुभयो—

*प्रकृति पुरुष एकै करि जानो, बातनि भेद करायौ ।*

यसका अतिरिक्त भागवत शब्दको व्युत्पत्तिः 'भगवतो भगवत्या वा इदम्-भागवतम्' अर्थात् भागवत शब्दको चाहे भगवान्‌का साथ सम्बन्ध जोडेर व्युत्पत्ति गरियोस् या भगवतीका साथ !, निष्पन्नरूप भागवत नै बन्दछ ।

यसप्रकार श्रीमद्भागवत र देवीभागवतको दैहिक एकता स्वीकार गर्दाखेरि महापुराण १८, उपपुराण १८, औपपुराण १८, कुल ५४ पुराण हुनजान्छन् ।

**धर्म विषय कथामा, श्मशानमा, दुःखीहरूको जो बुद्धि उत्पन्न हुन्छ, त्यो नित्य बनिरहेदेखि को बन्धनबाट छुट्न सक्दैन र? ॥६॥**

काम बिग्रिसकेर पश्चात्ताप गर्नु ब्यर्थ छ

**उत्पन्न पश्चात्तापस्य बुद्धिर्भवति यादृशी ।**
**तादृशी यदि पूर्वं स्यात् कस्य न स्यान्महोदयः ॥७॥**

निन्दित् काम गरी सकेर पछुतो मानेर जो बुद्धि भो
सोही बुद्धि अघी भए त कुन पो आनन्द पाउन्न थ्यो ?
तस्मात् शोच गरेर गर्नु सब काम् त्यो बुद्धिमान् हो सदा
जो होस् श्री हरि सम्झिए कुनकुनै काटिन्छ त्यो पाप ता ॥

**पश्चात्ताप गर्नेलाई जस्तो बुद्धि उत्पन्न हुन्छ त्यस्तो बुद्धि यदि पहिले नै भएदेखि कसलाई ठूलो सम्पत्ति हुने थिएन र ॥७॥**

टाढा को ?

**दूरस्थोऽपि न दूरस्थो यो यस्य मनसि स्थितः ।**
**यो यस्य हृदये नास्ति समीपस्थोऽपि दूरतः ॥८॥**

जस्को छ भिन्न मनमा स्मृति रैरहेको
टाढा पनी नजिकझैं हुन जान्छ जुन् हो ।
जस्को त छैन मनमा स्मृति झल्किएको
त्यो होस् नजीक तर दूरसरि भयो त्यो ॥

---

र.५+४ को योग हुन्छ ९, जुन पूर्णताको द्योतक पनि हो । महर्षि व्यासजीको पूर्णतापरक दृष्टिकोणको नै समर्थक हुनुहुन्छ । यही पूर्णताको समर्थक हुनुको कारणले उहाँले पुराणहरूको सङ्ख्या १८ नै राख्नुभयो । सबैलाई थाहा छ कि १-८ जोड्दा ९ हुन्छ । 'नौ' भनेको पूर्णसङ्ख्याको परिचायक त हो नै, साथै प्रकृति-पुरुषको अभेद पनि । गहिरिएर विचार गर्ने हो भने श्रीमद्भागवत र श्रीमद्देवीभागवत दुवै भागवत शब्दलाई पूर्णता प्रदान गर्नेवाला आँखा, कान आदि जस्तै दुई-दुई (अलग-अलग) नाम र काम भएर पनि देह (शरीर) को अभेदतको परिचायक हो । अब अन्तिममा भन्नै पर्ने कुरा के हो भने पुराणहरूमा श्रीमद्देवीभागवतको स्थान त्यस्तो छ जस्तो शरीरमा बल या शक्तिको स्थान हुनजान्छ । अस्तु ॥

**जो जसका मनमा रहन्छ त्यो टाढ़ा रहे पनि टाढ़ा हुँदैन र जो जसका मनमा रहँदैन त्यो नजीकै भए पनि टाढ़ा नै छ ॥८॥**

ब्यर्थमा विस्मय नलिनु

**दाने तपसि शौर्ये वा विज्ञाने विनये नये ।**
**विस्मयो न हि कर्त्तव्यो बहुरत्ना वसुन्धरा ॥९॥**

सुशीलतामा, तप, दान गर्दा फेर् शूरता, नीति र विज्ञतामा ।
नगर्नु विस्मात् अरु रत्न धेर् छन् ब्रह्मज्ञ शान्तात्म भएर बस्छन् ॥

**दानमा तपमा, शूरतामा, सुशीलता र नीतिमा आश्चर्य हुनु हुँदैन, यसकारण कि पृथ्वीमा धेरै रत्न छन् ॥९॥**

प्रेम गर्नु छ भने मीठो बोली बोल्नु

**यस्माच्च प्रियमिच्छेत्तु तस्य ब्रूयात् सदाप्रियम् ।**
**व्याधो मृगवधं कर्तुं गानं गायति सुस्वरम् ॥१०॥**

जोसङ्ग प्रीतिको इच्छा हुन्छ[१] त प्रिय बोल्नु छ ।
मृग वधार्थ व्याधाले मीठो स्वर् गीत गाउँछ ॥

**जसको प्रीतिको इच्छा छ, त्यससँग सदा प्रिय बोल्नुपर्छ, जस्तै व्याधा मृगका वधको निम्ति मधुर स्वरले गीत गाउँछ ॥१०॥**

कोसङ्ग अति समीप हुनु हुँदैन?

**अत्यासन्ना विनाशाय दूरस्था न फलप्रदाः ।**
**सेव्यतां मध्यभागेन राजा वन्हिर्गुरुस्त्रियः ॥११॥**

गुरुजन नृप अग्नि स्त्रीहरूमा छ सोच्नु
अति निकट भएमा नाशको हुन्छ हेतु ।
प्रिय समुचित सेवा गर्नु नै पर्छ किन्तु
न नजिक न त टाढा मध्यले हुन्छ सेतु ॥

---

१. उपकर्तुं प्रियं वक्तुं, कर्तुं स्नेहमकृत्रिमम् ।
सज्जनानां स्वभावोऽयं, केनेन्दुः शिशिरीकृतः ॥-(सुभाषितरत्नभाण्डागारम्)
ददाति प्रतिगृहणाति, गुह्यमाख्याति पृच्छति ।
भुंक्ते भोजयते चैव, षड्विधं प्रीतिलक्षणम् ॥ —(पञ्चतन्त्र ४/१०) ॥

**अत्यन्त निकट रहँदामा विनाशको कारण हुन्छ, टाढ़ा रहनाले फल दिंदैन । यसकारण राजा, अग्नि, गुरु, स्त्री यिनीहरूलाई मध्यावस्थाबाट सेवा गर्नुपर्दछ ॥११॥**

होशियारीपूर्वक कार्य गर्नु

**अग्निरापस्त्रियो मूर्खः सर्पो राजकुलानि च ।**
**नित्यं यत्नेन सेव्यानि सद्यः प्राणहराणि षट् ॥१२॥**

मूर्ख, स्त्री, जल, अग्नी भो सर्प[१], राजकुलादिको ।
गर्नु सेवा होश राखी नत्र हेतु छ नाशको ॥

**आगो, पानी, स्त्री, मूर्ख, साँप र राजाको कुल यिनीहरूलाई सदैव यत्नले सेवन (उपयोग) गर्नुपर्दछ । यी छः नै शीघ्र प्राण हर्नेहरू हुन् ॥१२॥**

गुणधर्मविनाको जीवनको कुनै काम छैन

**स जीवति गुणी यस्य यस्य धर्मः स जीवति ।**
**गुणधर्मविहीनस्य जीवितं निष्प्रयोजनम् ॥१३॥**

जस्मा छ गुण सद्-धर्म जिउँदो नर हो त्यही ।
गुण छैन भने बुझ्नू मरेकैसरि भो यही ॥

**जसमा गुण छ त्यही जिउँदो छ, जसको धर्म छ त्यही जिउँदो छ, गुण र धर्मले रहित मनुष्यको जीवन व्यर्थ छ ॥१३॥**

संयमले जीवन आनन्दित हुन्छ

**यदिच्छसि वशीकर्तुं जगदेकेन कर्मणा ।**
**पुरापञ्चदशास्येभ्यो गां चरन्तीं निवारय ॥१४॥**

जिभ्रो, नाक र कान, नेत्र र त्वचा यी पाँच ज्ञानेन्द्रिय
हात्, पाऊ, मुख, लिङ्ग-योनि र गुदा यी पाँच कर्मेन्द्रिय ।

---

१. को गर्छ 'सर्पको सेवा' होश राखनु अर्थ हो ।
जादूगर्हरूले गर्छन् बिग्रे त्यो पनि व्यर्थ भो ॥

शब्द-स्पर्श र गन्ध, रूप, रस यी ज्ञानेन्द्रियैका गुण
गर्नू संयम ब्रह्मचिन्तन गरी आनन्द त्यो पाउँन[१] ॥

**यदि एकै कर्मले जगतलाई वश गर्न चाहन्छौ भने पहिले पन्ध्रैवटा मुखबाट इन्द्रियलाई निवारण गर । तात्पर्य यो हो कि आँखा, कान, नाक, जिब्रो र त्वचा यी पाँच ज्ञानेन्द्रिय हुन् । शब्द, स्पर्श, रूप, रस, गन्ध यी पाँच ज्ञानेन्द्रियका विषय हुन् । यी पन्ध्रले मनलाई निवारण गर्नु उचित छ ॥१४॥**

मौकाअनुसारको स्वभाव लाभप्रद हो

**प्रस्तावसदृशं वाक्यं प्रभावसदृशं प्रियम् ।**
**आत्मशक्तिसमं कोपं यो जानाति स पण्डितः ॥१५॥**

प्रसङ्ग योग्यको वाक्य समाज सबको प्रिय ।
शक्ति र योग्यको रीस जानने विज्ञ हो नर ॥

**प्रसङ्ग सदृश वाक्य, प्रभावको सदृश प्रिय, आफ्नू शक्तिको अनुसार क्रोध यसलाई जसले जान्दछ त्यो पण्डित हो ॥१५॥**

हेराइ वा भावना पनि फरक-फरक हुन्छन्

**एक एव पदार्थस्तु त्रिधा भवति वीक्षितः ।**
**कुणपः कामिनी मांसं योगिभिः कामिभिः श्वभिः ॥१६॥**

यौटै वस्तु शरीर तीनथरका देखिन्छ त्यै भावले
कान्ता रूप त कामिले, मृतसरी देख्छन् सदा योगिले ।
मांसाशी कुकुरादिले त उहि नै मांसादिका दृष्टिले
हेर्छन् भाव छ पाप पुण्य हुनुमा सोच्नू स्वयं चित्तले ॥

**एउटै वस्तु तीन प्रकारले देखिन्छ । योगीहरू त्यसलाई अति निन्दित मृतक रूपले, कामी पुरुष कान्तारूपले र कुकुर मासु रूपले देख्तछन् ॥१६॥**

---

१. यदा स्वधर्मे सकलोऽभविष्यत्, न कोऽपि लोकः कुपथेऽचलिष्यत् ।
श्रमं च सर्वो मनुजोऽकरिष्यत्, सुखं कथं नैव तदाऽमिलिष्यत् ॥
—(संस्कृत पद्य सङ्ग्रह) ।

केही कुराहरू गोप्य राख्न जान्नुपर्छ

**सुसिद्धमौषधं धर्मं गृहच्छिद्रं च मैथुनम् ।**
**कुभुक्तं कुश्रुतं चैव मतिमान् न प्रकाशयेत् ।।१७।।**

सुसिद्ध औषधी, धर्म, गृहच्छिद्र र मैथुन ।
कुअन्न-भोजन्, दुष्कर्म प्रकाश योग्य होइन ।।
(गोप्य राखियका हुन्छन् घरेलुका जडीबुटी ।
आफ्ना जहान विश्वासीलाई चिनाउनू पनि ।
नत्र लोप भई जान्छ चिनेको व्यर्थ हुन्छ नि) ।।

**प्रसिद्ध औषधि, धर्म, घरको भेद, मैथुन, कुभोजन र कुमरण-यी छःलाई बुद्धिमान् व्यक्तिले प्रकट गर्नु उचित छैन ।।१७।।**

मौन रहनु उत्तम हो

**तावन्मौनेन नीयन्ते कोकिलैश्चैव वासराः ।**
**यावत्सर्वजनानन्ददायिनी वाक् प्रवर्तते ।।१८।।**

सर्वानन्द दिने वाणी बोल्न थाल्दैन 'कोकिल' ।
त्यहींसम्म सुखी हुन्छ, सुख हो मौनता बुझ! ।।

**त्यहींसम्म कोकिल मौन साधनले दिन बिताउँछ, जहाँसम्म सबै जनालाई आनन्द दिने वाणी प्रारम्भ हुँदैन ।।१८।।**

सद्कर्तव्य पालन गरौं

**धर्मं धनं च धान्यं च गुरोर्वचनमौषधम् ।**
**सुगृहीतं च कर्तव्यमन्यथा तु न जीवति ।।१९।।**

धर्म, आफ्नै धन,-धान्य, सद्गुरु-वाक्य, औषधी।
लिनू, जो लिन मान्दैन भयमा पर्न सक्छ कि? ।।

**धर्म, धन, अन्न, गुरुको आज्ञा र औषधि राम्रोसित स्वीकार गर्नुपर्छ, जो यस्तो गर्दैन त्यो बाँच्दैन ।।१९।।**

## सज्जनको सङ्गत गरौं

**त्यज दुर्जनसंसर्गं भज साधुसमागमम् ।**
**कुरु पुण्यमहोरात्रं स्मर नित्यमनित्सताम् ॥२०॥**

दुष्टको सङ्ग छाडेर सदा सत्सङ्ग नै गर ।
हरि-स्मृति र सत्-पुण्य गर, देह अनित्य छ ॥

**दुर्जन (खल) को संगति छोड़, साधुको संगति स्वीकार गर, दिन-रात पुण्य गर्ने गर र ईश्वरको नित्य स्मरण गर, किनकि यो संसार अनित्य छ ॥२०॥**

**(श्रुति उपनिषदादी जत्ति जे-जे पढोस् त्यो**
**हृदयबिच दया नै छैन ता व्यर्थ नै भो ।**
**जबतक विषयैमा मुग्ध भै नै रह्यो त**
**सकल विफल पाऱ्यो ज्ञानका मार्ग त्यो त ) ॥**

*॥ इति चतुर्दशोऽध्यायः समाप्तम् ॥*







# अथ पञ्चदशोऽध्यायः

आडम्बरी नहोऊँ

**यस्य चित्तं द्रवीभूतं कृपया सर्वजन्तुषु ।**
**तस्य ज्ञानेन मोक्षेण किं जटाभस्मलेपनैः ॥१॥**

जस्को चित्त छ प्राणिमात्र सबमा पग्ल्यो दयालू बनी
ध्यान, ज्ञान, जपादि साधनहरु आवश्यकै छैन नि ।
तस्मात् मुख्य दया[1] छ गर्नु लिनु यो जस्मा दया छैन ता
ब्यर्थै हुन् बहिरङ्गि चिन्हहरु सब् आडम्बरै मात्रका ॥

**जसको चित्त सबै प्राणीहरूमा दयाले पग्लिन्छ, त्यसलाई ज्ञानले, मोक्षले, जटाले र बिभूत लेपनले के गर्छ र? ॥१॥**

सबैको मूल मन्त्र 'ॐ'

**एकमेवाक्षरं यस्तु गुरुः शिष्यं प्रबोधयेत् ।**
**पृथिव्यां नास्ति तद्द्रव्यं यद्दत्वा चानृणी भवेत् ॥२॥**

एकाक्षरी प्रणव[2]को सद्गुरुबाट जो सुन्यो ।
त्यो गुरुमा दिने वस्तु सेवा र प्रेम हो ठुलो ॥
(सद्गुरुमा त सर्वस्व पनि तृण समान हो ।
सर्वस्व दिन को सक्ला? सेवा र प्रेम मुख्य हो)॥

**जो गुरुले शिष्यलाई एउटै अक्षर मात्र उपदेश गर्दछ, त्यसबाट उत्तीर्ण हुने शिष्यले गुरुलाई दिने वस्तु यस संसारमा केही पनि छैन ॥२॥**

---

१. दानं दरिद्रस्य विभोश्च शान्तिः, यूनां तपो ज्ञानवतां च मौनम् ।
इच्छानिवृत्तिश्च सुखान्वितानां, दया च भूतेषु दिवं नयन्ति ॥

२. यस्तै सन्दर्भको आशय तेह्रौं अध्यायको श्लोक १९मा पनि उल्लेख गरिएको छ ।

मूर्खबाट टाढै रहनु वेश

**खलानां कण्टकानां च द्विविधैव प्रतिक्रिया।**
**उपानन्मुखभङ्गो वा दूरतो वा विसर्जनम् ॥३॥**

जुत्ताले पाउको रक्षा, दुष्टमा राख्नु पर्छ होश्।
फुर्क्याएर लिनू काम कि त टाढा हुनू छ वेश्॥

**खल अर्थात् दुष्ट र काँढ़ा यिनको उपाय दुई प्रकारको मात्र छ, कि त जुत्ताले मुख तोड्नु कि टाढाबाट त्यागनु ॥३॥**

दारिद्र्य र पाप भोग्नुपर्ने कार्य नगरौं

**कुचैलिनं दन्तमलोपधारिणं बह्वाशिनं निष्ठुरभाषिणं च।**
**सूर्योदये चास्तमिते शयानं विमुञ्चति श्रीर्यदि चक्रपाणिः ॥४॥**

अशुद्ध,-मैलो कपडादि पैहे, बोली छ ठरों, अति धेर खाए।
सूर्यास्त सूर्योदयमा त सुत्ने दारिद्र्य औ पाप छ भोग्नु पर्ने ॥
(सूर्यास्त सूर्योदयमा सुतेका छन् धेर् धनाढ्यै अघि आर्जिएका।
अैले गरिब् वा धनि होस् पछी त दारिद्र्य, पाप् ता सब भोग्नु पर्छ)

**मलिन अर्थात् मैलो वस्त्र लगाएकालाई, दाँतको मयल नफाल्ने (दाँत नमाझ्ने) लाई, धेरै भोजन गर्नेलाई, कटुभाषा अर्थात् नमीठो वचन बोल्नेलाई र सूर्य उदाउने अस्ताउने बेलामा सुत्नेलाई विष्णु नै भए पनि लक्ष्मीले त्यागदछिन् ॥४॥**

कसले के त्याग्दछन् ?

**त्यजन्ति मित्राणि धनैर्विहीनं दाराश्च भृत्याश्च सुसज्जनाश्च।**
**तं चार्थवन्तं पुनराश्रयन्ते ह्यर्थो हि लोके पुरुषस्य बन्धुः॥५॥**

निर्धनीलाइ मित्र, स्त्री,-बन्धुले त्याग्दछन्, तर
सज्जन्ले धन ता जे होस् धर्मै गर्छन् निरन्तर ॥

**मित्र, स्त्री, सेवक र बन्धु यी सबै धनले रहित पुरुषलाई छोड़िदिन्छन् र फेरि यदि त्यही धनी भयो भने त्यसै धनवान्को फेरि आश्रय गर्दछन्। निश्चय छ कि धन नै पुरुषको संसारमा बन्धु हो ॥५॥**

अन्यायले धन आर्जन नगरौं

**अन्यायोपार्जितं द्रव्यं दशवर्षाणि तिष्ठति ।**
**प्राप्ते चैकादशे वर्षे समूलं च विनश्यति ॥६॥**

अन्यायोपार्जित धन बस्ला दश्‌वर्षसम्म त ।
त्यस्पछि मूल नै नाश भई त्यो नर्क पर्दछ ॥
(अन्यायले धन आर्ज्यो भोग्छन् सर्व जहानले ।
नर्कको दुःख भोग्नू ता पर्दछ आफु मात्रले ॥
दश वर्षमा नाश न भै बस्ला धेर् वर्ष नै तर ।
अन्यायको कु-फल् भोग्न पर्छ यो त अकाट्य छ)॥

**अन्यायले बटुलिएको धन दश वर्षसम्म त रहन्छ तर एघारौं वर्ष प्राप्त भएपछि मूलसहित नष्ट हुन्छ, यसमा सन्देह छैन ॥६॥**

पात्रानुसारका विषयहरू

**अयुक्तं स्वामिनो युक्तं युक्तं नीचस्य दूषणम् ।**
**अमृतं राहवे मृत्युर्विषं शङ्करभूषणम् ॥७॥**

शक्तीवान्‌कन जुन्सुकै चिज हओस् त्यो हुन्छ नै भूषण
दुर्जन्‌लाइ त योग्य वस्तु यदि होस् पार्दिन्छ है दूषण ।
राहू मृत्यु गऱ्यो सुधा शिवजिमा त्यै वीष भो भूषण
अर्धङ्गो भइ राहु जीवित भयो राम्रै गरौं सेवन ॥

**अयोग्य वस्तु पनि समर्थवान्‌लाई योग्य हुन्छ, नीचलाई योग्य वस्तु पनि दूषण हुन्छ । अमृतले राहुको मृत्यु भयो, विष भगवान् शंकरको भूषण भयो ॥७॥**

वास्तविक धर्म यो हो

**तद्‌भोजनं यद्‌द्विजभुक्तशेषं तत्सौहृदं यत् क्रियते परस्मिन् ।**
**सा प्रज्ञता या न करोति पापं दम्भं विना यः क्रियते स धर्मः ॥८॥**

सज्जन्‌मा दिइ खानु अमृत छ यो, सज्जन् शिवै रुप हुन्
अर्काको हित गर्छ मित्र उहि हो दुष्कर्म गर्दैन जुन्

सोही जान्नु सुबुद्धिको नर भनी दानादि सत्कर्मको
लिन्नन् 'गर्व' र गर्दछन् सुखी भई त्यै धर्म हो जान्नु यो ॥

**त्यही भोजन हो जो ब्राह्मणको भोजनबाट उब्रेको (बचेको) छ, जो अर्काको जाती हो त्यही मित्र हो, जसले पाप गर्दैन त्यही बुद्धिमान् हो, जो विनादम्भले दान गरिन्छ त्यही धर्म हो ॥८॥**

जुन ठाउँको भए पनि राम्रो वस्तु राम्रै हुन्छ

**मणिर्लुण्ठति पादाग्रे काचः शिरसि धार्यते ।**
**क्रयविक्रयबेलायां काचः काचो मणिर्मणिः ॥९॥**

शिर्मा काँच र पाउमा मणि राखौं यथार्थमा ।
मूल्यमा काँच जाँदैन, मणिका मूल्य पङ्क्तिमा ॥

**मणि गोड़ामा दलियोस्, काँच शिरमा धारण गरियोस्, तर क्रय विक्रय गर्ने बेलामा मणि मणि नै हुन्छ र काँच काँच नै हुन्छ ॥९॥**

बुद्धिमान्ले थोरैबाट पनि धेरै कुरा जान्दछन्

**अनन्तशास्त्रं बहुलाश्च विद्या अल्पश्च कालो बहवश्च विघ्नाः ।**
**यत्सारभूतं तदुपासनीयं हंसो यथा क्षीरमिवाम्बुमध्यात् ॥१०॥**

अनन्त छन् शास्त्र विद्या, थोरै काल, धेर विघ्न छन्।
सार लिनू छ, पानीमा हाँस्लेझैं दूध झिक्दछन् ॥

**शास्त्र अपार छ र विद्या धेरै छन्, काल थोरै र बाधा धेरै छन्। यसकारण जो सारवान् छ त्यसलाई लिनु योग्य छ । जस्तै हंस (हाँस) जलका मध्यबाट दूधलाई लिन्छ ॥१०॥**

अतिथिसेवा आवश्यक

**दूरागतातिथिं श्रान्तं वृथा च गृहमागतम् ।**
**अनर्चयित्वा यो भुङ्क्ते स वै चाण्डाल उच्यते ॥११॥**

थाकेका बटुवाको र आर्त, एक्लो अतिथिको ।
सक्दो सेवाविना खान्छ भने चाण्डाल् सरी भयो ॥

**टाढ़ाबाट आएकालाई, बाटो हिंड्दा हिंड्दा थाकेकालाई, कुनै स्वार्थ नलिई घरमा आएकालाई नपूजीकन जो खान्छ त्यही चाण्डाल भनिन्छ ॥११॥**

वास्तवमा हुनुपर्ने ज्ञान हो

**पठन्ति चतुरो वेदान् धर्मशास्त्रण्यनेकशः ।**
**आत्मानं नैव जानन्ति दर्वी पाकरसं यथा ।।१२।।**

चारै वेद[1] र षट् शास्त्र[2] पढोस् जो परमात्मको ।
ज्ञान छैन भने त्यो हो 'डाडू' झैं स्वादहीनको ।।

**चारै वेद र अनेक धर्मशास्त्र पढ्दछन्, तर आत्मालाई चिन्दैनन्, जस्तै डाडु सबै थोकको रसमा डुबिरहन्छ, तर स्वाद पाउँदैन ।। १२ ।।**

सज्जन-महात्माहरूको सङ्गत गरौं

**धन्या द्विजमयी नौका विपरीता भवार्णवे ।**
**तरन्त्यधोगताः सर्वे उपरिस्थाः पतन्त्यधः ।।१३।।**

डुङ्गारूपी महात्मा हुन्, सङ्गले हुन्छ पार त्यो ।
सेवा सङ्गत गर्दैन भने पतन हुन्छ त्यो ।।

**ब्राह्मणरूपी डुँगा प्रशंसा गर्न योग्य छ, संसाररूपी समुद्रमा यसको उल्टो रीति छ, यसमुनि बस्ने मानिस अर्थात् ब्राह्मणसँग जो नम्र रहन्छ त्यही पार लाग्छ, जो नम्र हुँदैन त्यो नरकमा पर्छ ।। १३ ।।**

आफ्नै घर गौरवता

**अयममृतनिधानं नायकोऽप्यौषधीनां**
**अमृतमयशरीरः कान्तियुक्तोऽपि चन्द्रः।**
**भवति विगतरश्मिर्मण्डलं प्रत्य भानोः**
**परसदननिविष्टः को लघुत्वं न याति ।।१४।।**

सुधालय औषधीश सुधा देह छ चन्द्रको ।
सूर्य साम्ने त निस्तेजी हुन्छन् घर पराइको ।।

**अमृतको घर औषधिहरूका अधिपति तथा अमृतमय शरीर**

---

१. **चार वेद=** ऋक्, यजु, साम, अथर्व ।
२. **षट्शास्त्र (दर्शन)=** हिन्दूका तत्त्वज्ञानसम्बन्धी छः दर्शन वा शास्त्र (साङ्ख्य, योग, न्याय, वैशेषिक, पूर्वमीमांसा र उत्तरमीमांसा), साथै स्मृति, पुराण, वेदानुकूलका तन्त्र आदि ।

**भएका कान्तियुक्त चन्द्रमा पनि सूर्यमण्डलमा गएपछि निस्तेज हुन्छन् भने अर्काको घरमा बसेर कसले लघुता पाउँदैन? ॥१४॥**

सहनशील बनौं

**अलिरयं नलिनीदलमध्यगःमलिनीमकरन्दमदालसः ।**
**विधिवशात् परदेशमुपागतः कुटज[1] पुष्परसं बहु मन्यते ॥१५॥**

कमल्-फूल्को मीठो रसहरु चुसेका ति भवँरा
तितेगुम्पातीको रस पनि त खान्छन् ति विचरा! ।
जहाँ जस्तो पर्छन् सकल सहनू शान्त मनले
पशूपक्षीबाटै पनि लिनु छ शिक्षा मनुजले ॥

**यो भँवरा कमलिनीका पातको मध्यमा कमलिनीका रसले अल्छी भइरहन्थ्यो । अब दैववश परदेशमा आएर अगस्तिका फूलको रसमा पनि मस्त छ ॥१५॥**

घमण्डी कहिल्यै नबनौं

**पीतोऽगस्तेन तातश्चरणतलहतो वल्लभो येन रोषा**
**दाबाल्याद्विप्रवर्यैः स्ववदनविवरे धार्यते वैरिणी मे ।**
**गेहं मे छेदयन्ति प्रतिदिवसमुमाकान्तपूजानिमित्तं**
**तस्मात् खिन्ना सदाऽहं द्विजकुलनिलयं नाथ! रुष्टा त्यजामि॥१६॥**

खाए मेरा पिताजी[2] पति हरि जसले लात्तिले हान्दिए[3] जो
फूल् टिप्छन् पद्मको श्री शिव पुजन भनी[4] वैरिणी भारती[5]को-

---

१. इन्द्रजौको रुखलाई पनि कुटज भनिन्छ ।
२. लक्ष्मीका पिता मानिएका समुद्रलाई अगस्तिले पिए ।
३. भृगुले विष्णुलाई लात्तीले हाने भन्ने पौराणिक कथा छ ।
४. लक्ष्मीको प्रिय भएको फूल (पद्म) टिपिदिए ।
५. पौराणिक कथाअनुसार भारती (सरस्वती) को र लक्ष्मीको वैरत्व थियो भन्ने बताइएको छ कतै ।

**विद्या वा धनको गर्व राखेर वैमनस्यता ।**
**न गरून् भाव यो होला सत् शिक्षा नीतिकारका ।।**

लक्ष्मीले भन्दछिन् यो, तर सुपथिकमा बस्दछिन् नित्य हेर
विद्याको गर्व राखी कुपथिक न हउन् अर्थ बुझ्नू गुनेर ॥

**अगस्तिले मेरा पितालाई पिइदिए, जसले क्रोध गरेर मेरा पतिलाई लात्तीले हानिदिए, जो श्रेष्ठ ब्राह्मण केटाकेटीदेखि आफ्ना मुख विवरमा मेरी वैरिणी (सरस्वती) लाई राख्दछन्, प्रतिदिन पार्वतीका पतिको पूजाका निम्ति मेरो गृह कमल फूल टिप्दछन् । हे नाथ ! यसैकारण खिन्न भएर ब्राह्मणहरूका घरलाई म सदा त्याग्दछु, यो लक्ष्मीले भनेको हो ॥१६॥**

## प्रेमरूपी बन्धन

**बन्धनानि खलु सन्ति बहूनि प्रेमरज्जुकृतबन्धनमन्यत् ।**
**दारुभेदनिपुणोऽपि षडङ्घ्रिः निष्क्रियो भवति पङ्कजकोशे ॥१७॥**

धेरैथरी बन्धन छन् त तिन्मा प्रेमै छ डोरी बलियो सबैमा ।
काठ् प्वाल पार्ने भँवराहरू त बाँधिन्छ नै पङ्कज फूलभित्र[१] ॥

**बन्धन ता धेरै छन् परन्तु प्रेमका डोरीको बन्धन बलियो हुन्छ, काठमा प्वाल पार्न सक्ने भए पनि भँवरा कमलका कोशमा बेकामे हुन्छ अर्थात् केही गर्न सक्तैन ॥१७॥**

## जेपरे पनि कुलीनले सुशील छाड्दैन

**छिन्नापि चन्दनतरुर्न जहाति गन्धं**
**वृद्धोऽपि वारणपतिर्न जहाति लीलाम् ।**
**यन्त्रार्पितो मधुरतां न जहाति चेक्षुः**
**जीर्णोऽपि न त्यजति शीलगुणान् कुलीनः ॥१८॥**

श्रीखण्ड काटे नि सुगन्ध दिन्छ बूढो हओस् हात्ति विलासि नै छ ।
पेलोस् मिठै हुन्छ नि त्यो उँखू त सुशील छाड्दैन कुलीनले त ॥

---

१. रात्रिर्गमिष्यति भविष्यति सुप्रभातम्
भास्वानुदेष्यति हसिष्यति पङ्कजश्रीः ।
इत्थं विचिन्तयति कोशगते द्विरेफे
हा हन्त ! हन्त !! नलिनीं गज उज्जहार ॥—(शिवराज विजय) ॥

**चन्दनको वृक्ष काटिएर पनि गन्ध आउन छाड्दैन, हात्ती बूढो भए पनि विलास छोड्दैन, ऊँखु कोलमा पेले पनि मधुरता त्याग्दैन, कुलीन पुरुष दरिद्र भए पनि सुशीलताको गुण त्याग्दैन ॥१८॥**

अन्त:स्करणमा परमात्मा सम्झिरहौं

**ऊर्व्यां कोऽपि महीधरो लघुतरो दोर्भ्यां धृतो लीलया**
**तेन त्वं दिवि भूतले च सततं गोवर्द्धनो गीयसे ।**
**त्वां त्रैलोक्यधरं वहामि कुचयोः अग्रेण तद् गण्यते**
**किं वा केशव भाषणेन बहुना पुण्यैर्यशो लभ्यते ॥१९॥**

गोवर्द्धन्धारि भन्छन् सुगत लघु गिरी धारदा हे व्रजेश !
तीनैलोक्लाइ धार्ने हे प्रभु हरि मत्रिंले राख्दछू चित्तभित्र ।
मेरो ता छैन नामै तर न भइरहोस् नामको छैन इच्छा
हृद्वासी विश्वआत्मन् प्रभु अब न भुलूँ नित्य यै माग्छु भिक्षा ॥

**पृथ्वीमा कुनै अत्यन्त हलुको पर्वतलाई अनायास बाहुमा धारण गर्दा तपाई स्वर्ग र पृथ्वीतलमा सर्वथा गोवर्धनधारी कहिनुहुन्छ । तीनै लोकलाई धारण गर्ने भएका हजूरलाई म केवल कुचका अग्र भागमा धारण गर्दछु, यो केही गनिंदैन, हे केशव ! धैरै भनेर के गर्नु, पुण्यले मात्र यो यश पाइन्छ ॥१९॥**

**(यदि नयन नहोस् ता दर्पणै काम के भो ?**
**पढि बुझि यदि शिक्षा लिन्न ता डाडुझैं भो ।**
**विषय मद नराखे मोक्षको मार्ग लेला**
**मन नयन मुमुक्षू भो त त्यो मोक्ष होला ) ।।**

*॥ इति पञ्चदशोऽध्यायः समाप्तम् ॥*



# अथ षोडशोऽध्यायः

पश्चात्ताप (पछुतो)

**न ध्यातं पदमीश्वरस्य विधिवत्संसारविच्छित्तये**
**स्वर्गद्वारकपाटपाटनपटुर्धर्मोऽपि नोपार्जितः[1]।**
**नारीपीनपयोधरोरुयुगलं स्वप्नेऽपि नालिंगितं**
**मातुः केवलमेव यौवनवनच्छेदे कुठारा वयम् ॥ १ ॥**

मैले ध्यान गरें न ईश्वरजिको संसार तर्नें कुरा
स्वर्ग-प्राप्ति निमित्त धर्म नगरें सेवा महात्मादिका ।
सु-स्त्री प्रेम गरें न ता सुख लियें, माताजिको यौवन-
रूपी त्यो तरु काटने म त बनें केवल् कुठारा[2]ऽधम ॥

**संसारबाट मुक्त हुनको लागि विधिवत् ईश्वरका पदको ध्यान मबाट केही भएन, स्वर्गद्वारको ढोका खोल्न पनि समर्थ भइनँ, स्त्रीका दुवै स्तन र जङ्घाको आलिङ्गन स्वप्नमा पनि गरिनँ, म केवल आफ्नी माताको यौवनरूपी वृक्षलाई काट्ने बञ्चरो मात्र भएँ अर्थात् माताको चढ्दो उमेर बिगार्न मात्र जन्मँदो भएँ ॥ १ ॥**

---

१. मया न दत्तं न हुतं हुताशने, तपो न तप्तं त्रिदशा न पूजिताः ।
न तीर्थसेवा विहिता विधानतो देहिन् ! क्वचिन्निस्तर यत्त्वया कृतम् ॥
न पूजिता विप्रगणाः सुरापगा, न चाश्रिताः सत्पुरुषाः न सेविता ।
जलाशयो नैव कृतो हि निर्जले, मनुष्यहेतोः पशुपक्षिहेतवे ॥
गोविप्रवृत्यर्थमकारि नाण्वपि, देहिन् ! क्वचिन्निस्तर यत्त्वया कृतम् ॥
न नित्यदानं न गवाण्हिकं कृतं, न वेदशास्त्रार्थवचः प्रमाणितम् ।
श्रुतंपुराणं न च पूजितो ज्ञो, देहिन् ! क्वचिन्निस्तर यत्त्वया कृतम् ॥
—(गरुडपुराण सारोद्धार २/३५-३६-३८) ॥

२. सेवा सुखानां व्यसनं धनानां, याच्ञा गुरुणां कुनृपः प्रजानाम् ।
प्रणष्टशीलश्च सुतः कुलानां, मूलावघातः कठिनः कुठारः ॥—(भोजप्रबन्ध १००)
कुठार = बन्चरो, टाँगी-फर्सा ॥

## कुलटा स्त्रीको स्वभाव

**जल्पन्ति सार्द्धमन्येन पश्यन्त्यन्नं सविभ्रमाः ।**
**हृदये चिन्तयन्त्यन्न्यं न स्त्रीणामेकतो रतिः ॥२॥**

व्यर्थैमा गर्दछे बात हेर्दछे मोहभावले ।
कुस्त्रीले अरुकै चिन्ता गर्छन् चञ्चलभावले ॥

**अर्काको साथ भाषण गर्दछे, अर्कालाई विह्वल भएर हेर्दछे, हृदयमा अर्काको चिन्ता गर्दछे, स्त्रीहरूको प्रीति कहिल्यै पनि एउटामा रहँदैन ॥२॥**

## स्त्रीमा पूर्ण विश्वास गर्नुहुँदैन

**यो मोहान्मन्यते मूढो रक्तेयं मयि कामिनी ।**
**स तस्य वशगो भूत्वा नृत्येत् क्रीडशकुन्तवत् ॥३॥**

प्रेम गर्छे ममा मात्र स्त्रीले जो जन सोच्छ यो ।
खेलको पक्षीजस्तै भै पराधिन्मा त पर्छ त्यो ॥
(होला सद्भाव सुस्त्रीमा तर भित्री स्वभाव जो ।
केही कुटिल भैराख्नु स्त्रीको प्राकृति-दोष हो) ॥

**जो मूर्ख विवेक नगरी यो सम्झन्छन् कि यो कामिनी मैमाथि प्रेम गर्दछे, त्यो मूर्ख त्यही स्त्रीका वशमा परेर खेलको पक्षीसमान नाचिरहन्छ ॥३॥**

## के-के गर्नु हुँदैन ?

**कोऽर्थान्प्राप्य न गर्वितो विषयिणः कस्यापदोऽस्तं गतः**
**स्त्रीभिः कस्य न खण्डितं भुवि मनः को नाम राज्ञः प्रियः।**
**कः कालस्य न गोचरत्वमगमत् कोऽर्थी गतो गौरवं**
**को वा दुर्जनदुर्गुणेषु पतितः क्षेमेण यातः पथि ॥४॥**

राजाको प्रिय भै रहन्छ कुन लौ गर्छन् सबै शोक के ?
धन् पाए पनि हुन्न गर्व लिनु क्यै चिन्ता लिई लाभ के?

१. अति मुग्ध भई प्रेम गर्नु हुन्न कहीं पनि ।
वेश्या-स्त्रीका वश परी बिग्रे राजाहरू पनि ॥

मार्ग्ने बानि त वेश हैन बुझनू, कुसङ्ग नै नर्क हो
स्त्रीमा मुग्ध[१] अधिक् नहोउ कहिल्यै यो शास्त्रकै अर्ति हो ।।

**धन पाएर अभिमान (गर्व) नगर्ने को भयो, कुन विषयीको विपत्ति नष्ट भयो, पृथ्वीमा कसको मनलाई स्त्रीहरूले खण्डित गरेनन्?, राजाको प्रिय को भयो?, कालका वशमा को परेन?, कुन याचक (माग्ने) ले गुरुता पायो?, दुष्टतामा नपरेर संसारबाट कुशलतासँग को गयो? ।।४।।**

विनाश कालमा बुद्धि बिग्रन्छ

**न निर्मिता केन न दृष्टपूर्वा न श्रूयते हेममयी कुरङ्गी ।**
**तथापि तृष्णारघुनन्दनस्य विनाशकाले विपरीत बुद्धिः[२] ।।५।।**

देखे कसैले न रचे पहीले सुनेन कोही तर रामजीले ।
तृष्णा लिएछन् 'सुन-मीर्ग' माथि विनाशमा बिग्रन जान्छ बुद्धि ।।
(मृग मार्न भनी राम हिंड्दा सीता हरण् भयो ।
हिंसाले हुन्न कल्याण, दया कल्याण मूल हो) ।।

**सुनको मृग न कसैले पहिले रच्यो, न कसैले देख्यो र न कसैले सुन्यो, तर पनि रघुनन्दनलाई तृष्णा भयो, विनाशका समयमा बुद्धि विपरीत हुन्छ ।।५।।**

सद्गुण नै सर्वोत्तम गुण हो

**गुणैरुत्तमतां यान्ति नोच्चैरासनसंस्थिताः ।**
**प्रासादशिखरस्थोऽपि काकः किं गरुडायते ।।६।।**

गुणले उत्तम हुन्छ उच्चासन् मात्र के छ र ?
कौसीमा नै बसोस् कौवा गरुडसरि हुन्छ र ? ।।

**मनुष्य असल गुणहरूले उत्तमता पाउँछ, अग्लो आसनमा बसेर हुँदैन, के राजमहलको छानामा बस्नाले नै काग गरुड़ हुन्छ र? ।।६।।**

---

२. असंभवं हेम मृगस्य जन्म, तथापि रामो लुलुभे मृगाय ।
प्रायः समापन्न-विपत्तिकाले, धियोऽपि पुंसो मलिना भवन्ति ।।

**गुणाः सर्वत्र पूज्यन्ते न महत्योपि सम्पदः ।**
**पूर्णेन्दुः किं तथा वन्द्यो निष्कलङ्को यथा कृशः ॥७॥**

गुण पुजिन्छ[1], सम्पत्ति पूजिन्नन्, चन्द्रमा उनै-
द्वितीया शुक्लका जस्तै मान्दैनन् पूर्णिमा कुनै ॥

आफ्नो प्रशंसा आफैंले नगरौं

**परमोक्तगुणो यस्तु निर्गुणोऽपि गुणो भवेत् ।**
**इन्द्रोपि लघुतां याति स्वयं प्रख्यापितैर्गुणैः ॥८॥**

अरूले वर्णन गरे निर्गुणी पनि भो गुणी ।
आफ्नो प्रशंसा[2] आफैंले गरे मृत्युसरी छ नि ॥
(स्व-प्रशंसा गर पार्थ ! हुन्छौ मृत्युसमानमा ।
श्रीकृष्णोक्ति छ यो 'महाभारत' कर्णपर्वमा) ॥

**जसका गुणको अर्काले वर्णन गर्दछन् त्यो निर्गुण भए पनि गुणवान् ठानिन्छ, इन्द्र पनि आफ्नो गुणको प्रशंसा आफै गर्नाले लघुतामा प्राप्त हुन्छन् ॥८॥**

सुपात्र र अभयदान अविनाशी हुन्छ

**विवेकिनमनुप्राप्ता गुणा यान्ति मनोज्ञताम् ।**
**सुतरां रत्नमाभाति चामीकरनियोजितम् ॥९॥**

विवेकी जन पाएर गुणले स्थान पाउँछ ।
सुनमा जडिए रत्न, रत्न शोभित बन्दछ ॥

**विवेकीलाई पाएर गुण सुन्दरतामा प्राप्त हुन्छ । जस्तै सुनमा जड़िएको रत्न अत्यन्त शोभित हुन्छ ॥९॥**

---

१. गुणं पृच्छस्व मा रूपं, शीलं पृच्छस्व मा कुलम् ।
सिद्धिं पृच्छस्व मा विद्यां, भोगं पृच्छस्व मा धनम् ॥ —(सुभाषितरत्न) ।
नरस्याऽभरणं रूपं, रूपस्याऽभरणं गुणः ।
गुणस्याऽभरणं ज्ञानं, ज्ञानस्याऽभरणं क्षमा ॥—(सुभाषितरत्नभाण्डागार) ।

२. अभिमानं सुरापानं गौरवं रौरवं समम् ।
प्रतिष्ठा सूकरी विष्ठा त्रयं त्यक्त्वा हरिं भजेत् ॥

असल साथीको सङ्गतले गहन भइन्छ

**गुणैः सर्वत्र तुल्योऽपि सीदत्येको निराश्रयः ।**
**अनर्घ्यमपि माणिक्यं हेमाश्रयमपेक्षते ॥१०॥**

साथी चाहिन्छ एक्लो ता गुणी होस् दुःख पाउँछ ।
अमूल्य मणि हो किन्तु सुनमा छ अपेक्षित ॥
(साथी हुन् वा नहुन् किन्तु बुझ्नेले लिन्छ धैर्य त ।
भए सन्मार्गि साथी हुन् नत्र नहुनु वेश छ ) ॥

**गुणहरूले युक्त ईश्वरको समान पनि एक्लो निर्बल मनुष्यले दुःख पाउँछ । अनमोल माणिक्य पनि सुनको अवलम्बनको अपेक्षा गर्दछ, अर्थात् सुनमा जड़िनको अपेक्षा गर्दछ ॥१०॥**

दुष्टबाट केही आशै नगरौं

**अतिक्लेशेन ये ह्यर्था धर्मस्यातिक्रमेण तु ।**
**शत्रूणां प्रणिपातेन ये ह्यर्था मा भवन्तु मे ॥११॥**

अत्यन्त पीडा अनि धर्म त्याग; वैरीहरूबाट कृपा गरेर ।
पाइन्छ जो द्रव्यहरू मलाई; नहोस् कुनै बस्छु म दुःख पाई ॥

**जो धन अति दुःखले, धर्मका त्यागले, वैरीहरूको पाउ पर्नाले प्राप्त हुन्छ, त्यो धन मेरो नहोस् ॥११॥**

धन कसरी राख्नु पर्छ ?

**किं त्वया क्रियते लक्ष्म्या या वधूरिव केवला ।**
**सा तु वेश्येव सामान्यपथिकैरपि भुज्यते ॥१२॥**

शर्मिन्दा-विनयी वधूसरि गरी ज्यादै दबाइन्छ जो,
छिट्टै पाउन ता सकिन्न धन त्यो, वास्ता गरींदैन जो ।
वेश्याकैसरि जान्नु त्यो धन पनी जस्ले हओस् भोग्दछन्
तस्मात् युक्ति गरेर राख्नु धन जो मौका जसो पर्दछन् ॥

**त्यस सम्पत्तिले के हुन सक्छ, जो वधू समान दबिएको छ । जो साधारण वेश्याका समान छ त्यो पथिकहरूले पनि भोगिन्छ ॥१२॥**

संसारमा आसक्ति राख्नु व्यर्थ छ

**धनेषु जीवितव्यं च स्त्रीषु चाहारकर्मसु ।**
**अतृप्ताः प्राणिनः सर्वे याता यास्यन्ति यान्ति च ॥१३॥**

स्त्रीमा भोजनमा र जीवनमहाँ द्रव्यादि जो-जो त छन्
प्राणी तृप्ति नभै गए अब पनी जाने र जाँदै ति छन्[1] ।
माया जाल र षट् विकारहरुमा पर्ने त यस्तै ति हुन्
वैराग्यान्तर चित्तका जनहरू आसक्ति नै छाड्दछन् ॥

**धन, जीवन, स्त्री र भोजनमा सबै प्राणी अतृप्त भएर गए, जान्छन्, र जानेछन् ॥१३॥**

अभयदान ठूलो धर्म हो

**क्षीयन्ते सर्वदानानि यज्ञहोमबलिक्रियाः।**
**न क्षीयन्ते पात्रदानमभयं सर्वदेहिनाम् ॥१४॥**

गर्छन् कर्म त काम्यका जनहरू होमार्चना दान त
सत्पात्रादि विहीन पूर्ण फल ता मिल्दैन यो सत्य छ ।
गर्छन् दान सुपात्रमा, अभयदान् प्राणीहरूमा दिए
कैल्यै क्षीण हुँदैन युक्ति छ यही सत्कर्म जानी लिए ॥

**दान, बलि, यज्ञ, होम यी सबै नष्ट हुन्छन्, सत्पात्रलाई दिएको दान र सबै जीवलाई अभयदान-यी क्षीण हुँदैनन् ॥१४॥**

लोभी बनेर माग्नु खराब हो

**तृणं लघु तृणात् तूलं तूलादपि च याचकः ।**
**वायुना किं न नीतोऽसौ मामयं याचयिष्यति ॥१५॥**

(१)नजातु कामः कामनामुपभोगेन शाम्यति ।
हविषा कृष्णवर्त्मैव भूय एवाभिवर्धते ॥ —(श्रीमद्भा. ५/१९/१४) ॥
**कामना हुन्न संतृप्ति उपभोग गरोस् जति ।**
**बलेको अग्निमा तेल घिउ थप्दा बढेसरि ॥**
शय्या वस्त्रं चन्दनं चारुहास्यं, वीणा वाणी सुन्दरी या च नारी ।
न भ्राजन्ते क्षुत्पिपासातुराणां, सर्वारम्भास्तण्डुलप्रस्थमूलाः ॥
—(सुभाषितरत्नभण्डागार)॥
**शैया चन्दन् गीत नृत्यादि बाजा,वस्त्रालङ्कार् सुन्दरी स्त्री मिलुन् वा ।**
**क्यै चाहन्नन् भोक तृषार्ति जो छन्; खानै पाए मात्र सारा रुची हुन् ॥**

उत्तरोत्तर हलुका तृण, कपास, वायु छन् ।
वायुभन्दा हलूका हुन् लोभी भै जुन माग्दछन् ॥

**तृण सबैभन्दा हलुको हुन्छ, तृणाभन्दा हलुङ्गो रूओ (कपास) हुन्छ, रूओभन्दा हलुङ्गो याचक (माग्ने) हुन्छ । यसलाई वायुले किन लगेन त ? यसले मसँग पनि माग्नेछ भन्ने डरले ॥१५॥**

मानभङ्ग हुने कार्य नगरौं

**वरं प्राणपरित्यागो मानभङ्गेन जीवनात् ।**
**प्राणत्यागे क्षणं दुःखं मानभङ्गो दिने दिने ॥१६॥**

मानभङ्ग भई बाँच्नुभन्दा त मर्नु वेश छ ।
मर्दा एक्क्षण हो दुःख मान-भङ्ग सधैंभर ॥
(मान भङ्ग हुने काम नगर्नु जनमैंभर ।
सर्वदा होश राखेर बस्दछन् बुद्धिमान् नर) ॥

**मानभङ्गपूर्वक जीउनुभन्दा प्राण त्याग्नु अर्थात् मृत्यु उत्तम छ, प्राणत्यागमा क्षणभर मात्र दुःख हुन्छ र मान-भङ्ग भएमा प्रतिदिन दुःख हुन्छ ॥१६॥**

सदैव मीठो र साँचो बोलौं

**प्रियवाक्य प्रदानेन सर्वे तुष्यन्ति जन्तवः ।**
**तस्मात्तदेव वक्तव्यं वचने का दरिद्रता? ॥१७॥**

सत्य र प्रिय बोल्दामा, खुशी हुन्छन् सबै, तर
झूठो नहोस् प्रिय बोल्नु, वाणी नपुग्नु के छ र?॥

**मीठो वचन बोल्नाले सबै सन्तुष्ट हुन्छन्, यसैले त्यही बोल्नुपर्छ । वचनमा के दरिद्रता छ? ॥१७॥**

प्रिय वाणी र सत्सङ्ग नै मीठा फल हुन्

**संसारकूटवृक्षस्य द्वे फले ह्यमृतोपमे ।**
**सुभाषितं च सुस्वादं सङ्गतिः सुजने वने ॥१८॥**

भवरूपी विष वृक्ष यस्मा फल सुधासरि ।
फल छन् प्रिय वाणी र सज्जन-सङ्ग सङ्गति ॥

**संसाररूपी विष वृक्षमा, अमृत तुल्य दुईवटा फल छन्-सरस प्रिय वचन र सज्जनहरूको संगति ॥१८॥**

सत्कर्महरू नै कल्याणकारक हुन्

**बहुजन्मसु चाभ्यस्तं दानमध्ययनं तपः ।**
**तेनैवाभ्यासयोगेन देहो ह्यभ्यस्यते पुनः ॥१९॥**

तप् गर्नु, दान् दिनु, पढ्नु जस्ले अभ्यास गर्दछ।
त्यै अभ्यास र बानीले दुवै लोक सपार्दछ ॥
(यै नित्य सम्झी सत्-विद्या अध्ययन् गर्नुपर्दछ) ॥

**धेरै जन्ममा अभ्यास गरेको दान दिनु, पढ्नु र तप गर्नुले तिनीहरूको अभ्यास गरिन्छ । त्यो अभ्यासको योगले त्यही अभ्यास फेरि फेरि गरिन्छ ॥१९॥**

यस्तो भएमा मौकामा काम नदिन सक्छ

**पुस्तकेषु च या विद्या परहस्तेषु यद्धनम् ।**
**उत्पन्नेषु च कार्येषु न सा विद्या न तद्धनम् ॥२०॥**

पुस्तक[1]मा रह्यो विद्या, अर्काका सँगको धन ।
मौकामा झट्ट मिल्दैन छट्पटि रन्छ यो मन ॥

**जो विद्या पुस्तकमा रहन्छ, जो धन अर्काका हातमा रहन्छ, काम परेमा न त्यो विद्या हुन्छ, न त्यो धन हुन्छ ॥२०॥**

**(प्रिय गुरुहरु साथै सत्य शास्त्रादि जो छन्**
**सकल सु-हित सम्झी सत्य शिक्षादि दिन्छन् ।**
**बुझनु त मनलाई आफ्नु नै काम हो त्यो**
**कुमति लिइरहेमा हानि आफ्नै गर्‍यो त्यो ) ॥**

*॥ इति षोडशोऽध्यायः समाप्तम् ॥*



१. पुस्तकं लेखनी नारी परहस्तेगतं धनम् ।
सा यदि पुनरायाति नष्टा भ्रष्टा च खण्डिता ॥

# अथ सप्तदशोऽध्यायः

गुरुमुखद्वारा नै अध्ययनादि गरे सफल हुन्छ

**पुस्तकं प्रत्ययाधीतं नाधीतं गुरुसन्निधौ ।**
**सभामध्ये न शोभन्ते जारगर्भा इव स्त्रियः ॥१॥**

गुरु विना पढ्यो जस्ले त्यो निश्चित् पतिहीनकि-
गर्भिणी स्त्रीसरी हुन्छ, पढ्नु गुरुसँगै बुझी ॥
(सच्चा गुरु नमिलेमा गुरुको स्मृतिपूर्वक ।
अध्ययनादि गर्नु र होला त्यो फलदायक ॥
गुरुको मूर्तिमा ध्यान दिएर एकलब्यले ।
धनुर्विद्या पार गरे गुरुको स्मृति मात्रले) ॥

**जसले केवल पुस्तक मात्र हेरी आफै पढ्यो, गुरुसँग पढ़ेन, त्यसले सभाका बीचमा व्यभिचारले गर्भवती भएका स्त्रीहरूको समान शोभा पाउँदैन ॥१॥**

उपकारको प्रत्युपकार गर्नु नै पर्दछ

**कृते प्रतिकृतिं कुर्याद्धिंसने प्रतिहिंसनम् ।**
**तत्र दोषं न पश्यन्ति दुष्टे दौष्ट्यं समाचरेत् ॥२॥**

उपकार गरेकोमा गर्नु प्रत्युपकार त ।
मार्न खोजे मार्न हुन्छ, क्षमा गर्छन् महात्मा त ॥

**उपकार गरेपछि प्रत्युपकार गर्नुपर्छ, मारेपछि मार्नुपर्छ । यसमा अपराध हुँदैन; किनभने दुष्टता गर्नेप्रति दुष्टताकै आचरण गर्नु उचित छ ॥२॥**

तपस्याको शक्ति

**यद्दूरं यद् दुराराध्यं यच्च दूरे व्यवस्थितम् ।**
**तत्सर्वं तपसा साध्यं तपो हि दुरतिक्रमम् ॥३॥**

टाढा राखिन्छ टाढा छ आराधना असम्भव ।
त्यो सबै तपले सिद्ध हुन्छ यो तप-शक्ति छ ॥
(कामना तपले अन्त्यं नाशिए धेर दानव ।
निष्काम्य तपले मोक्ष मिल्दछ यै छ गौरव) ॥

**जो टाढ़ा छ त्यसको आराधना हुन सक्तैन । जो टाढ़ा राखिएको छ त्यो सबै तपले सिद्ध हुन सक्दछ । त्यसैकारण तप सबैभन्दा प्रबल छ ॥३॥**

विविध शुभाशुभ गुणहरू

**लोभश्चेदगुणेन किं पिशुनता यद्यस्ति किं पातकैः**
**सत्यं चेत्तपसा च किं शुचिमनो यद्यस्तितीर्थेन किम्?**
**सौजन्यं यदि किं गुणैः सुमहिमा यद्यस्ति किं मण्डनैः**
**यद्विद्या यदि किं धनैरपयशो यद्यस्ति किं मृत्युना ॥४॥**

जस्मा लोभ छ सर्व दोष यहि हो चुक्ली महापाप हो
जस्मा सत्य छ जान्नु यै तप ठुलो मन् शुद्ध नै तीर्थ हो।
शीलैको गहना[1] र सज्जन हुनू यै हो गुणोत्तम् गुण
सद्-विद्या धन हो र मृत्युसरि हो भैगो भने अप्जस ॥

**यदि लोभ छ भने अर्को दोष किन चाहियो ? यदि अर्काको चुक्ली लगाउने बानी छ भने पाप किन चाहियो ? यदि सत्यता छ भने तपको के प्रयोजन छ ? यदि मन स्वच्छ छ भने तीर्थ किन चाहियो ? यदि सज्जनता छ भने अरू गुण किन चाहियो ? यदि महिमा छ भने गहना किन चाहियो ? यदि अपयश छ भने मृत्यु किन चाहियो? ॥४॥**

---

१. हस्तस्य भूषणं दानं, सत्यं कण्ठस्य भूषणम् ।
श्रोतस्य भूषणं शास्त्रं, भूषणैः किं प्रयोजनम् ॥—(सुभाषितरत्नभाण्डागार)
केयूरा न विभूषयन्ति पुरुषं, हारा न चन्द्रोज्ज्वला
न स्नानं न विलेपनं न कुसुमं, नाऽलंकृता मूर्धजाः ।
वाण्येका समलंकरोति पुरुषं, या संस्कृता धार्यते
क्षीयन्ते खलु भूषणानि सततं, वाग्भूषणं भूषणम् ॥ (नीतिशतकम् ७९)

वंश राम्रो होस्

**पिता रत्नाकरो यस्य लक्ष्मीर्यस्य सहोदरी ।**
**शङ्खो भिक्षाटनं कुर्यान्नादत्तमुपतिष्ठते ।।५।।**

रत्नेश जो जलनिधी त पिताजि जस्का
लक्ष्मीजि छिन् भगिनि शङ्ख त माग्छ भिक्षा ।
कर्मानुसार छ सबै तर वंश वेश
हूँदा सदा प्रिय र चूम्बित भै रहेछ ।।

**जसका पिता रत्नका खानी समुद्र छन्, लक्ष्मी जसकी बहिनी छन् त्यस्तो शंख भिक्षा माँग्दछ। विधिले नदिए पाइन्न भनेको साँचो हो।।५।।**

शक्तिविहीन भएकाहरूका गतिविधि

**असक्तस्तु भवेत्साधुर्ब्रह्मचारी च निर्धनः ।**
**व्याधिष्ठो देवभक्तश्च वृद्धा नारी पतिव्रता ।।६।।**

शक्ती छैन त साधुझैं हुनुपर्‍यो, जो छन् अती निर्धनी
ब्रह्मचारिसरी र, रोगहरूले ग्रस्तै भए जो पनि ।
बाटो केवल देवभक्त हुनु हो, बूढी ति नारी पनि
'सारा आश्रयहीन भै पतिव्रता हुन्छिन् ति जस्ती पनि ।।

**शक्तिहीन साधु हुन्छ, निर्धनी ब्रह्मचारी हुन्छ, रोगग्रस्त देवताको भक्त हुन्छ र बूढ़ी स्त्री पतिव्रता हुन्छे ।।६।।**

महत्त्वपूर्ण कुराहरू

**नान्नोदकसमं दानं न तिथिर्द्वादशीसमा ।**
**न गायत्र्याः परो मन्त्रो न मातुर्दैवतं परम् ।।७।।**

पानी, अन्न समानका अरु कुनै छैनन् महादान त
सत्पर्वोत्सव का सरी तिथि अरू मानिन्न है उत्तम।
गायत्रीसरि मन्त्र छैन बुझनू ब्राह्मीयका निम्ति त
माताजीसरि देवता अरु कुनै छैनन् सदा मान्य त।।

**अन्न जल समान कुनै दान छैन, द्वादशी समान कुनै तिथि[१]**

**छैन, गायत्री समान अरू कुनै मन्त्र छैन, माता समान अरू कुनै देवता छैनन् ॥७॥**

केको विष केमा हुन्छ ?

**तक्षकस्य विषं दन्ते मक्षिकाया विषं शिरे ।**
**वृश्चिकस्य विषं पुच्छे सर्वाङ्गे दुर्जने विषम् ॥८॥**

माखाहरूको विष मुख् र शिर्मा
विष् सर्पको घाँटि र दाँतमाहाँ ।
बिच्छीहरूका विष पुच्छरैमा[२]
सर्वाङ्गभर् छन् विष दुष्ट जन्मा ॥

**सर्पका दाँतमा विष हुन्छ, झिङ्गाको शिरमा र बिच्छीको पुच्छरमा विष हुन्छ, दुष्ट जनका सबै अङ्गमा विष भरिएको हुन्छ ॥८॥**

नारीलाई पतिको आज्ञाको महत्त्व

**पत्युराज्ञां विना नारी उपोष्य व्रतचारिणी ।**
**आयुष्यं हरते भर्तुः सा नारी नरकं व्रजेत् ॥९॥**

आचारी पतिको आज्ञा-विना स्त्रीले गरे व्रत ।
हर्दछे पतिको आयु पर्छे नरकमा उ त ॥

**पतिको आज्ञाविना व्रत गर्ने स्त्रीले स्वामीको आयु हर्दछे, त्यो स्त्री आफू पनि नरकमा जान्छे ॥९॥**

नारीका निम्ति पति सेवा नै मुख्य तीर्थ हो

**न दानैः शुद्ध्यते नारी उपवासशतैरपि ।**
**न तीर्थसेवया तद्वद् भर्तुः पादोदकैर्यथा ॥१०॥**

---

१. अक्षय्यतृतिया र रामनवमी, श्रीकृष्णाजन्माष्टमी,
उत्तम् हुन् शिवरात्रिका र अचला नाम्नी तिथि सप्तमी ।
भाद्रशुक्ल चतुर्दशीहरू भए सत्पात्र आवागम,
जैले हुन्छ उही तिथी बुझ्नुहोस् सम्पूर्णमा उत्तम ।
पानी, अन्न र जीवमा अभयदान् मानिन्छ सर्वोत्तम ॥

२. सर्पस्य च विषं द्रष्ट्रे मक्षिकायास्तु मस्तके ।

सारा तीर्थसरी बुझी पुरुषले श्री शालिग्रामोदक[1]
गर्छन् पान, उही समान् दृढ गरी स्त्रीजाति भै उत्सुक ।
स्वामीको चरणोदकै खुशि भई गर्छिन् भने सेवन
तीर्थादि-व्रत दानको फल सबै पाऊँदछिन् दिन्दिन ॥

**न दानले, न सयकड़ौं उपवासले, न तीर्थको सेवन गर्नाले स्त्री त्यति शुद्ध हुन्छे, जति आफ्ना स्वामीको चरणोदकले शुद्ध हुन्छे, (हुन त आजको परिवेशमा यो कुरा त्यति उचित नलाग्ला!, तर पनि यसको महत्त्वलाई अस्वीकार गर्न सकिंदैन)॥ १० ॥**

पानी ज्यादै अशुद्ध हुने अवस्थाहरु

**पादशेषं पीतशेषं सन्ध्याशेषं तथैव च ।**
**श्वानमूत्रसमं तोयं पीत्वा चान्द्रायणं चरेत् ॥ ११ ॥**

धोएर पाऊ जल जो बचेको, पिएर पानी अवशेष् रहेको ।
जूठो हवोस् वा नजुठो भएको, कुकूरको मूत्र समान् भयो त्यो ॥
सन्ध्या र तर्पण् गरि बच्छ पानी, ज्यादै बिटूलो हुन जान्छ नानी! ॥

**पाउ धोएर बचेको जल, पिएर बचेको जल र त्यस्तै नै सन्ध्या गरीसकेर बचेको जल कुकुरको मूत्रको समान हुन्छ । यदि यसलाई कसैले पिउँदछभने त्यस्ले चान्द्रायण व्रत गर्नुपर्छ ॥ ११ ॥**

बहिरङ्गी भेषभूषादिको अपेक्षा ज्ञान नै मुख्य हो

**दानेनं पाणिर्न तु कङ्कणेन, स्नानेन शुद्धिर्न तु चन्दनेन ।**
**मानेन तृप्तिर्न तु भोजनेन, ज्ञानेन मुक्तिर्न तु मण्डनेन ॥ १२ ॥**

गर्नू काम र दान हात बनिए, बाला भिरी काम के ?
ज्ञान् स्नान्‌ले मन देह शुद्ध गरनू चन्दन् घसी हुन्छ के[2] ?

---

१. ये पिवन्ति नरा नित्यं शालिग्रामशिलाजलम् ।
पञ्चगव्य सहस्रैस्तु प्राशनैः किं प्रयोजनम् ॥

२. **शृङ्‌गारार्थ नभै द्विजादि अथवा क्वै सम्प्रदायादिका,**
**श्री रूद्राक्ष कि वा लिनू तुलसिका माला, जनै औ टिका ।**
**मर्यादाक्रम हो नराख्नु ममता ती बाह्य चिन्हादिका**
**ॐ ब्रह्मस्मृति, सत्य कर्म गरनू लक्ष्यैक्य निर्वाणका ॥**

खाना-मान दुवै हओस् जनमहाँ एक्मात्रले हुन्छ के ?
मालादी बहिरङ्गि भूषण छ के ? मोक्षाप्ति हो ज्ञानले ॥

**हात दानले शोभा पाउँछ, कङ्कण लाएर शोभित हुन्न, शरीर स्नान गर्नाले शुद्ध हुन्छ, चन्दन लगाएर हुँदैन, आदरले तृप्ति हुन्छ, भोजनले हुँदैन, ज्ञानले भक्ति हुन्छ, अलंकारले हुँदैन ॥१२॥**

के गर्नुहुँदैन ?

**नापितस्य गृहे क्षौरं पाषाणे गन्धलेपनम् ।**
**आत्मरूपं जले पश्यन् शक्रस्यापि श्रियं हरेत् ॥१३॥**

नाऊबाट त केश मुण्डन अनी पानीमहाँ आफ्नु त-
हेर्नू हुन्न नि रूप्, न लाउनु छ है चन्दन् शिलैबाट त ।
धोबीबाट नधोउ वस्त्र, 'किनकि नाऊ र धोबी पनि
मान्छे हुन्, तर शौचहीन सबको सेवक् बनिन्छन् यिनी ।
ब्रत् यज्ञोत्सव आदिका नियम हुन्,कल्याण होओस् भनी' ॥

**नाउका घरमा गई केश मुण्डन गर्ने, चनौटाबाट झिक्दै चन्दन् लगाउने, आफ्नो रूप पानीमा हेर्ने जन, इन्द्रै भए तापनि त्यसको लक्ष्मीलाई यिनीहरू हर्दछन् ॥१३॥**

कुन् विषयले के गर्छन् ?

**सद्यः प्रज्ञाहरा तुण्डी सद्यः प्रज्ञाकरा वचा ।**
**सद्यः शक्तिहरा नारी सद्यः शक्तिकरं पयः ॥१४॥**

गोल्कॉक्रीले सत्-मती नाश गर्छ बोझो छिट्टै स्वर् खुला पारिदिन्छ।
स्त्री संभोग्ले शक्ति छिट्टै हरिन्छ[१] ताजा होस् ता दूधले शक्ति दिन्छ॥

---

**१. युवा स्त्रीले शक्ति बढ्छ भन्दछ कामशास्त्रले ।**
**तर 'चाणकजी' ले र अरू सत्‌शास्त्र जो त छन् ।**
**स्त्री भोग्ले ब्रह्मचर्य र शक्ति नाशिन्छ भन्दछन् ।।**

**गोलकाँक्रीले चाँडै बुद्धि हरण गर्छ, बोझोले चाँडै बुद्धि दिन्छ, स्त्रीले चाँडै शक्ति हर्दछे र दूधले चाँडै बल दिन्छ ॥१४॥**

परोपकारले सदा कल्याण हुन्छ

**परोपकरणं येषां जागर्तिहृदये सताम् ।**
**नश्यन्ति विपदस्तेषां सम्पदः स्युः पदे पदे ॥१५॥**

परोपकार[१]को बास जस्को हृदयमा छ त ।
त्यस्को दुवै लोकमहाँ हुन्छ कल्याणदायक[४] ॥

**जो सज्जनहरूका हृदयमा परोपकारको वास छ, तिनको विपत्ति नष्ट हुन्छ र सम्पत्ति पद-पदमा बढ्दै जान्छ ॥**

स्वर्गीय उत्तम सुख

**यदि भार्या यदि च रमा यदि तनयो विनयी गुणोपेतः ।**
**तनये तनयोत्पत्तिः सुरवरनगरे किमाधिक्यम् ॥१६॥**

पत्नी छिन् प्रियवादिनी धन पनी जो चाहिने नित्य छ
सज्जन् पुत्र छ पुत्रको सुत पनी आचारवान् प्रेमि छ ।
यो भन्दा बढि छैन स्वर्गपुरिमा यै लोक झन् धन्य हो
ब्रह्मज्ञान र सत्य सङ्ग गरिए निर्वाण मिल्ने छ यो ॥

**यदि भार्या (पत्नी) छे, यदि लक्ष्मी छन्, यदि असल गुणहरूले युक्त पुत्र छ, पुत्रको पनि पुत्र उत्पन्न भएको छ भने फेरि देवलोकमा योभन्दा अधिक आनन्द के हुन सक्छ? ॥१६॥**

---

१. रत्नाकरः किं कुरुते स्वरत्नैर्, विन्ध्याचलः किं करिभिः करोति ।
श्रीखण्डखण्डैर् मलयाचलः किं, परोपकाराय सतां विभूतयः ॥
—नीतिशतक ७१ (पञ्चरत्न१) ॥
भवन्ति नम्रास्तरवः फलोद्गमैः, नवाम्बुभिर् दूरबिलम्बिनो धनाः ।
अनुद्धताः सत्पुरुषाः समृद्धिभिः, स्वभाव एवैष परोपकारिणाम् ॥

ज्ञानी हुनु नै मानवत्त्व हो

**आहार-निद्रा-भय-मैथुनानि समानि चैतानि नृणां पशूनाम् ।**
**ज्ञानं नराणामधिको विशेषो ज्ञानेन हीनाः पशुभिः समानाः ।। १७ ।।**

खानू र सुत्नु डर मैथुनै भो हुन्छन् समानै पशु, मानवैको ।
ज्ञानी हुनू हो नरमा विशेष ज्ञान् छैन ता त्यो पशु नै गनिन्छ ।।

**भोजन, निद्रा, डर, मैथुन यी मनुष्य र पशुहरूमा समान छन्। मनुष्यमा केवल ज्ञानको विशेषता छ ज्ञानले रहित मनुष्य पशु समान हो ।। १७ ।।**

अर्कालाई दुःख दिंदा आफैलाई आइ पर्न सक्छ

**दानार्थिनो मधुकरा यदि कर्णतालैः**
**दूरीकृता करिवरेण मदान्धबुद्ध्या ।**
**तस्यैव गण्डयुगमण्डनहानिरेषा**
**भृङ्गाः पुनर्विकचपद्मवने वसन्ति ।। १८ ।।**

आफ्ना कान्मा बसेका मद लिन भमरा-लाइ मार्छू भनी जो
गर्ला त्यो कर्णवेध् ता 'गज' यदि रिसले आफ्नु गण्डस्थलैको ।
शोभा नासिन्छ त्यस्को जब यदि 'वध' को गर्छ इच्छा त जस्ले
आफ्नू नै हानि जान्नु, परहित समझे भोग्छ कल्याण त्यस्ले ।।

**यदि मदान्ध गजराजले गजमदको अर्थी भ्रमरालाई मदान्धताले कर्ण बेध गर्‍यो भने त्यो आफ्नो गण्डस्थलको शोभाहीन हुन्छ । ती भँवरा ता फेरि विकसित कमलवनमा बस्दछन् ।। १८ ।।**

अर्काको दुःख न देख्ने को-को हुन् ?

**राजा वेश्यं यमश्चाग्निस्तस्करौ बालयाचकौ ।**
**परदुःखं न जानन्ति अष्टमो ग्रामकण्टकः ।। १९ ।।**

राजा वेश्या यम अग्नि चोर याचक बालक ।
धूर्तले अरुको दुःख जान्दैनन् स्वार्थि हुन् यि त ।।

(यी आठसँगमा मौका हेरी काम् गर्नुपर्दछ।
नित्य होश गरी प्रेमीजस्तो भै बच्नुपर्दछ) ॥

**राजा, वेश्या, यम, अग्नि, चोर, बालक, याचक यी र आठौं ग्रामकण्टक अर्थात् गाउँलेहरूलाई दुःख दिएर आफ्नो निर्वाह गर्नेले अर्काको दुःख जान्दैनन् ॥१९॥**

एउटै मात्र पनि सद्गुण भए अरू भेटिन्छन्

**व्यालाश्रयापि विफलापि सकण्टकापि**
**वक्रापि पङ्किलभवापि दुरासदापि ।**
**गन्धेन बन्धुरसि केतकि सर्वजन्तो-**
**रेको गुणः खलु निहन्ति समस्त दोषान् ॥२०॥**

फल्दैनस् अनि सर्पको घर तँ होस् काँढा र बाङ्गो तँ छस्
टिप्नै दुःख तँ छस् तथापि सबको प्यारो बनेको तँ छस् ।
यौटै सद्गुण हो सुगन्धित तँ छस् हे केतकी ! जो पनि
साम्यात्मज्ञ दयालु सद्गुणि हउन् कल्याणकारी बनी ॥

**हे केतकी हुन त तँ सर्पको घर होस्; निष्फल अर्थात् फल नफल्ने छस्, हिलोबाट तेरो उत्पत्ति भएको छ । तँ दुःखसँग पाइन्छस्, तर पनि एउटै गुण (सुगन्ध) ले सबै प्राणीहरूको बन्धुसमान छस् । अतः एउटै गुण भए पनि सबै दोषलाई नाश गर्दछ भनेको साँचो रहेछ ।।२१।।**

तरुणता (यौवन) फेरि फर्कदैन :

**अधः पश्यसि किं बाले पतितं तव किं भुवि ।**
**रे रे मूर्ख न जानासि गतं तारुण्यमौक्तिकम् ॥२१॥**

के खसेको छ हे बाले! हेर्दछ्यौ किन भूमिमा?
थाहा छैन, अरे मूर्ख! गयो दुर्लभ यौवन ॥

**हे बाले तलतिर के हेर्दछ्यौ ? तिम्रो भैंमा के खसेको छ ?**

**(भनेर कुनै तन्नेरी केटोले सोधेछ) हे मूर्ख ! जान्दैनस्, मेरो तरूण्यरूपी मोती खस्यो, (भनी बुढ़ीले जवाफ दिईछन्) ।।२०।।**

## उपसंहार

ऋषि मुनि कवि हाम्रा दूरदर्शीहरूका
प्रिय सुपथिक वाणी गूढ शब्दार्थवाला ।
अपठित जननिम्ती लेखियो पद्य भाषा
त्रुटि त किन नहोलान् लक्ष्य हो मात्र सेवा ।।
म पनि अपठितै हूँ विद्वत्ता छैन मेरो
तर हृदयनिवासी ॐ परंब्रह्मको जो ।
हुन गइ करुणाको प्रेरणाको प्रसाद
बुझि सुपथिक होऊन्, भन्छ यो ओमप्रकाश ।।
संसार काल परिवर्तनशीलको छ
भन्ने कुरा सकलमैं सब याद नै छ ।
तात्पर्य बुझ्नु छ, नहोस् विपरीत-अर्थ
लक्ष्यार्थ सर्व हिततर्फ रहोस् सचित्त ।।

## अन्तिम प्रार्थना :

**प्रमाताको केही अलिकति पनी छैन ममता**
**न छूटोस् है कैल्यै हृदय बिचमा भाव समता ।**
**बितोस् हाम्रो आयू सरल र दयाका लहरमा**
**न भूलौं त्यो ज्योति-स्वरूप विभुको भित्रि मनमा ।।**

*।। इति सप्तदशोऽध्यायः समाप्तम् ।।*



# बुद्धिचानक

(भाषा श्लोक)

गणेश, विष्णु, शिव, सूर्य, काली । इ पाँचमा गरी वन्दन मात्र खाली ।।
लेख्छु म चानक नीतिलाई खोजी । लीउन् सबैले अति बुद्धि फौंजी ।।
त्रैलोक्यका नाथ श्रीरामलाई । नुहाई शिर भक्ति बहुत् लगाई ।।
सार शास्त्रको झिकी प्रिय भाइ जन्मा । भन्छन् मुनि चानक हितलाई सब्मा ।।
।।१।।
यो शास्त्रको सार झिकेर जस्ले । बुझ्ला असल् धर्म अधर्म उस्ले ।।
जानी शुभाशुभ सबै सुविचार गर्ने । होला असल् पुरुष त्यो सब दोष हर्ने ।।
।।२।।
हओस् बहुतै हित भाइ जन्मा । भन्ने विचार् ली नीतिलाई छिन्मा ।।
भाषा गराईकन विश्वलाई । दिइ गरोस् यो हित सबलाई ।।
।।३।।
बुद्धि नभाकी स्त्री, शिष्यलाई । फेरी कुकर्मी तिन चीज भाइ ।।
सङ्गत् नगर्नु अति पीर पर्ला । पण्डित् भए तापनि नाश गर्ला ।।
।।४।।
गृहस्थ भाइ, दिदीहेरु सब्ले । राखी विचार सुमर्नु धनलाई जन्ले ।।
टर्ला पछिको दुःख बुझि लीनू । यो बात साँचो भनि याद गर्नू ।।
।।५।।
जिवीका नभाको जग जुन्सुकै होस् । विद्या र बन्धू पनि क्यै नहओस आस् ।।
यस्ता भूमीमा कहीले नबस्नू । राख्नु कदम् हो दुःख झेलि लीनू ।।
।।६।।
राजा र वैद्यै, धनी विप्र आदि । छैनन् नदी मन्दिर फेर् प्रियादि ।।
विन्ती नजानू यस भूमी बीच्मा । लागोस विन्ती प्रिय भाइ जन्मा ।।
।।७।।
लज्जा दया, भय, विवेकहेरू । छैनन् जिवीका सब छन् फुकेरू ।।
सङ्गत् नगर्नु प्रिय दोस्त जानी । त्यागनु भए सङ्गत विन्ती मानी ।।
।।८।।

चाकर् भयो लङ्घन कार्य गर्ने । आपत्तीमा बन्धु चिनाइ पर्ने ।।
धन् हीन् भएमा गृहिणी विचार्नू । यै बुझ्नु सब्ले दिल बीच धर्नू ।।
।।९।।

आपत्ति, आतुर्, अनिकाल् परेमा । वैरी भए राज मशान सब्मा ।।
साथ् दिन्छ जस्ले उही जान बन्धु । त्यस्का पिछा आफू नछोडी बस्नु ।।
।।१०।।

पाइन्छ जुन् चिज् उही आश गर्नू । असम्भव छ जुन् चिज् उसमा नफस्नू ।।
कुल्हीनमा हात नहाल्नु भाइ । सुमर्नु जाती कुलकि कुमारी ।।
।।११।।

राम्रो नराम्रो भनी ख्याल् नराखी । खाली विचार्नु कुछ हुन् वेदागी ।।
कर्तव्य यै हो बधु-वर् मिलन्को । जानेर नीति बुझनु पछीको ।।
।।१२।।

दाह्रा र नङ्ग्रा अनि सिङ् हुनेको । नारी भये नृपती इ जन् सबैको ।।
विश्वास राखी यिनमा नभुल्नू । धोका हुने हो पछि बूझि लीनू ।।
।।१३।।

नारी भये दुष्ट व्यभिचार साथी । नोकर् मुखाले खुनी बन्धु भाइ ।।
धोका दिने हुन् यही जान सब्ले । विष् हो भनी त्यागनु बेस जन्ले।।
।।१४।

जो पितृ-भक्त छ त्यही हो सुपुत्र । विश्वास हुन्छ जसमा उहि जान मित्र।।
पालन् जउन् गर्दछ त्यो पिता हो । जस्बाट हुन्छ सुख नारी त्यै हो ।।
।।१५।।

नरम् छ बोली दिलभित्र कैंची । इ साथी हुन् दुश्मन पछि हुन्छ मैंची ।।
कुरा नखोल्नु यिनीहेरूलाई । खोल्यो कुरा कि पछि मर्नु भाइ ।।
।।१६।।

मूर्ख्याइँ, छल्, आँट र निठुर बानी । स्त्रीमा हुने हो भनि बुझ्नु नानी ।।
जानी कुरा केही नगर्नु यिन्मा । बोल्नै परे नम्रिइ बोल्नु उन्मा ।।
।।१७।।

आरोग्य भै स्त्रीसित भोग गर्नू । दानादिमा मन् पनि धेर जानू ।।
येती सुमर्नु पनि भाग्य नै हो । पाइन्न खोजेर बुझ्नु यही हो ।।
।।१८।।

सानै छँदैमा दिनु यो सिकाई । सम्पूर्ण विद्याहरु नै बुझाई ॥
पठित् भएमात्र सँधै पुजिन्छ । जानी यही गर्नु सुपुत्र जुन् छ ॥
॥१९॥

प्यारो गरे हुन्छ खराब धेरै । ताडन् गरे हुन्छ सुपुत्र छोरै ॥
गर्नु छ जे काम गरी देखाउ । मुख्ले नभन्नु यही जान भाऊ ॥
॥२०॥

डुलुवा भए नारी खराब हुन्छ । मन्त्री नभाको हीन राज जुन् छ ॥
नदी किनार्को रुखलाई जान । रहन्न धेरै दिन बुद्धि, मान ॥
॥२१॥

चेलो र छोरो हपकाउनाले । लट्ठी दिए चौखुरलाई सब्ले ॥
हुन्छन् यिनीहेरु बहुत बेस । गर्नु सबैलै नीति जानि जो छ ॥
॥२२॥

हाँस्का बथान्मा बकुलो गए झैं । छोरो भए मूर्ख खराब यिनै ॥
विद्या दिंदैनन् जुन पितृ माई । शत्रु यिनै हुन् बुझ मित्र भाइ ॥
॥२३॥

पापी, कुकर्मी, गुणहीन साथी । भयो भने सङ्गत त्याग्नु जाती ॥
संगत् नछोडे बुझ सत्व तिमी । होलाउ उस्तै पछि झन् नजाति ॥
॥२४॥

गुणी, विवेकी, गुणवान जन्को । गरेर संगत् श्रेय हुन्छ सब्को ॥
पठीतको संग नछोड़ नानी । होला बढ़ीया यही नै भने नि ॥
॥२५॥

पलाँसको फूल् जति खुस्बु हीन । जस्तो विशोभा हुन जान्छ लीन ॥
विद्या नभाको हुन जान्छ त्यस्तै । जानेर कोशिस् गर विन्ति बाबै ॥
॥१६॥

कोसीसले जान्छ दरिद्र दूर । नाशिन्छ पाप्, दानहरू दिएर ॥
निद्लाइ त्यागे डर हुन्न चोर्को । चूप् लागी बस्दा डर हुन्न कल्को ॥
॥२७॥

बनका बिचाबीच् फूल एक फूल्मा । सुबास दिन्छन् सब वृक्ष जन्मा ॥
त्यस्तै सुपुत्रादि भए कुलैमा । होला बढीया सब कुल् भरीमा ॥
॥२८॥

यौटा बलेको रूखले तमाम । भस्मै गरी दिन्छ बन्लाइ जान ॥
उस्तै गराउँछ खराब पुत्र । कुल् हुन्छ भस्मै यही जान मित्र ॥
॥२९॥

यो विश्वको मालिक विद्यमान । हुन् कामधेनु इ भनेर जान ॥
संकष्ट दुःखहेरू अनेक् परेमा । काम् दिन्छ त्यस्ले पुग देश जुन्मा ॥
॥३०॥

मूर्खै भएमा वृथा छ जगमा । चाँडै मरे बेस हुने सबैमा ॥
व्यर्थै अनेक्को पिर लीनु भन्दा । मर्नु निको जल्दी अरू साम् पर्दा ॥
॥३१॥

स्त्री कच्कचे नीच नरेश सेवा । कुग्रामको वास अपुग खाना ॥
छोरी विधुवा र कुपुत्र साथ । आगो बिनाको जलिजान्छ गाथा ॥
॥३२॥

संसारको पीर हटाउने कुन् । सङ्गत् कि नारी र सुपुत्र नै हुन् ॥
यी तीन छैनन् जसका घरैमा । दुःख सरि त्यो अरू छैन जग्मा ॥
॥३३॥

तप् गर्नलाई एक जीव बेस । पढ्दा दुइ भएका तीन गान्-बजान ॥
चार लिनु पर्देश र खेती गर्दा । पाँच हुन्छ धेरै लडदा कि पर्दा ॥
॥३४॥

आँधी उठेमा कि खराब घर्मा । झगडा भयो दुर्जनसङ् हुँदामा ॥
छोड्नु शहर त्यो अनिकाल पर्दा । वेस् हुन्छ जान्नु यही काम गर्दा ॥
॥३५॥

हीन् पुत्र-पुत्री घर नै अँध्यारो । बन्धू नहुँदा दिशदश् अँध्यारो ॥
छोरा भयो मूर्ख दिल नै अँध्यारो । दुःखी जीवन् हो सबमा अँध्यारो ॥
॥३६॥

भोग् प्यास त्यागी अति काम् गरेमा । नाठो भई रण्डी कहाँ गएमा ॥
धुप्मा अति वस्त्र सुकाउनाले । स्त्रीमा रति दान् पनि त्यागनाले ॥
॥३७॥

घोड़ा तबेला बिच बाँधि राखे । मेसीन् जति हुन् सबलाई साँचे ॥
चाडै पुराना यति हुन्छ जान । तस्अर्थ जान्ने हुनु बुद्धिमान ॥
॥३८॥

लाई कसी पोली कुटेर हेर्नू । सुन्लाई जाँच्ने यही रीत बुझ्नू ॥
दानै, शील, विद्या, व्यभिचार बुझी । गर्नु परीक्षा मनुलाई खोजी ॥
॥३९॥
छोरो गुणी हुन्छ पुरुष जस्को । स्त्री प्यार गर्छे सब दिन उस्को ॥
जो काममा रद्द हुँदैन कैले । त्यै हो सुखी मानव बुझ्नु सब्ले ॥
॥४०॥
नियम गरी सक्नु र पढ्नु काम । अली-अली गर्नु उचित जान ॥
नागा न गर्नू बुझ बुद्धिमान । संसारको रीति यही सुजान ॥
॥४१॥
वियोगी हुनु प्रियका सँगैमा । अपमान हुनु प्रिय भाई जन्मा ॥
अन्यायी नृप छन् अविवेक् सभामा । जीउँदै डढेको सरि हुन्छ जग्मा ॥
॥४२॥
त्याग्छे पुरुष् निर्धनलाई वेश्या । शक्ती न भाको नृपलाई दुनियाँ ॥
फलहीन भए वृक्ष पखेरू छोड्छन् । खाइसके पाहुन जल्दी भाग्छन् ॥
॥४३॥
आफू सरिमा प्रिय दोस्ती गर्नु । नोकर हुनै नृपति सामू जानू ॥
व्यवहार लीनू पसलेहरूको । मोहीत् हून्‌-'मीठू' प्रियवादीताको ॥
॥४४॥
निर्दोष छन् कुन कुल विश्वमाहाँ । क्रोधी नहुने कुन हुन् मनुवा ॥
दुःख् छैन कस्का घर-घर घुमेमा । तस्अर्थ सहनु जाती हुन्छ जग्मा ॥
॥४५॥
छोरी दिनु कुल र पठित हेरी । छोरीकन पढाउनु खूशी जगमा ॥
उपदेश गर्नु यही रित जग्मा । थर्काउनु शत्रु मित्र जन्मा ॥
॥४६॥
दुर्जन र गोमन एक हुन्छ काहाँ ? । टोक्नेछ सर्पै एकबाजि जग्मा ॥
संगत् नगर्नु दुर्जन साथ भाई । टोक्नेछ छिन्-छिन् बिच दाउ पारी ॥
॥४७॥
अपगुणीहेरु जति दूर गर्नू । गुणै भये पनि मानव हुँैन भन्नू ॥
दुई पादुका यी पशूहेरू संज्ञा । बीच नेत्रका इ कसिंगरादि बुझी ॥
॥४८॥

कुलमा लिई जन्म तरुणी भएको । हेर्दा छ रूप काम-पति सरिको ॥
बेकारको हो तिन गुण त्यस्को । जस्तो अखुस्वी फूल् सरिको ॥
॥४९॥
गलो मिठो संझनु कोकिलैको । मीठो छ धर्म पतिव्रताको ॥
कुरूप होस् तापनि स्वाहूँ छ विद्या । तपस्विको धर्म क्षमा गरेमा ॥
॥५०॥
त्यागे यौटा कुल हुन्छ जाती । त्यागे भलो होस् बन्धु ग्राम स्थाई ॥
आत्मै परे त्याग्नु स्वदेश निम्ती । यी तिनलाई नबिर्सनु येही बिन्ती ॥
॥५१॥
रूपै भई धेर सीता हरीइन् । घमण्डले रावणलाइ नाशिन् ॥
दानादि गर्दा बली बिग्रनु भो । अति नगर्नु हुनुहार जे हो ॥
॥५२॥
धेरै भई पुत्र विकाम हुन्छन् । एकै भये जाती सुपुत्र बेस जुन् ॥
प्यारो गरे बेस पञ्च वर्षसम्मन् । दश वर्षसम्म ताडन गर्नु झन्झन् ॥
॥५३॥
षोडश भयो पुत्र समान बुझनू । येति नभूली दिल भित्र राख्नू ॥
लाभादिले हेरी सुपुण्य भुल्नू । दया नभए बिन्ती मरेर जानू ॥
॥५४॥
आयु भयो कर्म र शील् स्वभाव । जन्मैमहाँ साथ भनेर जान ॥
यस्का निमित्त शोक कहीले नगर्नू । नीतिमहाँ येही छ बुझी लीनू ॥
॥५५॥
शरीर बलीयो जबसम्म हुन्छ । यै बीच पुण्य गर्नु अतीव बेस ॥
रोगादिले ग्रास गराउने छ । गर्ने कउन् पुण्य विचार के छ ? ॥
॥५६॥
शत-पुत्र हुनुभन्दा एकै पुत्र असल् । जस्तो चन्द्र यौटैले जगतै हुन्छ उज्ज्वल् ॥
अन्धकार सबै हुने तारा हजार भए पनि । देखि चन्द्रमालाई खुशी हुन्छ जगत् अनि ॥
॥५७॥
राजा, बाहुनको जिब्रो एकैनास हुने सँधै । छोरी दान दोहोराई नगरिने कबै ॥
यी तीनलाई नगर्नु कहीले पनि फेरि-फेरि । संसारको नियम बुझनु येही ॥
॥५८॥

विना अभ्यासले शास्त्र विषैसरी हुने । धेरै पाएर खाएमा अमृतै पनि विष हुने ॥
परिवार पनि बुझ्नु हुन्छन् विष । दरिद्री हालतमा हुन्छ झन् विष ॥
॥५९॥
दया नभाको घरलाई छोड्नू । विद्या नभाको गुरुलाई त्याग्नू ॥
क्रोधी भए नारी समेत त्याग्नू । प्रिती नभए बान्धवलाई भूल्नू ॥
॥६०॥
आम्दानी, खर्च विचारी राख । साथी र तागत् सबलाई बुझ ॥
यो चारलाई न भूल कहीले । भूले विषै हो भनि जान मन्ले ॥
॥६१॥
आपत्तिलाई पहिले विचार । आइ परेमा लगाउ पार ॥
अर्थात् अगावै दुःखलाइ सोच्नु । आइपरेमा पनि उतारी छोड्नु ॥
॥६२॥
पैदा भएका उहीद्वारा यौटे । जन्मै दिवस होस् साथै उही नै ॥
एकनाश कोही कहिले नहूने । छैनन् अंगुली पनि एकनासे ॥
॥६३॥
मुखमा भए बरबर कपटी हुँदैन । जसलाई यो सोख भने त छैन ॥
नामर्दी साथ छ भने शोख नहुने । दुःखी भए सर्व कुरा नहुने ॥
॥६४॥
दुर्भिक्षले श्रीपतिहेरूलाई । निर्बुद्धिले पण्डित, भाईलाई ॥
देखिसहनू विधवा कहीले । सधवा ति नारी प्रिय साथ् हुनाले ॥
॥६५॥
नाशिन्छ विद्या अलछी गरेमा । बिग्रन्छ खेती मल थोर् हुँदामा ॥
गुणी विवेकी पर वश् हुनाले । हुँदैन काम मालिकविना फउज्ले ॥
॥६६॥
विघ्नादिको नाश स्वधर्म नै हो । अज्ञानको नाश सुबुद्धि नै हो ॥
नाशिन्छ शत्रु प्रिय बात् हुनाले । दारिद्र नाश हुन्छ दान, होमले ॥
॥६७॥
प्रेम-तुल्य रोगी अरू क्यै हुँदैन । ज्ञान्देखि बढ्ता अरु सुक्ख छैन ॥
शत्रु अज्ञानैसरि केहि हैन । आगासरि क्रोध अरू हुँदैन ॥
॥६८॥

निद्रा टुटेमा र जुवा-फुकेमा । कामी-पुरुष तृप्त हुँदैन मन्मा ।।
रिस् धेर् गरेमा प्रिय क्वै हुँदैन । दया कुनै दुर्जनमा हुँदैन ।।
।।६९।।

वेश्या र गुण्डा बिच छैन माया । राख्दैन डुलुवा पनि सत्य काया ।।
राजा गरिब्को बल बुद्धि मान्नु । बालखको बल् रुन मात्र जान्नू ।।
।।७०।।

वर्षा सरि जल् अरू क्यै हुँदैन । क्यै तेजिलो नेत्रसरी हुँदैन ।।
आफ्नू सरी बल् अरू केही छैन । मिष्टान्न जस्तो प्रिय क्यै हुँदैन ।।
।।७१।।

आफ्नो कसूर जति लुकाइ राख्नु । निन्दा अरूको गरि दोष खोज्नू ।।
प्रेमै नगर्नु पर-नारीदेखि । लाग्यो भने प्रेम नछोड्नु प्यारी ।।
।।७२।।

कंगालीमा घिट्किस हुन्छ धन्को । बोल्नै पशु खोज्दछ भ्रष्ट मन्को ।।
गृहस्थहेरू सुख चैन खोज्दछन् । दैवी-माया भनि जान भज्छन् ।।
।।७३।।

चंचल छ लक्ष्मी सुख होस् सबैमा । घुमेर आउँछ सबै पुरुष्मा ।।
तसर्थ उद्योग् कहीले नछोड्नू । गर्दै गरे लाभ अवश्य बुझ्नु ।।
।।७४।।

आम्दानि थोर खर्च बहूत गर्ने । विरानु देशमा झगडालू हुने ।।
रोगी भई दुर्गुणि वस्तु खाने । रहँदैन धेर दिन भूमिबिच जाने ।।
।।७५।।

जुन काममा हात बढ़ाइ लीयो । त्यो काममा हात नछाड् भनीयो ।।
बाघको लिनू गुन यही बेस जानी । यही भरोसा बुझ सत्य नानी ।।
।।७६।।

आउन्न औसर् चुप-चाप बस्नू । विचारलाई कहीले न छोड़नु ।।
औसर परेमा झट गाँजि लिनु । बकुल्लासितैको गुन जानि लीनु ।।
।।७७।।

व्यवहार लेन-देन हरेक गर्दा । विद्या र भोजन अरू चीज मिल्दा ।।
जो लाज् नमानी अति हुन्छ खुशी । लाज माननाले अति हुन्छ दुःखी ।।
।।७८।।

ब्राह्मण, गुरु, वैष्णव, वृद्ध, गाई । जोगी, कुमारी, यति चीजलाई ॥
लत्याउनु, थुक्नू कदापि हुन्न । यो बातलाई तिमी सत्य मान ॥
॥७९॥
सोझो भए धेर पनि ठीक छैन । छल् धेर् गरेमा पनि बेस् हुँदैन ॥
सीधा जती रुख् सब काटिदिन्छन् । टेढा र मेढा सब त्याग गर्छन् ॥
॥८०॥
पैसा भए मानिस बन्छ जाती । दरिद्र मानिन्छ सदा नजाती ॥
भाई बहीनी सब इष्ट-मित्र । झुक्छन् धनैमा धन हो विचित्र ॥
॥८१॥
कामै परे कोही समीप् गएर । मल्नै परे पाउ मले बसेर ॥
काम काज् मिलाइकन सिद्ध पार्ने । हुन् बुद्धिमान् मानिस मात्रुपर्ने ॥
॥८२॥
जानू असल् हो धनिका घरैमा । छोटा कहाँ जानु अयोग्य जान ॥
वीर् सिंहका घर गए गजमोति मिल्ने । हो पुच्छ स्याल्का भित्र पाइने ॥
॥८३॥
सानु छ वैरी भनि नीच् नमार्नू । लीनेछ प्राण औ पर जानि मार्नू ॥
आगो र वैरी तिमी एक जान । सानो भए पनि गर्दछ भस्म मान ॥
॥८४॥
इन्द्रियै न छोप्छ न झिंगा धपिन्छन् । पुच्छर् बिकाम्का कुकुरै बुझिन्छन् ॥
मूर्खै भए पुत्र बुझिन्छ उस्तै । विद्या नपढ्दा हुन जान्छ तेस्तै ॥
॥८५॥
दूध्मा घीउ तिल बिच तेल हुन्छ । उँखू बिचैमा गुण धेर् रहन्छ ॥
यो देहमा ईश्वर हुन्छ बुझ्नू । तसर्थ जीउ कहिले नफाल्नू ॥
॥८६॥
विश्वास् गरी बात कसै नखोल्नू । विश्वास बिन्ती सबमा नगर्नू ॥
विश्वास् गरेमा पछि दुःख पर्ला । गुप्ती गरेमात्र सुखी बनौला ॥
॥८७॥
आगो र राजा पशु भो कटारी । नदी ठूलो जंगल राज्य नारी ॥
धोका दिने हुन् कपटी यि सात । विश्वास् नगर्नु पछि हुन्छ घात ॥
॥८८॥

प्रिती परस्पर् कहिले नछुटोस् । मन्मा भए येति विचार आओस् ॥
जूवा र नारी कहिले नहेर्नू । लेन्-देनलाई पनि त्यागिदीनू ॥
॥८९॥

वृद्धा, नदी, देश, गुणी पियारी । खराब सम्पति कुअन्न नारी ॥
त्यागनु बढीया इ छः वस्तुलाई । खराब् भएमा बुझिलेउ भाई ॥
॥९०॥

भाग्यै जति हो उति मिल्छ सब्को । मिल्दैन अर्को लिइ आश मन्को ॥
सक्दैन द्यौता पनि मेट्नलाई । यस्मा यसो हो भनि भन्नलाई ॥
॥९१॥

भाग्यै बहुतै भनि भन्दथे सब् । वशिष्ट जस्ता पनि गर्दथे तप् ॥
तथापि सीता दुःखमा परीथिन् । ठूलो भनेको बुझ भाग्य नै झन् ॥
॥९२॥

मूर्ती र माटो अनि काठमाहाँ । हुँदैन द्यौता बुझि जान याहाँ ॥
भक्ति र भाव्मा सब देव बस्छन् । द्यौता भनेको दिलभित्र हुन्छन् ॥
॥९३॥

ज्ञानीकनै स्वर्ण र विश्व शूर्को । स्त्री व्यर्थ हुन् इन्द्रिय सक्छ जित्न जो ॥
यो जग् वृथा हो नीरमोही जन्को । ई तिन्कनै जग वृथा भनिजान्नु सब्को ॥
॥९४॥

विद्या पियारा सब देश जन्को । घरै पियारो प्रिय नारि सब्को ॥
रोगी भए औषधि मित्र बुझ्नू । हो धर्म नै मित्र भनेर जान्नू ॥
॥९५॥

जन्माउने भो प्रियलाई दिने । विद्या र ताडन् दिइकन स्नेह गर्ने ॥
ई पाँचलाई पनि पितृ जान्नू । यो बात साँचो अनि बूझिलीनू ॥
॥९६॥

माता र रानी गुरु पत्निलाई । सासु भइन् मित्र कि पत्नि माई ॥
जान्नू सबै एक भनेर याहाँ ! । आमासरि पुज्नु भनिन्छ ताहाँ ॥
॥९७॥

अछूत नारी जन शुद्ध जान । पानी बढेमा नदि बेस जान ॥
गुणी भएमा कुल बेस जान । राम्रा हुँदैनन् कुल-हीन मान ॥
॥९८॥

राजा भए ब्राह्मण बिज्ञ जोगी । पुज्छन् डुलेमा तिनलाई भोगी ।।
नारी डुलेमा सब भ्रष्ट हूने । यो हो कलंकी भनि सत्य जाने ।।
।।९९।।

पापी भए नृपति प्रोहित भाग्छ मान्नू । स्वदेशको पाप् नृप-लाई भन्नू ।।
स्त्रीले गरेको पति भोग्छ जान्नू । शिष्यै भए पापि गुरुलाई मान्नू ।।
।।१००।।

निर्धन् भए दान दिएर हुन्छ । बाँध्नू दुवै हात घमण्डि जो छ ।।
झूठो नबोल्नू गुणि-सामू जाई । इयुक्ती हुन् वश गर्नलाई ।।
।।१०१।।

कुनृप हुनु ता नहुनु छ जाती । हुन्छन् सदा दुर्गुणि मित्र-घाती ।।
छन् मूर्ख शिष्यै यदि मान् नलीनू । कु-नारिभन्दा गृहहीन बुझ्नु ।।
।।१०२।।

गुण एक जाती वनराजको हो । चार गुण जाती कुखुराहरूको ।।
पाँच् गुण कौवा गुण तीन् गदाहा । छ गुण लिनू कुकुरदेखि थाहा ।।
।।१०३।।

सानो ठूलो जे जति काम होस् । वन्राजको गुणकन श्रेष्ठ बुझ्नोस् ।।
गुण एक् लीनू बेस् बकुला चराको । मौका तुल्याईकन गाँज्नु बेस् हो ।।
।।१०४।।

निद्रा लड़ाई बिच ठीक हुनु । बन्धु बोलाइकन खान दीनु ।।
गुण लीनू ती कुखुराहरूको । बुझ्नु सबैले यही बात मन्को ।।
।।१०५।।

लुकेर मैथुन समय जानी गर्नु । सचेत् भएरै दिन-रात बस्नू ।।
विश्वास् नगर्नु अरू प्रेमिजन्को । शिक्षा लिनु उत्तम कागको यो ।।
।।१०६।।

खानू सुत्नु अति थोर् भएमा । सन्तुष्ट भै जागनु झट्ट छिन्मा ।।
मालीकको भक्ति शुन्याइँ गर्नू । ई गुण कुकुरको भनि याद राख्नु ।।
।।१०७।।

अत्यन्त थाके पनि भारि बोक्ने । गर्मी र सर्दी भनि ख्याल् नगर्ने ।।
भोको भएमा पनि खुशि हुने । तिन् गुण गधाबाट नभुल्नु जाने ।।
।।१०८।।

धन्को भए नाश र ताप मन्को । स्त्रीको चरित्रै अपमान जन्को ।।
भन्नु अरूमा कहीले हूँदैन । यो बात शिक्षा भनि श्रेष्ठ जान ।।
।।१०९।।

भोजन् र नारी धन तीन् कुरामा । सन्तोषी हुनु दिन् जुन परेमा ।।
दान, धर्म खातिर र पढाइ हूँदा । पुग्यो भनि भन्न हुँदैन बाबा ।।
।।११०।।

भोजन् मिले ब्राह्मण हर्ष मान्ने । मेघ् गर्जनाले ति मयूर नाच्ने।।
धन् द्रव्य बाँडे गुणी खुसि हूने । संकष्टमा दुर्जन व्यक्ति हाँस्ने ।।
।।१११।।

भूपालको बल ठूलो दुइ बाहु नै हो । वेद् पाठले ब्राह्मण जाति भैगो ।।
स्त्रीलाई सुन्दर शृङ्गार दीए । मान्छन् सदा उत्तम यो सबैले ।।
।।११२।।

धन मात्र पाउँ भनि मूर्ख खोज्छन् । धन् मानमा मध्यम हर्ष मान्छन् ।।
सम्मान पाउन गुणी जन यत्न गर्छन् । यो युक्तिले सहज मानव चिन्न सक्छन्।।
।।११३।।

उँखु र पानी, दुध, पान, फल् भो । रोगी भए औषध बेस भैगो ।।
खाएर दोष् हुन्न कुनै बखतमा । दान् पुण्य गर्नु पनि हुन्छ यस्मा ।।
।।११४।।

धुवाँ चिताको अनि तेल् लगाए । प्रसंग स्त्रीको पनि केश फाले ।।
यी चार् गरेमा अपवित्र हुन्छ । स्नान्ले सचैल पछि शुद्ध बन्छ ।।
।।११५।।

ख्याले नराखे सब ज्ञान जाने । भोको बसे प्राण अवश्य मर्ने ।।
वेश्या गमन्मा धन नाश हूने । बुद्धि नभै दुःख अनेक मिल्ने ।।
।।११६।।

चूपै हुनु त तप् भनेर भन्छन् । सन्तोष नै धर्म भनेर गन्छन् ।।
इच्छासरी रोग् अरु क्यै नहूने । दया सरी पुण्य कुनै नमिल्ने ।।
।।११७।।

पानी असल भन्नु जमीनकनै । नारी असल हो सुप्रतिव्रता नै ।।
हिंड्नु असल नृपति सुभलो चिताई । सन्तोषि ब्राह्मण बुझ अति बेस भाई ।।
।।११८।।

सन्तोष राजा निरलज्ज नारी । वेश्यामहाँ लज्जित हो खराबी ।।
पुग्यो भनि भन्दछ जौन राजा । नाशिन्छ चाँडै तिन वस्तु बाबा ।।
।।११९।।

पाऊँ म बुद्धि भनि भन्छ जस्ले । त्याग्नु झुटा विषय पर्छ अवश्य तेस्ले ।।
आत्मा सबैको भनि एक जान्नू । साधन् यही हो अति बेस मान्नू ।।
।।१२०।।

सुन्मा सुगन्धी ऊँखु बीच फल्न । राजा चिरायु धन मान् नदिए गुणीम ।।
धिक्कार छ यस्मा विधीलाई भन्नू । येती गुणी यो चिज भएन जान्नू ।।
।।१२१।।

झारैहरूमा गुरजो प्रधान । सुख्मा छ भोजन् यही बात जान ।।
आँखासरी इन्द्रिय हुन्न अर्को । शिर्झैं अरू अङ्ग हुँदैन ठूलो ।।
।।१२२।।

भोको र सेवक्, परदेशि पाले । विद्यार्थि, कातर् इन चीज जाने ।।
फेरि भण्डारी इन सात् सुतेमा । जागा गराउनू उचित् हुनजान्छ त्यस्मा ।।
।।१२३।।

राजा र बालख् अनि बाघ सर्प । हड्डा र कुकुर अरू केही मूर्ख ।।
यी सात् सुतेमा नउठाउ कैले । बेस् हुन्छ यस्मा बुझी लेउ मन्ले ।।
।।१२४।।

लेखेर पुस्तक् उहि पाठ गर्नू । गाँसेर माला शिर आफू धर्नू ।।
घोटेर चन्दन् पनि आफू लाये । लक्ष्मी रहन्नन् यती बात जाने ।।
।।१२५।।

तुलसी र चन्दन् पृथ्वी दही पान । ऊँखू तथा स्त्री तिल औ सुवर्ण।।
नौ चीज जान्नू अति बेस नै हुन् । छोए पनी बेस हुनेछ दिन्-दिन् ।।
।।१२६।।

प्रीति विना सुन्दरि बेस् हुँदैन । घ्यू हीनको भोजन स्वाद छैन ।।
वस्त्रै विना भूषण हुन्न राम्रो । विद्या विना ब्राह्मण झन् नराम्रो ।।
।।१२७।।

विद्या सरी छैन ठुलो जगत्मा । विद्या विना पूज्य हुँदैन सब्मा ।।
विद्या विनाको कुल हो बिकामी । विद्या सिगारौं सब मीलि हामी ।।
।।१२८।।

झिकेर रिस् फेरि बिकाम हुन्छ । डर्-भर् नभै काम बिकाम बन्छ ।।
लाभै नभाको पनि प्रेम् नजाती । व्यवहार चलोस् प्रेम यही छ जाती ।।
।।१२९।।
विष् होस् नहोस् सर्प फणा फिंजाई । आउँछ डस्नै भनि सामु भाई ।।
काम् होस् नहोस् साहस छाड्न हुन्न । ढाँचा र फुर्ती अति झिक्न हुन्न ।।
।।१३०।।
धनहीन् भए नीच हुँदैन भाई । विद्या भए पुग्दछ मान पाई ।।
विद्या पढ़े मात्र असल् कहिन्छ । कुन् मूर्खको मान कहाँ गरिन्छ ? ।।
।।१३१।।
जो शास्त्र जान्दैन कुनै कुरामा । त्यो हुन्छ छोटो बुझनु जगत्मा ।।
हेरेर हींड्नु पथ शास्त्रमा छ । छानेर खानू जल श्रेष्ठ हुन्छ ।।
।।१३२।।
यस्लाइ काट्नु कहिले नभन्नू । इच्छा कि कर्ले पनी घात् नगर्नू ।।
यी काम छाड़ीकन मासु पाए । लाग्दैन खासै पनि दोष खाए ।।
।।१३३।।
ऋण् काढने पितृ त शत्रु बुझनु । आमा भए व्यभिचारिणी शत्रु मान्नु ।।
राम्री भए स्त्री बहुतै नजाती । बिग्रन्छ आखिर् हुन जान्छ भाँती ।।
।।१३४।।
दुई ब्राह्मणैका बिचबाट कैल्हे । नहिंड्नू जाती वधू-वरदेखि पैल्हे ।।
ननाँघ्नु कहीले, हल, गोरु, पारी । मालिक् र चाकर् दुइ छेउ पारी ।।
।।१३५।।
विष्बाट अमृत जति झीकि लीनू । फोहोरको सून भनी नफाल्नू ।।
जे काम आओस् झट वेद पढ्नू । दुर्जन् भए ठाउँमहाँ नजानू ।।
।।१३६।।
मर्ने छ आखिर् भनि जानि राख । पाप् गर्नलाई मनले नभाक ।।
भोग्नू छ फल् निश्चय जान येही । गर्नु असल् काम बुझेर सोही ।।
।।१३७।।
ब्राह्मणहरूका गुरु अग्नि जान । चार वर्णका गुरु ब्राह्मण बुद्धिमान ।।
स्त्रीको गुरु हो पति बूझी राख । गुणी गुरु हुन् सबका इ जात ।।
।।१३८।।

छोड्लान् बरू धर्म समुद्र जान । फाल्दैन यी जात गुणीहरु मान ।।
जुन् मूर्ख छन् ती पशू जानी राख । तीदेखि रक्षा गरि झट्ट भाग ।।
।।१३९।।

पैदा भयो एक् अनि बस्न एक्लै । मर्छन् जउन् ती पनि जान्नू एक्लै ।।
पाप् धर्मको भोग् पनि गर्छ एक्लै । हुँदैन साथी अनि हुन्छ एक्लै ।।
।।१४०।।

दुष्टै भए सज्जन त्यो हुँदैन । रक्सी पिए पात्र सफा हुँदैन ।।
मलद्वार पनि शुद्ध हुँदैन कैल्हे । उस्तै यि दुर्जन् गुणि हुन्न कैल्हे ।।
।।१४१।।

दुःखी भई बन्धु सँगै नबस्नू । वन् जानु जाती बरु येहि बुझ्नू ।।
बोक्रो लगाई फल पानी खाई । काल्लाई कुर्नु बरू दुःख पाई ।।
।।१४२।।

आलस्य हुने सुति साँझमाहाँ । तसर्थ लक्ष्मी पनि भाग्छ वाहाँ ।।
लक्ष्मी नभाको घर हुन्न कैले । त्याग्छन् सबै सेवक मित्र जन्ले ।।
।।१४३।।

भोको फिरूवा घर भित्र आए । सन्मान् उनीको नगरेर खाए ।।
चाण्डालमा त्यो गणना हुनेछ । आखीर त्यो मानिस नाश हुन्छ ।।
।।१४४।।

हजार औ लाख अपगुणी छन् जो । तिनमा गुणै एक भए त भैगो ।।
बुझेर येहि सिक गूणलाई । पुजिन्छ एकै गुण सत्य भाई ।।
।।१४५।।

सुत्नु र खानु, डर, मैथुनै भो । यो गुण पशूमा पनि हुन्छ बुझि यो ।।
मानिसमा ज्ञान छ एक बढ्ता । ज्ञानहीन् भएको मन हुन्छ धुर्ता ।।
।।१४६।।

उपकार खातीर बस्नु सुजान । बेस् नाउ चल्ने पुरुष हो महान ।।
दारिद्र्य नाश तिनको यहीं हुन्छ । बेस हुन्छ पछि द्रव्य भरिन्छ ।।
।।१४७।।

धोएर पाउ जति शेष हुन्छ । जप्दा अनी शेष जती रहन्छ ।
खाइ बचेको पनि जान पानी । मुतै सरि मान्नु बुझेर नानी ।।
।।१४८।।

निर्बुद्धिको सँग गरेर बस्दा । हरिन्छ बुद्धी पनि काम पर्दा ॥
हुनेछ बल् दूध पिएर नानी । बलहीन हुने रतिमहाँ बुझ बानी ॥
॥१४९॥

आज्ञा न ली जो व्रतहेरु गर्छन् । नारी अधम् भै तहीं सत्य हर्छन् ॥
यो कामले नरकमा गई पर्छन् । स्वामी को टहलले उनी तर्छन् ॥
॥१५०॥

मुखमा विष हुने बुझ साँप । बिच्छी विषे रहन्छ पुच्छ विष ॥
मक्खिको विष हुने शिरमा हो । दुष्टको विष हुने शरीरभर हो ॥
॥१५१॥

हीतको अहित भुली न गर्नू । जो पर्छ दुःख त्यस्मा बरू लीनू ॥
दुःख दिन्छ जसले इख नराख्नू । पाप छैन यसमा भनि जान्नू ॥
॥१५२॥

संसारमा फल छ तीन् अनमोल । यौटा अमोल छ बोली विचार ॥
सङ्गत् र सेवा परि वेस गर्नू । यो तीनलाई कहीले नभुल्नू ॥
॥१५३॥

विद्या छ जो पुस्तक बिच् रहेको । धन् भो अरूका मुठीभित्र जन्को ॥
लाग्दैन काम् केहि परे बखत्मा । दुइ चिज् हुनेछ विकार जगमा ॥
॥१५४॥

धन् साथ भएमा सब प्रीति गर्छन् । हीन् धन् भएमा सब दूर भाग्छन् ॥
पाप्देखि पैदा धन जुन् भएको । रहँदैन धेर दिन् बुझ यै भनेको ॥
॥१५५॥

जिभ्रो समालीकन बोल्नु जाती । हेरी नुहाई शिर बस्नु जाती ॥
बोली मीठोमा सब हुन्छ आफ्नो । टर्रो कुरा नै किन बोल्नु मन्को ॥
॥१५६॥

मौका बुझी काम गरेर बस्नू । औकात माफिक सब चिज हेर्नू ॥
जानेर जस्ले यति जो विचार छ । सुखी पछि निश्चय त्यो हुनेछ ॥
॥१५७॥

के खाउँला पछि भनी फिक्रि गर्ने । मानव् नभन्नु तिनलाई जान्ने ॥
पाल्ने छ ईश्वर सुकाम गर्नू । दूध सृष्टि भो बालकनिम्ति बुझ्नू ॥
॥१५८॥

दरिद्री रोगी अनि मूर्ख जो छन् । परदेशी, सेवक् यती पाँच जो हुन् ।।
भाग्यै नभाका इनलाई बुझ्नू । ज्यूँदै मरेका सरि जानि लीनु ।।
।।१५९।।

आशा अपुरो सरी दुःख कुन् हो? । पराधीन्कनै दुःख बुझनू यै हो ।
अघी धनी भै निर्धन हुनु फेरि । यो दुःखसरी छैन अरू दुःख हेरी ।।
।।१६०।।

धनै ठुलो हो यस लोक सब्मा । धन् झैं बडो छैन कुनै जगत्मा ।।
धनै भए तान्दछ द्रव्य सारा । धन्ले गरी दिन्छ निहाल माला ।।
।।१६१।।

भाग्यमा छ भनि खालि पाइन्न कुनै कुरो । उद्योग गरे मात्रै बेस होला भलो ।।
भाग्यमा छ कस्को के रह्यो ? । डोका भरि दूध कसले दुह्यो ? ।।
।।६२।।

विद्याभ्यासका निम्ति सुख् होला कहाँ ? । सुख्कै निम्तिमा विद्या मिल्ला कसरी कहाँ ।।
गुण लीने भए त्याग सुखहेरु सबै । सुख लीने भए त्याग्नु विद्या अबै ।।
।।१६३।।

कविको नेत्र पुग्दैन कुन ठाउँमा । नारी गर्न नसक्ने कुन होला कुरो पूरा ।।
कागले नखाने चिज छ के जगभरी । नशेबाज के बक्दैन गाली-गोप्तासरी ।।
।।१६४।।

भाग्यमा भएदेखि जोगी भोगी बन्दछ । भाग्यहीन भएदेखि राजा जोगी बन्दछ ।।
सत्यको बात जानेर कोसिस नत्याग्नू । होला सुफल क्वै दिन भनि जान्नू ।।
।।१६५।।

दान् भो दया शास्त्र र शीलहेरू । तप् धर्म इत्यादि न भूल गेरू ।।
येती नभएमा भूमी भारी हुन्छिन् । मानिस भएमा यतिं बुझि लिन्छन् ।।
।।१६६।।

गुणी भएमा सङ्गत नीच पर्दा । हुनेछ छीटो उही सङ्ग गर्दा ।।
संगत् भलाको तसअर्थ गर्नू । संसारमा नाम चलाई बस्नू ।।
।।१६७।।

भार्या छ घर्मा हीन्याइ त गर्ने । त्योझैं हुँदैन अरू केही विपत्ति पर्ने ।।
घाम्मा कमल सुक्छ जसोरी उस्तै । मासू सुकी हुन्छ पुरुष तेस्तै ।।
।।१६८।।

नारी होओस् पवित्र प्यार गर्ने । मुसुक्क हाँसीकन चित्त हर्ने ।।
त्यस्तै पुरुष हुन् अति भाग्यशाली । चिरायु हुन्छन् अति कीर्ति फिंजी ।।
।।१६९।।

आगो र राजा जल सर्प मूर्ख । डर् मान्नु इन्का स्त्रीदेखि भन्छ ।।
आफ्ना अधिन्मा यि हुँदै हुँदैनन् । प्राण जान्छ उस्को नबुझेर बस्छन् ।।
।।१७०।।

रिस्झैं अरू शत्रु हुँदैन जग्मा । इच्छा सरी रोग हुँदैन सब्मा ।।
सन्तोषझैं स्वर्ग हुँदैन काहीं । विद्यासरी मान हुँदैन जाहीं ।।
।।१७१।।

उपदेश् जती औषधि जानी राख । उपदेश् लिंदा अल्छी त दूर फाल ।।
शिक्षामहाँ मन् सब दीन दिनू । शिक्षा न भूलीकन दीन गन्नू ।।
।।१७२।।

विद्या सरी भूषण छैन अर्को । विद्या सरी रूप हुँदैन सब्को ।।
विद्या ठूलो जान्नु पर्छ जग्को । विद्या सबैको शिर बुझ्नु घर्को ।।
।।१७३।।

जुन् घरमहाँ बास छ साँप जन्को । साथी भए दुष्ट र नारी झर्को ।।
आफ्नो इ काल् हून भनेर जान । तिन्लाइ त्याग्नु प्रिय बुद्धिमान ।।
।।१७५।।

दुखमा ठुलो बुझनु येहि तिमी । खानु र बस्नु करमा परेनी ।।
प्रेमी भइन् फेरी वियोग पर्दा । जिम्दै मरेको यही जान टर्दा ।।
।।१७५।।

कन्या नराम्री भनि त्यो नफाल्नु । कुल्को भए पुग्दछ येही जान्नू ।।
मिल्यो भने झट्ट सुमोरी लिनू । त्याग्यो भने पर्छ अवश्य रून्नू ।।
।।१७६।।

स्त्रीमा हूने दोबर खान लाई । चौबर् हूने लाज अनि कामलाई ।।
दोब्बर छ भन्नु ऋतु-दानलाई । आठ गुणी बुझ सत्य भाई ।।
।।१७७।।

पण्डित् बरू शत्रु हओस जाती! । दुर्जन् भए मित्र खराब भाई ।
बानर् थियो मूर्ख नृपलाइ मार्‍यो । ब्राह्मणकनै चार् मिली काल टार्‍यो ।।
।।१७८।।

काँसो भयो भस्म घसेर माझ्नु । तामोकनै निब्बु दलेर धून्नु ।।
होला पवित्रै बुझिलेउ येती । चोखो गराउन असल् यही रित जाती ।।
।।१७९।।

जस्का घरैमा झगड़ा हुँदैन । जुन् देशमा दुर्जन पूजिदैन ।।
अन्नादिले जुन् घर पूर्ण हुन्छन् । ताहीं आइ लक्ष्मी पनि वास गर्छिन् ।।
।।१८०।।

मनुष्यको ज्ञान र धर्म बुद्धि । मोहै भयो देह पनि हुन्छ शुद्धि।।
शास्त्रै सुने हुन्छ अतीव बेस । येही असल मानुन बुझ्नु जे छ ।।
।।१८१।।

जस्ले पढ्यो पुस्तक खोलि हेरी । आज्ञा गुरुको सब दूर पारी ।।
जार्-पोइद्वारा जुन पुत्र हुन्छन् । तेस्तै तिनीहेरू पनि कहिन्छन् ।।
।।१८२।।

गुणी भए मात्र ठुलो कहिन्छ । निर्गुणिलाई कसरि भनिन्छ ।।
हुँदैन कौवा मिली उच्च आसन् । देखे भने बालख झन् लखेट्छन् ।।
।।१८३।।

खानु र सुत्नु धन नारीमाहाँ । काल्मा भयो येति विचार चार्मा ।।
तसर्थ सन्तोष् गरी बस्नु सब् दिन् । पुग्यो न कैले अब पुग्छ के झन् ।।
।।१८४।।

बेला गयो सुध्रनलाई जस्को । बुद्धि नहून् तहीं जान उस्को ।।
देख्यो कसैले न त देख्छ फेरी । मोहीत् भए देखी सुन-मृग मुरारी हुन् ।।
।।१८५।।

सर्पै आहारा प्रिय वायु नै हो । घाँस् पातले बच्दछ प्राण गज्को ।।
फल्फूल पाइ मुनीहेरु बस्छन् । सन्तोष नै मानव मुख्य धन् हुन् ।।
।।१८६।।

खानु र बस्नु घर दुइ भएमा । धोबी कि कुकूर् सरी जान मन्मा ।।
खानु छ घर्मा बसनु किनार्मा । यो बानी हो धोबी कुकूर बिच्मा ।।
।।१८७।।

नारी नभाको अति श्रेष्ठ जोगी । एक् नारी हो प्रिय ब्रह्मचारी ।।
एक्देखि बर्ता भएदेखि घर्मा । नाश् हुन्छ त्यस्को घर नै जगत्मा ।।
।।१८८।।

कुल्देखि मान् हुन्छ अवश्य जग्मा । त्यो मात्र मान काम विकाम सब्मा ।।
त्योदेखि बर्ता लिइ मान बस्नु । कुल् नामको मान त व्यर्थ बुझ्नु ।।
।।१८९।।

नाम् राख्नु कुल्को अरु केहि बेसी । कुलको बराबर् छ विकाम शेखी ।।
नामै घटैमा ति मनुष्य व्यर्थै । पैदा भए, मर्नु छ धेर बेसै ।।
।।१९०।।

खेती छ उत्तम् यही भन्छ लोक । व्यापार मध्यम् तहीं बुझ्छ दिल ।।
दासत्व हो तीनमहाँ खराब । येति भनेको तिमी बुझी राख ।।
।।१९१।।

आम्दानी थोरै व्यय हुन्छ धेरै । गुण्ड्याई छाँट्दछ जून छोरै ।।
यस्ता ति मानवहरू धेर् भएमा । नासिन्छ देशै बुझ येही मन्मा ।।
।।१९२।।

ढाँचा झिकी धेर हुँदैन लाभ । पुज्दैन कोही यही बात मान ।।
उल्टो हियाई चुप लागि बस्छन् । तसर्थ ढाँचा पनि त्याग झन् झन् ।।
।।१९३।।

घर्मा नभै खान रोएर बस्छन् । मालिक् भने ठाँट जमाइ हिंड्छन् ।।
यस्तो भए आदत त्यागि हाल । जाला पछि इज्जत याद राख ।।
।।१९४।।

नाश् पार्छ दिप्ले जगका अँध्यारो । दानादिले नास्दछ पाप सब्को ।।
विद्या सिके दुर्गुण नाश हुन्छ । यो तीनलाई पनि जानि राख ।।
।।१९५।।

दारिद्र्य नाश्दछ धन् कमाए । धन् पाउनाकन गुण बेचे ।।
गुण मिल्छ विद्यातिरबाट हेर । तसर्थ विद्या तिमी याद पार ।।
।।१९६।।

कुवाँ बिचैको जति पानी झिक्यो । मीठो उति धेर हुनेछ फ्याँक्यो ।।
विद्या पनि जान जती झिकेमा । आउँछ उर्लीकन दिल बिच्मा ।।
।।१९७।।

संसारको सुक्ख बिकाम हुन्छ । रोगी भए जीउ बिकाम ढल्छ ।।
तसर्थ चाँडो उठी घुम्न जाउ । त्यस्मा बरू बेस नुहाइ आउ ।।
।।१९८।।

अभ्यास, व्यायाम् गर बेस हुन्छ । त्यस्ले जिउलाई सपारी छोड्छ ।।
व्रत्मा ठुलो वीर्य पतन् नगर्नू । साँच्यो भने रोग त भाग्छ बुझ्नु ।।
।।१९९।।

बाँच्थे अघीका ऋषि मुनिहेरु । हज्जार वर्ष, यही बानी सारूँ ।।
औषध् यही हो तिमी ब्रह्मचर्य । व्रत्लाई पालन् गरि बस्नुपर्छ ।।
।।२००।।

मुख्मा पनि तेज अतीव बढ्ने । श्रोताहरू थर्थर काँपि जाने ।।
आज्काल त्यो शक्ति मिलोस् कसोरी । दश वर्ष भित्रै रज वीर्य नाशी ।।
।।२०१।।

राजा र विद्या कुन बेस होला? । विद्यै ठुलो मानव श्रेष्ठ बन्ला ।।
राजा भए पुज्दछ देशभित्र । विद्वान्कनै पुज्दछ यत्र-तत्र ।।
।।२०२।।

अमृत्सरी वेद् गुणीहेरु जान्नू । हो विष बैगुन् यही बुझि मान्नू ।।
यसर्थ गूणै सिकनू बढीया । बैगुन् जंति छन् सब त्याग्नु पर्ला ।।
।।२०३।।

अनित्य संसार बुझेर जान । हरी नामलाई तिमी याद पार ।।
एक् दिन् अवश्यै जीउ हुन्छ माटो । तसर्थ हीन् धर्म सरि हुनु लाटो ।।
।।२०४।।

जुन प्राणीमा धर्म प्रधान छैन । जीवित् भए तापनि काम् हुँदैन ।।
ज्यूदै मरेको भनि जानी राख । त्यस्ता मनुलाई तिमी दूर फाल ।।
।।२०५।।

आयो दशाको यदि दिन् भने ता । गुण पनि जान्छ विलीन हूँदा ।।
यी हुन् सबै पूर्वजनम् कमाई । सो बुझी फिक्री नलेउ भाई ।।
।।२०६।।

नेत्रै फिंजाएर कदम् बढाऊँ । छानेर पानी अनि मात्र पिऊँ ।।
शुद्धै गरि बोलनू शास्त्रद्वारा । मन्ले विचारिकन गर्नु कुरा ।।
।।२०७।।

विद्या र तप, दान न शील् भएको । गुण धर्मलाई पनी नाश् गरेको ।।
संसारका भार मृगरूप हुन् ती । घाँस् खान भूली लिई अन्न खाली ।।
।।२०८।।

बुद्धि नभाको जुन प्राणी हुन्छ । शिक्षा नगर्नू पछि पीर पर्छ ॥
हिमालयैको प्रिय वायु पर्दा । चन्दन् कस्तोरी भनु बाँस हूँदा ॥
॥२०९॥

जस्मा स्वभाविक फलहेरु छैन । त्यस्लाइ शास्त्रोक्त फलै हुँदैन ॥
अन्धो भए दर्पण बेकामी हुन्छ । उस्तै बुझे मूर्ख बिकाम मर्छ ॥
॥२१०॥

पट्मूर्खलाई जति जे सिकाए । बेकाम हुन्छ जति जे पढ़ाए ॥
मल्मूत्रको द्वार हुँदैन साफ । तेस्तै बुझे मूर्ख अति खराब ॥
॥२११॥

बुद्धि सरि बल हुन्न ठूलो । बुद्धि भए बल तहिं हुन्छ धूलो ॥
बन्राजलाई कसरी मरायो । एक् सानु चौगडीले सतायो ॥
॥२१२॥

संस्कृत भाषा अति स्वाद हुँदै । भुल्छन् अरुमा पनि बेस जन् भै ॥
अमृत् भए तापनि देव सारा । चूमी अधर्मा परि कुच कर्मा ॥
॥२१३॥

दश् गुण् छ पिठो एक गुण चामल । त्यस्मा पनि दश् गुण बेसी दूध् जल ॥
आठ् गुण बर्ता त्यसदेखि मासू । बुझ्नु छ गुणा त्यसदेखि घीउ ॥
॥२१४।

बस् गर्छ हात्तीकन अंकुशीले । नाश् गर्छ रात्री दिप ज्योति बाले ॥
बज्रै परे धस्दछ पर्वताऽऽदि । सानो भनि हेपन हुन्न कत्ति ॥
॥२१५॥

अपगुणिलाई जति जे सिकायो । बेकार हुने जति हपान्यो ॥
तसर्थ बुझ्नु मधु घिउ दिंदा । गुलीयो नहुने निम फेद पर्दा ॥
॥२१६॥

जुन् दुष्टका मनविषे अति पाप हुन्छ । त्यो शुद्ध हुँदैन नुहाइ तीर्थ ॥
हुँदैन पोलीकन शुद्ध भाँडो । मदिरा भरेको यही जान उस्को ॥
॥२१७॥

गुणी गुणै चिन्दछ खूब चाँडो । चिन्दैन चिज यो भनि मूर्ख गाँडो ॥
मिल्कन्छ माणिक भिल्ल देशमाहाँ । तसर्थ चिन्नु चिजलाई छिन्मा ॥
॥२१८॥

सिक्नू बढिया प्रिय बोल्नलाई । तिन् जन्कनै, स्त्री समीप जाई ॥
एक् एक् गरी बूँद मिलेर झर्ने । त्यसै पानीले कुम्भकहेरू भर्ने ॥
॥२१९॥
विद्या र धर्मै पनि येही रित्ले । जाने असल् बुझनु भित्री दिल्ले ॥
बिती सकेका दुःख सुख् नलीनु । हुने हुनामी पनि याद् नगर्नु ॥
॥२२०॥
शृङ्गार् तमाशा अनि लोभ, मीठो । काम्, क्रोध, निद्रा, पनि त्याग्नु छिटो ॥
त्यागेन विद्या पनि त्याग्छ त्यस्ले । तसर्थ त्याग्नु चिज सात जन्ले ॥
॥२२१॥
धौता, गुरुको धन हर्छ जस्ले । परस्त्रीका सङ्ग फँसि जान्छ उस्ले ॥
संपूर्ण जीव्को जुन मासु खान्छ । त्यो विप्र चाण्डाल् भनि नाम धर्छ ॥
॥२२२॥
दिल्ले भनेकासित प्रेम गर्नु । प्रीति भए छेदन हुन्न गर्नु ॥
यही रिती हो जगमा चलेको । धोका नदीनु प्रिय, प्रेमि सब्को ॥
॥२२३॥
धेरै भए प्रेम वियोग हुन्छ । हुँदै नहुँदा पनि नाश गर्छ ॥
अग्नी र राजा गुरु नारी जन्को । बिच्मा बसी सेवन गर्नु उन्को ॥
॥२२४॥
आरोग्य घर्को अनि धर्म, मैथुन । बेस् औषधि निन्दित वाणि भोजन ॥
प्रख्यात् नगर्नु अरुका संगैमा । हो बुद्धिमानी यदि बुझ्नु सब्मा ॥
॥२२५॥
दन्तै, लुगालाई न धोई बस्ने । खानै परे खाइ बहुत बोल्ने ॥
सूर्योदयैमा पनि सूति बस्ने । विष्णु हउन् तापनि लक्ष्मी जाने ॥
॥२२६॥
नौ रत्न त्यागी शिर काँच धर्नु । अर्थोक जे-जे छ उही नगर्नु ॥
तथापि बेच्दा मणि बेस हुन्छ । काँच्लाई टुक्रा गरि फालिदिन्छ ॥
॥२२७॥
विद्या छ धेरै अनगिन्ति जस्तै । आयू छ थोरै दुइ दिन मात्रै ॥
तसर्थ सार् हो उहि बूझि लिनु । जम्मै म सक्छु भनि याद् नगर्नु ॥
॥२२८॥

मीठो भनी धाइ गयो समिप्मा । राखी कमल्ले पनि छाति विचमा ।।
सूर्यास्त भै दिन सबै बितेमा । थुनी कमल्ले पनि छीन पल्मा ।।
।।२२९।।

डोरी बहुतै थरि हुन्छ जग्मा । प्रेम् झैं अरू मज्बुत हुन्न उन्मा ।।
छेदन् गरी काठ्हरु भृङ्ग बस्ने । फाल्यो बरु ज्यान नतोडि प्रीति ।।
।।२३०।।

काटे पनि चन्दन खुशबु हुन्छ । बुढो भएमा पनि भोग गर्छ ।।
पेल्दा उँखू झन् अति स्वाद हुन्छ । दुख्मा सती स्त्री पनि साथ हुन्छे ।।
।।२३१।।

बोल्चाल अर्कासित गर्न जान्ने । विह्वल् भई परपुरुष पनि हेर्न सक्ने ।।
चिन्ता छ मन्मा तिस दिन् अरूको । वैगुन् यही स्त्रीहरुको भनीयो ।।
।।२३२।।

धन पाइ छोयो उसमा घमण्ड । लुकी बच्यो कुन नभएको नष्ट ।।
प्यारो कउन् हो नृपको भएको । काल्देखि बाँच्ने कुन जन्मिएको ।।
।।२३३।।

स्त्रीको वशैमा नपरेर बस्ने । काम्लाइ जीतिकन कुन् नसक्ने ।।
दु:खी नभाको कुन प्राणि होला? । यिन्बाट बच्ने भन कोहि होला ।।
।।२३४।।

घाँस्झैं अरू केहि हुँदैन हल्का । कपास होला तृणदेखि हल्का ।।
यस्देखि हल्का बुझ दु:खी जुन् हुन् । जोत्छन् यिनैलाई रहीस झन्–झन् ।।
।।२३५।।

मान्हीन भै बाँच्नु त मर्नु जाती । पिर् हुन्छ सारै यति बुझ्नु साथी ।।
छाड्नु कि देशै यहि हुन्छ जाती । कष्टै सही बाँच्नु त मर्नु भाइ ।।
।।२३६।।

जल्, अन्न झैं दान अरू हुँदैन । तिथीकहाँ द्वादशि झैं त छैन ।।
गायत्रि झैं मन्त्र अरू हुँदैन । माता सरी देव् अरु कोहि छैन ।।
।।२३७।।

शक्ति नभाका सब जोगि भन्नु । ब्रह्मचारीसित द्रव्य हुँदैन बुझ्नु ।।
रोगीसरि भक्त अरू हुँदैनन् । नारी बुढी नभई पतिव्रता हुँदैनन् ।।
।।२३८।।

राजा र वेश्या, यम, अग्नि, चोट्टा । माग्ने इ हुन् ग्राम्य अवश्य कष्ट ।।
बुद्धी नहूँदा अति कष्ट पर्छन् । आफू सहित् सब्कन दुःख दिन्छन् ।।
।।२३९।।

लोभै भए दोष कउन अर्को । ठस्के छ बानी भन पाप कुन् हो? ।।
मन्मा भए ज्ञान् तप कीन गर्नु । दिल् शुद्ध भएमा किन तीर्थ जानु ।।
।।२४०।।

गुणै भएमा गुरु कीन भज्नु । यश् नै भए भूषण कीन खोज्नु ।।
अप्कीर्ति भन्दा बरू मर्नु जाती । यी गुणकनै राखनु छातिमाथि ।।
।।२४१।।

हित होस् सबैमा भनि आज याहाँ । भाषा गरें सरलमा बुझि याद राख ।।
नीति बुझुन् सब् घर-घर् भनेर । पण्डित् नभै तापनि यो रचेर ।।
।।२४२।।

भाषा पठित्ले सब बुझि राखून । भन्रे बिचार्ले गरि यो अजान ।।
टुट्-फुट् भएमा सब माफ राखुन् । भन्रे निवेदन् छ विचार जानुन् ।।
।।२४३।।

रोकुँ कलम् यो अबलाइ याहाँ । देवी भजी ज्ञान बढाउनामा ।।
अर्पण् गरें यो तन मन् दिएर । राखुन् सबैले अति प्रेम् गरेर ।।
।।२४४।।

।। बुद्धिचानक समाप्तम् ।।



## चाणक्य ( कौटिल्य ) का केही मननीय अभिव्यक्ति

* अधिक लोभ अधोपतनको कारण बन्दछ ।
* विद्वान्को सम्मान सर्वत्र हुन्छ ।
* चन्द्रमाले जसरी रोशनी दिन्छ त्यसैगरी सज्जनले प्राणिमाथि दया गर्नुपर्छ ।
* जो अरूको कल्याणका लागि काम गर्दछ त्यही सत्पुरुष हो ।
* सज्जनहरूको सङ्गत स्वर्ग समान हुन्छ ।
* कामवासनाजस्तो घातक अन्य कुनै रोग हुँदैन ।
* सच्चा धन वास्तवमा रूपियाँ पैसा नभएर विद्या हो ।
* ज्ञानभन्दा ठूलो अर्को कुनै गुरु हुँदैन ।
* सज्जनको सङ्गत गर्नु र प्रिय बोल्नु अमृत समान सुखकारी हुन्छ ।
* कुनै पनि कुरामा अति गर्नु राम्रो हुँदैन ।
* दयाको पात्र बन्नुभन्दा ईर्ष्याको पात्र बन्नु असल हो ।
* धनरहित हुँदैमा कसैलाई पनि निर्धन मान्न सकिंदैन ।
* अपमान सहेर बाँच्नुभन्दा मर्नु असल हो ।
* आफ्नो इच्छानुसारको नियम बनाउने शासक महान् अत्याचारी हो ।
* भोको भए पनि बाघले घाँस खाँदैन ।
* पुस्तकको विद्या र अरूसँग रहेको धन आवश्यक पर्दा काममा आउँदैन ।
* प्रजाको कोष सबैभन्दा दरिलो कोष हुन्छ ।
* कानुनको दुरुपयोगले नै कानुनमाथि अविश्वास जन्माउँछ ।
* मानिसको उन्नति र विनाश उसकै अधीनमा हुन्छ ।
* मानिस जस्तो कुलमा जन्मन्छ, उसको आचरण पनि त्यही अनुरूप हुन्छ ।
* जसरी सबै सर्पमा मणि, सबै हात्तीमा मोती र सबै वनमा श्रीखण्ड हुँदैन उसैगरी सज्जनहरू पनि सर्वत्र हुँदैनन् ।
* फूल चाहनेले वृक्षको सेवा पनि गर्न सक्नुपर्छ ।
* जो समय र परिस्थिति बुझेर काम गर्न जान्दछ उही सफल हुन्छ ।
* महिला आँसुलाई गहनाका रूपमा प्रस्तुत गर्दछन् ।
* कुबेर पनि यदि आयभन्दा बढी खर्च गर्छ भने ऊ गरिब हुन्छ ।
* गल्ती सबैले गर्छन्, तर शत्रुले नदेख्ने गरी गल्ती गर्नु नै तिम्रो चलाखी हो ।

* शत्रुको पनि गुण ग्रहण गर, गुरुको अवगुण त्यागिदेऊ ।
* तृष्णा वैतरणी नदी हो ।
* भाग्यमाथि त्यही व्यक्ति विश्वास गर्छ जसमा पौरख हुँदैन ।
* लोभले मानिसको बुद्धिलाई नै माथ गरिदिन्छ ।
* विद्या प्राप्त गर्न व्याकुल हुनेलाई न सुख हुन्छ न त निद्रा नै लाग्छ ।
* मित्र त आउँछन् जान्छन् तर शत्रु स्थायी रहन्छ ।
* एउटा ज्ञानी सयौं मूर्खहरूभन्दा धेरै उत्तम हुन्छ ।
* नीच व्यक्ति अर्काको सफलतामा जल्दछ ।
* विद्वान् सबै ठाउँमा पूजिन्छ ।
* भयदेखि तबसम्म डराउनु, जबसम्म भय आउँदैन । यदि भय आइहालेमा निःसंकोच प्रहार गर्नु ।
* काममा व्यस्त मानिससँग आँसु बगउने समय हुन्न ।
* समुद्रमा वृष्टि, अघाएकालाई भोजन, धनाढ्यलाई धन र दिउँसोमा बत्ती व्यर्थ छ ।
* तबसम्म कोकिल मौनसाधना गरेर बस्दछन्, जबसम्म सबै जनालाई आनन्द दिने वाणी प्रारम्भ हुँदैन ।
* सङ्कटको बेलामा जसले आफ्नो वर्गलाई छाडेर अर्काको आश्रय लिन्छ त्यो स्वयम् नष्ट हुन्छ ।
* अभ्यासले विद्या, सुशीलताले कुल, आँखाले क्रोधको ज्ञान हुन्छ ।
* आफ्नी स्वास्नी, भोजन र धन यी तीन कुरामा सन्तोष गर्नु पर्छ ।
* दानले दरिद्रता, शील स्वभावले दुर्गति, बुद्धिले अज्ञान र व्यक्तिले भयको नाश गर्दछ ।
* सुन्दर रूप, तरुण अवस्था, मधुरता यी तीन गुण नारी जातिको ठूलो बल हो ।
* मित्रभावबाट चिन्तन गरे शत्रु पनि मित्र बन्न सक्छ ।
* आम्दानीभन्दा बढी खर्च गरे कुबेर पनि गरीब हुन्छ ।
* मित्र र शत्रु बनाउने एकमात्र कुरा हो व्यवहार ।
* अज्ञानता जस्तो ठूलो शत्रु अरू केही छैन ।
* सुख चाहनेलाई विद्या र विद्या चाहनेलाई सुख कहिल्यै मिल्दैन ।

* समस्त स्त्री जातिका गुरु आफ्नै पुरुष हुन् ।
* असल गुणी उत्साही मान्छेले शत्रुलाई पनि आफ्नो वशमा राख्न सक्छ ।
* माया, प्रेम, धनसम्पत्ति, मित्र यी सबै बारम्बार पाइन्छन् तर शरीर पाइँदैन ।
* मानिस असल गुणले उत्तम हुन्छ न कि उच्च आसनमा बसेर, महलको छानामा बस्दैमा काग गरुड बन्छ र ?
* धर्महीन मानिस बाँचेर पनि मरेतुल्य हुन्छ ।
* सफा गरिएको जुनसुकै जीर्ण वस्तु पनि राम्रो देखिन्छ ।
* अजीर्ण भएको बेलामा भोजन पनि विष हुन्छ ।
* अगाडि मीठो बोल्ने तर पछाडि-पछाडि काम बिगार्दै हिंड्ने साथीलाई तुरुन्तै त्यागिदेउ, किनभने त्यो मित्र नभई विषले भरिएको घडा बराबर हो, जसको केवल मुखमा दुध भरिएको हुन्छ ।
* जुन बेला विनाशको समय आउँछ, त्यसबेला हाम्रो बुद्धि विवेकले उल्टो दिशाको यात्रा गर्दछ ।
* जो जससँग तिम्रो प्रीति गाँस्ने इच्छा छ उनीहरूसँग सदा मीठो बोल ।
* झूठो बोल्नु, साहस गर्नु, कपट गर्नु, मूर्खता, अत्यन्त लोभ, अपवित्रता, दयाहीनता यी स्त्रीजातिका स्वाभाविक दोष हुन् ।
* जसले निश्चितलाई छोडेर अनिश्चितको खोजीतिर लाग्दछ; उसले अनिश्चिततालाई हासिल त गर्दैन-गर्दैन, निश्चिततालाई पनि गुमाउँछ ।
* आँखाले राम्ररी हेरेर पाइला चाल, कपडाले छानेर मात्र जल पिऊ, शास्त्रले निश्चित गरेको वाक्य मात्र बोल र मनले अठोट गरेको काम मात्र गर ।
* प्रसन्न तुल्य वाक्य, प्रभाव बराबर प्रिय र शक्तिअनुसारको रिस गर्न जो जान्दछ त्यो विद्वान् हो ।
* तिम्रो आफ्नो विचार नै शत्रु र मित्र बनाउनको लागि उत्तरदायी रहेको हुन्छ । संसारमा कोही तिम्रो साथी छ न शत्रु ।
* समय नै मानिसको निर्माता हो, जसले आफ्नो समय जसरी व्यतीत गरेको हुन्छ, त्यस्तै सबै कुरा हुन्छ । तपाई आफ्नो समयलाई हेर्नुहोस्, त्यसलाई कसरी व्यतित गरिरहेको छ ? बस् ! त्यसैअनुसार आफूलाई बनाउनुहोस् । संसारको सबैभन्दा मूल्यवान् वस्तु नै समय हो ।
* दरिद्रता, रोग, दुःख, बन्धन र खराब यी सबै आत्मअपराधरूपी वृक्षका

फल हुन् ।

* एउटै कर्मबाट संसारलाई वशमा राख्न चाहन्छौ भने अर्काको निन्दारूपी खेतीमा आफ्नो बोलीरूपी गाईलाई चर्न नदेऊ ।
* राजा, वेश्या, अग्नि, चोर, बालक, यमराज, मगन्ते गाउँमारा यी आठले अर्काको दुःख बुझ्दैनन् ।
* खानु, सुत्नु, डराउनु र संभोग गर्नु मानिसका यी कुरा पशुकै सरह हुन् । धर्म मात्र एउटा मानिसको विशेष गुण हो, त्यसैले धर्मविहीन मानिस पशुजस्तै हो ।
* धर्मशास्त्र धेरैपटक अध्ययन गरे पनि आत्मालाई नजान्ने व्यक्तिरू फकवान्को स्वाद नपाउने डाडुजस्तै हुन् ।
* मधुर वचन बोल्नाले सबै जीव सन्तुष्ट हुन्छन् । अतः त्यही बोल्नु उचित हुन्छ । वचनमा दरिद्रता किन ?
* संसाररूपी विषवृक्षका दुई ओटा अमृततुल्य फल छन्, रसिला प्रिय वचन र सज्जनसँगको सङ्गत ।
* जुन देशमा सम्मान छैन, वृत्ति छैन, बान्धव छैनन् र विद्या छैन भने त्यो देशमा बस्नु उचित हुँदैन ।
* जुन ठाउँमा इज्जत छैन, कुनै इलम छैन, साथी भाइ इष्टमित्र छैनन् र विद्याको आर्जन पनि हुँदैन भने त्यस्तो ठाउँबाट तुरन्तै भाग्नु श्रेयस्कर हुन्छ ।
* दुराचारी स्वभावकी कर्कशा आइमाई, मूर्ख वा धूर्त स्वभावको मित्र, मुखमुखै लाग्ने नोकर र सर्प बस्ने घर छ भने यी सबै मृत्यु बराबर हुन्छन् ।
* मूर्ख शिष्यलाई उपदेश दिने; दुष्ट आइमाई पाल्ने र आफूलाई सधैं दुःख दिइरहने व्यक्तिका भरमा काम चलाउन खोज्ने गऱ्यो भने बुद्धिमान् मानिसले पनि दुःख पाउँछ ।
* शंकटबाट जोगिनका लागि धनको रक्षा गर्नुपर्दछ, धनभन्दा बढी आफ्नो जीवनसंगिनी (पत्नी) को रक्षा गर्नुपर्दछ । पत्नी र धनभन्दा बढी सधैं आफ्नो रक्षा गर्नुपर्दछ ।
* सुगन्धयुक्त फूल फुलेका एउटै असल वृक्षले सम्पूर्ण वनलाई सुवासित

पारेझैं असल सन्तानको जन्मले सारा वंशको सम्मान बढाउँछ ।

* पुरुषको तुलनामा स्त्रीहरूमा आहार दुई गुना, बुद्धि चार गुना, साहस छः गुना र कामवासना (यौन) शक्ति आठ गुना बढी हुन्छ ।
* मूर्खता र जवानी सधैं निश्चितरूपमा कष्टदायक नै हुन्छ, त्यस्तै अर्काको घरको बास र कसैको भरमा बाँच्नु झन् कष्टदायक हुन्छ ।
* मनले सोचेको कुरा वचनले प्रकट गर्नु हुँदैन, सोचेका कुरा राम्ररी सोचविचार गरेर मनमैं जोगाउनु पर्छ र सोचेका कुरालाई कार्यहरूमा बदल्नु पर्छ ।
* आफन्तको अपमान, पत्नीको बिछोड, ऋणको भारी, दुष्ट मालिकको सेवा र मन नमिल्नेहरूको संगत गर्नाले आगोविना नै शरीर जल्नेछ ।
* छोरीलाई कुलघरान, छोरालाई विद्या, शत्रुलाई कुलत र मित्रलाई धर्ममा लगाऔं ।
* बुद्धिमान् मानिसले कुरूप भए पनि उत्तम कुलकी कन्यासँग नै विवाह गर्नुपर्छ । जतिसुकै सुन्दर धपक्कै सुनझैं बलेकी किन नहोस् नीच कुलकी कन्यासँग विवाह गर्नु हुँदैन, विवाह समानकुलमैं गर्नुपर्दछ ।
* खानेकुरा र खाने शक्ति, सुन्दर स्त्री र उसलाई भोग गर्ने कामशक्ति, धन र त्यसलाई दान गर्ने इच्छा शक्ति सानातिना तपस्याले मात्रै मिल्दैनन् ।
* जहाँ मूर्खको पूजा हुँदैन, खानपानको राम्रो व्यवस्था छ, परिवारमा झैझगडा हुँदैन, त्यहाँ लक्ष्मी आफैं आएर बसेकी हुन्छिन् ।
* घरमा पत्नी, विदेशमा विद्या, रोगमा औषधि र मृत्युमा धर्म नै साथी हुन् ।
* धनले धर्म, योग वा परिश्रमले विद्या, मीठो स्वभावले राजा र असल स्त्रीले घरको रक्षा हुन्छ ।
* एउटा गुणले समस्त दोषहरूलाई ढाकिदिन्छ ।
* दुर्जनको संगत छाडेर सज्जनको संगत गर, रातदिन पुण्य कमाउ ।
* गुणको सर्वत्र पूजा हुन्छ, धेरै सम्पत्तिको होइन ।
* ज्ञानदाता गुरुको निन्दा त टाढा, सुन्न पनि हुँदैन ।
* मनले सोचेको कार्य बोलीले प्रकट नगर्नु, मन्त्रझैं गोप्य राखेर काम सक्नुपर्दछ ।

* जीवनको एकक्षण करोडौं स्वर्ण मुद्रा दिएर पनि पाउन सकिँदैन ।
* विचार नगरी खर्च गर्ने, अनावश्यक झगडा गर्न रुचाउने व्यक्ति छिट्टै नासिन्छ ।
* जो जसका मनमा रहन्छ त्यो टाढा भए पनि टाढा हुँदैन, जो जसका मनमा रहँदैन त्यो नजिकै भए पनि टाढा नै हुन्छ ।
* दरिद्रतामा जति धैर्य राख्न सकिन्छ, त्यति नै सहनशक्ति बढ्दछ ।
* दान दिइसकेपछि फिर्ता गर्नु हुँदैन ।
* सबै गुण सम्पन्न भए पनि एक्लो र निर्बल सधैं दुःखी भइरहन्छन् ।
* जन्माउने, संस्कार गरिदिने, विद्या दिने, अन्न दिने, भयबाट जोगाउने यी तीन थरिकालाई पिता मानिन्छ ।
* ब्राह्मणको विद्या, राजाको सेना, वेश्याको धन र शुद्रको कालिगढी बल हो ।
* बुद्धिमान् र ज्ञानी व्यक्तिले वर्तमानलाई सफल बनाउने कार्यमा जुटिरहन्छन् ।
* विद्वान् त्यो हो, जसले विद्यालाई सदुपयोग गर्दछ ।
* विद्याविनाको स्वतन्त्रता सधैं खतरामा अल्झिरहन्छ र स्वतन्त्रताविनाको विद्या सधैं व्यर्थ हुन्छ ।
* सुन्ने इच्छाको अभाव, हत्पते स्वभाव र आत्मप्रशंसा विद्याका शत्रु हुन् ।
* विद्याले शिष्टता सिकाउँछ, शिष्टताले सत्पात्र बनाउँछ, सत्पात्रले नै धन कमाउँछ, धनबाट धर्म कमाउँछ, धर्मबाट नै सुख हुन्छ ।
* जसरीतसरी भए पनि विद्यालाई पढ्दै गर्नु नै गृहस्थीको कर्तव्य हुन्छ ।
* सदाचारीविनाको विद्या बढी खतरनाक हुन्छ, जो विद्वान् छ, त्यसले सदाचारी पनि हुनुपर्छ ।
* खर्च गर्नाले धन घट्दछ भने खर्च गर्नाले विद्या बढ्दछ ।
* जहाँ विद्या पाइँदैन, त्यहाँ बस्नु हुँदैन ।
* विद्या दानभन्दा अरू कुनै उत्तम दान छैन ।
* जुन मानिसले आफ्नो विद्या र ज्ञानलाई कार्यरूपमा परिणत गर्न सक्छ, ऊ दर्जनौं कल्पना गर्नेहरूभन्दा उत्तम हो ।
* विद्या स्वयं नै एउटा शक्ति हो ।

* जसले विद्यातर्फ ध्यान दिँदैन र समयलाई व्यर्थ नष्ट गर्दछ, उसले मानिस भई जन्म लिएको निरर्थक हुन्छ ।
* विवाह तब सुखदायी हुन्छ, जब दुवै पतिपत्नीको जीवनलक्ष्य समान तथा एउटै हुन्छ ।
* आमा, बाबु, युवा र जवानी जीवनमा एकपटक मात्र आउँछ ।
* यौवन र तिम्रो आशाहरू कति प्रेरक हुन्छ ।
* यौवनकालमा दिन छोटो महसुस हुन्छ तर वर्ष लामो, तर वृद्धावस्थामा वर्ष छोटो र दिन लामो ।
* राजालाई दुर्बल भए पनि हेला गर्नु हुँदैन ।
* लक्ष्यहीन मनुष्यको जीवन कौडीतुल्य हुन्छ ।
* धन-धान्यको व्यवहारमा, विद्या संग्रह गर्दा, आदर आदिमा व्यवहार गर्दा लज्जा छोडेमा सुख हुन्छ ।
* लाज मानिसको विशेष गरी स्त्रीको गहना हो तर व्यर्थमा लजाउनु अव्यवहारिक हुन्छ ।
* काम, क्रोध र लोभलाई वशमा राख्न सक्नुपर्छ ।
* सज्जनहरूको सेवाको फल अवश्य मिल्छ ।
* साधुको संगतले तुरुन्त नै फल मिल्छ; साधुहरूले आफ्नो मर्यादा छोड्दैनन्; यिनीहरूको सत्सङ्गबाट कुलको नै उद्धार हुन्छ ।
* जसका साथमा धन छ, त्यसैका मित्रहरू हुन्छन्, बन्धुवान्धवहरू पनि हुन्छन् ।
* धर्महीन मान्छे बाँचेर पनि मरेतुल्य हो ।
* धर्महीन प्राणी बाँचेर पनि मरेकै तुल्य हो, जो कर्मले युक्त छ भने त्यो दीर्घजीवी छ, शङ्का छैन ।
* बाबु! यदि मुक्ति चाहन्छौ भने विषयलाई विषजस्तै मानेर त्याग र क्षमा, धैर्य, सहनशीलता, शुद्धि र सत्यलाई अमृतझैं ग्रहण गर ।
* जो एक-आपसमा भेद खेल्दै बाझ्छन् ती मूर्खहरू दुलाभित्र र पेटमा पसेका सर्पहरूजस्तै आफैं नष्ट हुन्छन् ।
* पतिका नियन्त्रणमा रहेकी पत्नीले नै उपयुक्त कार्य गर्दछिन् ।
* जमिनभित्रको पानी, पतिब्रता नारी, कल्याणकारी राजा र सन्तोषी ब्राह्मण

पवित्र मानिन्छन् ।

* असन्तोषी ब्राह्मण, सन्तोषी राजा, लजाउने बेश्या र नलजाउने गृहिणी नाश हुन्छन् ।
* जो जसको गुणको यथार्थता जान्दैन, त्यो सधैं त्यसको निन्दा गर्दछ ।
* अतिशय मोह (आसक्ति) ले मानिसलाई कमजोर बनाई दिन्छ । ममता राम्रो गुण हो, तर मोह त्यसभन्दा अलग हो । मोह अज्ञानवश हुन्छ ।
* मानिसमा अरूको प्रहारबाट बच्नको लागि कठोर र कुटिल हुने गुण पनि हुनुपर्दछ ।
* कार्य सानो होस् या ठूलो, जो गर्न चाहेको छ उसले त्यस कार्यलाई आरम्भबाट नै प्रयत्न गर्नुपर्दछ ।
* जो कोहीबाट पनि जति ज्ञान मिल्दछ, त्यसबाट प्राप्त गर्नुपर्दछ, ज्ञान प्राप्त गरेको बदलामा कृतज्ञता प्रकट गर्नुपर्दछ ।
* आगाले जल्दै गरेको एउटै सुकेको रुखले जसरी सारा बन जलेर भष्म हुन जान्छ, त्यसैप्रकार एउटै कुपुत्र नै सारा कुलको लागि सन्ताप र विनाशको कारण हुन्छ ।
* कोही तपस्वी भएर पनि अतिक्रोधी हुन गएमा समाजमा उसको सम्मान हुने छैन ।
* क्रोधबाट मानिसको विनाश हुन्छ, त्यसैले क्रोधलाई यमराज भनिन्छ ।
* पिता सत्पुरुष र देवता स्वभावले खुसी हुन्छन्; खानपिनले वान्धव र मीठो बोलीले विद्वान् खुसी हुन्छन् ।
* धनहीन व्यक्तिलाई सबैले छोडिदिन्छन् । मित्र, स्त्री, नोकर, आफन्त पनि धनहीन व्यक्तिलाई सम्मान गर्दैनन् ।
* असल महिलाबाट घरको रक्षा हुन्छ ।
* गुण सबै स्थानमा पुजिन्छ, न कि धेरै सम्पति ले मात्र र जसको गुणले अर्काको वर्णन गर्छ त्यो निर्गुणी भए पनि गुणवान् बन्दछ ।
* शास्त्र अनन्त छन्, विद्या धेरै छन्, समय थोरै छ र समस्याहरू धेरै छन्। त्यसैले तिनीहरूमध्ये जुन काम लाग्ने हुन्छ, त्यसैलाई मात्र हाँसले पानीबाट दूध छानेझैं छानेर लिन सक्नुपर्छ ।
* बूढोमानिसले मरुणी विष ठान्दछ।

* सुगन्धयुक्त फूल फुलेका एउटै असल वृक्षको सम्पूर्ण वनलाई सुगन्धित पारेझैं असल सन्तानको जन्मले सारा वंशको सम्मान बढाउँछ ।
* आफन्तको अपमान, पत्नीको बिछोड, ऋणको भारी, दुष्ट मालिकको सेवा र मन नमिल्नेहरूको संगत गर्नाले आगोविना नै शरीर जल्नेछ ।
* जहाँ मूर्खको पूजा हुँदैन, खानपानको राम्रो व्यवस्था छ, परिवारमा झै-झगडा हुँदैन त्यहाँ लक्ष्मी आफै आएर बसेकी हुन्छिन् ।
* संसारमा बन्धनहरूको कमी छैन, तर प्रेम बन्धन सबैभन्दा दृढ बन्धन हो ।
* सम्हालिएर व्यवहार गर, तिम्रा शब्दहरूमा परमाणु बमभन्दा बढी शक्ति छ ।
* सत्ता प्राप्तिको स्वाद महभन्दा पनि गुलियो हुन्छ ।
* कुलत सानै भए पनि दुःख पाइन्छ ।
* कार्यका आधार धन हो, धन भए थोरै परिश्रमले पनि काम पूरा हुन्छ ।
* पहिले सोचेर काम थालौं, काम थालेपछि अल्झाएर नराखौं ।
* चञ्चल चित्त मन हुनेले गरेको कार्य कहिल्यै पूरा हुँदैन ।
* जो कमजोर छ, उसले तुरुन्तै सन्धि गर्नुबाहेक अर्को विकल्प हुँदैन ।
* चाहे समाजको अगुवा, घरको अगुवा होस् या देशको अगुवा किन नहोस् उसले नीतिशास्त्रको पालना गर्नुपर्छ ।
* हेलचेक्र्याँई गरेर शत्रुलाई नहेपौं, हितैषी भए पराइलाई पनि आफ्नै दाजुभाइ ठानौं ।
* दुष्ट भएमा आमालाई पनि त्यागौं, विषय चढ्यो भने आफ्नै हात पनि काटौं ।
* धर्मशास्त्र धेरै पटक अध्ययन गरेपनि आत्मालाई नजान्ने व्यक्तिहरू डाडुजस्तै हुन् ।
* जसको छोरो नियन्त्रणमा छ, इच्छाअनुसार जसकी पत्नी चल्छे, धन-सम्पत्तिबाट जो पूर्ण सन्तुष्ट छ, भने उसलाई यहीं स्वर्गको सुख प्राप्त छ ।
* विना परिश्रम धन पाउने आशा गर्नु बालुवाबाट तेल निकाल्नुजस्तै हो ।
* आमाले कुटेका बालकले आमालाई नै अँगाल्दछ, मायाले भरिएको रीस छोटो अवधिको हुन्छ ।
* अकुलीन पनि धनी भए कुलीनभन्दा विशेष हुन्छ ।

* काटिए पनि चन्दनका वृक्षले सुगन्ध छोड्दैन, बूढो भए पनि हात्तीले आफ्नो क्रीडा छोड्दैन । पेलिए पनि उँखुले गुलियोपना छोड्दैन । निर्धन भएपनि असल व्यक्तिले आफ्नो शीलस्वभाव छोड्दैन ।
* काममा लगाएपछि नोकर, दुःखमा पर्दा दाजुभाइ, साथीहरू र धन सकिँदा पत्नीको परिचय राम्रोसँग पाइन्छ ।
* मित्रहरूका भेलाले नै बल पाइन्छ, अप्ठ्यारोमा सघाउने नै मित्र हो ।
* गलत काममा लागेकालाई शास्त्रले नै उचित बाटो देखाउँछ, शास्त्रको ज्ञानले नै इन्द्रियलाई वशमा पार्न सकिन्छ ।
* स्त्रीमा गम्भीरता होइन, चञ्चलता बढी हुन्छ, दुष्ट स्त्रीले बुद्धिमान् व्यक्तिका शरीरलाई पनि कमजोर बनाइदिन्छे ।
* जान नहुने ठाउँमा जाँदा आयु, यश र पुण्य सबै क्षीण हुन्छन् ।
* अरूका अगाडि शत्रुलाई पनि गाली नगरौं ।
* दण्डनीति कमजोर हुँदा राष्ट्रका अगुवाहरू पनि छाडा हुन्छन्, दण्डको डर नहुँदा सबैले मनपरी गर्छन् ।
* धनको संग्रहबाट सहज सुख प्राप्त हुन्छ ।
* आफू सुरक्षित भए मात्रै अरूको रक्षा गर्न सकिन्छ ।
* नदी खोला, हतियारधारीको, नङ्ग्रा र सिंङ हुनेको, स्त्रीहरूको र राजकुलको कहिल्यै विश्वास नगर्नु ।
* जो व्यक्ति खराब आचरण, नराम्रो ठाउँमा बस्ने फोहोरी, दुर्जन पापीको संगतमा पर्दछ वा उसँग मित्रता गाँस्दछ त्यो चाँडै पतन हुन्छ ।
* प्यार गर्नुमा धेरै दोषहरू छन्, दण्ड दिनुमा धेरै गुणहरूछ, त्यसैले आफ्ना विद्यार्थी र छोराहरूलाई प्यार होइन, दण्ड देऊ ।
* अपमानित भएर जिउनुभन्दा मर्नु नै राम्रो हो; किनकि मर्नुभन्दा पहिले केवल एक क्षणको दुःख हुन्छ तर अपमानबाट त प्रत्येक दिन दुःख भइरहन्छ ।
* जीवनको सानोभन्दा सानो पल पनि मूल्यवान् छन् जसलाई करोडौंको धन-सम्पत्तिले पनि प्राप्त गर्न सकिँदैन ।
* राज्य छैन त ठीकै छ तर कुराज्य नहोस्, मित्रै छैन त ठीकै छ तर कुमित्र नहोस्, शिष्य छैन त ठीकै छ तर कुशिष्य नहोस्, स्त्री (पत्नी) नहोस्

वेश तर दुष्ट स्त्री (पत्नी) नहोस् ।

* धर्महीन मानिस बाँचेर पनि मरेतुल्य हुन्छ ।
* धर्मको आधार सत्य र दान हुन् ।
* अन्नजस्तो धन अर्को छैन, भोकभन्दा ठूलो शत्रु छैन ।
* इन्द्रियको ज्यादा प्रयोगले बुढ्यौली चढ्छ ।
* मूर्खको उपदेश सुन्नुभन्दा बुद्धिमान्को गाली सुन्न बेस हुन्छ ।
* मैथुनले पुरुष बुढिन्छ भने मैथुनबिना स्त्री बुढिन्छिन् ।
* पृथ्वी स्थिर छ सत्यले, सूर्य सत्यले नै तातेको छ, सत्यले नै वायु बहन्छ, सबै कुरा सत्यमा निर्भर हुन्छन् ।
* जो व्यक्ति जुन काममा दक्ष छ, उसलाई त्यही काम दिनुपर्छ ।
* राम्रो सम्मान गरे पनि दुष्टले दुःख नै दिन्छ ।
* पतिको उन्नतिमा पत्नीहरू रमाउँछन्, निम्तो पाएर ब्राह्मण र नयाँ घाँस पाएर गाई रमाउँछ ।
* हात्तीलाई अंकुशले घोडालाई चाबुकले, सिंग हुनेलाई लौराले र दुष्टलाई हातमा तरवार लिएर मात्रै वशमा राख्न सकिन्छ ।
* धर्म, अर्थ, काम र मोक्षमध्ये जसको जीवनमा एक पनि छैन, त्यो व्यक्तिको जन्म बाख्राको घाँटीमा भएको लुर्कोझैं अर्थहीन हुन्छ ।
* कविले के नदेख्लान्, स्त्रीहरूले के पो नगर्लान्, जँड्याहाले के नबोल्लान् र कागले के नखाला र ?
* भाग्य वा समयले नै राजालाई मगन्ते र मगन्तेलाई राजा, धनीलाई निर्धन र निर्धनलाई धनी बनाउँछ ।
* स्वस्थ शरीर, मिजासिली पत्नी, ज्ञानी छोराछोरी, आज्ञाकारी नोकर, खान पुग्ने कमाइ, अतिथिहरूको सम्मान, धर्मसंस्कृतिको पालना र पौष्टिक खानपिनको व्यवस्था भएको घर धन्य हुन्छ ।
* जुवा, तास, रण्डीबाजीमा लिप्त हुनेको काम कहिल्यै पूरा हुँदैन ।
* भाइबन्धु इष्टमित्र मीठा खानेकुराले र पण्डित मीठो भाषणले प्रसन्न हुन्छन् भने विद्वान्–सज्जन, देवता र पिता स्वभावैले सन्तुष्ट हुन्छन् ।
* रूप, यौवन तथा असल स्त्रीको, बाहुबल राजाको र ब्रह्मज्ञान ब्राह्मणको बल हो ।

* नीच र उत्तम कुलका बीच वैवाहिक सम्बन्ध गाँस्नु हुँदैन ।
* उँखु, तिल, मूर्ख, नोकर, सुन, स्त्री, भूमि, चन्दन, दही र पान यी चीजहरू जति घोट्यो, रगड्यो उति नै यिनबाट गुण पाइन्छ ।
* फकाउँदा शक्तिवान् शत्रु र हप्काउँदा कमजोर शत्रु आफ्नो नियन्त्रणमा आउँछन् भने आफूसरहकालाई कहिले फकाएर त कहिले हप्काएर नियन्त्रण लिनुपर्छ ।
* शरीरसम्बन्धी अभियान गलिसकेपछि र परमात्माको ज्ञान भइसकेपछि उसको मन जहाँ-जहाँ जान्छ, त्यहाँ त्यहाँ उसलाई समाधि लाग्दछ ।
* भोजन पाएपछि ब्राह्मण, बादल गर्जिएपछि मयूर, अर्काको उन्नतिमा सज्जन खुशी हुन्छन् ।
* जसले आफ्नो कर्तव्य भुल्छ, आफ्नो काम चिन्दैन त्यो अन्धो हो ।
* बलिया शत्रुलाई कमजोर ठान्दै आक्रमण गरौं ।
* जो दुष्ट छ उसले आफ्नो हैन अर्काकै दोष देख्दछ ।
* विद्या, तप र दान यी तीनमा सन्तोष गर्नु हुँदैन तर आफ्नी स्त्री, धन र भोजनमा चाहिँ सधैं सन्तोष लिनुपर्छ ।
* शान्ति समान तपस्या, सन्तोषभन्दा ठूलो सुख, तृष्णा समानको रोग र दयाभन्दा ठूलो धर्म छैन ।
* मानिसलाई कर्मअनुसारकै फल मिल्छ र बुद्धिले पनि कर्मअनुसारकै कार्य गर्दछ । त्यसैले बुद्धिमान् र सज्जन व्यक्तिले राम्रोसँग सोचविचार गरेर मात्रै कामहरू गर्नुपर्दछ ।
* गुणले रूपको, शीलले कूलको, सिद्धिले विद्याको र भोगले धनको शोभा बढ्छ ।
* कामवासनासरह रोग, मोहसरह शत्रु, क्रोधसरह आगो र ज्ञानसरह सुख अरू केही पनि हुँदैन ।
* जन्म मृत्यु, शुभ तथा अशुभ कर्मको भोग, नरकको बास र मोक्ष गति एक्लैले पाएको हुन्छ र फल पनि व्यक्तिले एक्लै नै भोग्नुपर्छ ।
* आत्माको अर्थात् आफ्नोजस्तो बल, आँखाको जस्तो तेज, अन्नजस्तो प्रिय बस्तु र बादलको जस्तो पानी अरू केही हुँदैन ।
* व्याभिचारी (दुराचारी) आमा, मूर्ख सन्तान, ऋण बोकाउने बाबु र

रूपवती स्वास्नी यी सबै शत्रु हुन् ।

* जो आफूभन्दा बलियो छ उसँग शत्रुता नगर, बलियासँगको युद्ध गर्नु भनेको हात्तीसित खुट्टा जुधाएजस्तै हो ।
* जो बुद्धिमान् छ, उसलाई सबै प्रकारको बल प्राप्त हुन्छ ।
* बुद्धिमान् मानिसले खानेकुरामा मात्रै चिन्ता गर्नुहुँदैन किनकि खानेकुरा त जन्मसँगै आएको हुन्छ ।
* गएकाको शोक नगर्नु, भविष्यको पनि चिन्ता नगर्नु ।
* चरामा काग, चारखुट्टे पशुमा स्याल, मान्छेमा नाइ र स्त्रीमा मालिनी धूर्त हुन्छन् ।
* हामीले सिंहबाट एक, बकुल्लाबाट एक, कुखुराबाट चार, कागबाट पाँच, कुकुरबाट ६ र गधाबाट तीन गुणहरू सिक्नुपर्छ ।
* जोसँग आफ्नो बुद्धि छैन त्यसलाई शास्त्रले के गर्नु ? आँखा नदेख्नेलाई ऐनाको के काम ?
* कुराज्यभन्दा राज्यै नहुनु, कृत्रिमभन्दा मित्र, कुपुत्रभन्दा पुत्रै र चरित्रहीन पत्नी हुनुभन्दा नभएकै वेश ।
* कालले भौतिकलाई पचाउँछ, प्रजाको संहार गर्छ, सुत्दा पनि काल जागै हुन्छ र काल अजेय छ ।
* पत्नीको पापको फल पतिले, शिष्यको गुरुले, पुरोहितको राजाले र राजाको पापको फल राष्ट्रले भोग्नुपर्दछ ।
* गोरूगाडाभन्दा पाँच हात, घोडाभन्दा दश हात, हात्तीभन्दा सय हात र दुष्टभन्दा लाख हात टाढा रहनुपर्छ ।
* सुतेको अवस्थामा सर्प, राजा, सिंह, बँदेल, बालक, अर्काको कुकुर र मूर्खलाई नउठाउनू ।
* दिउँसो स्त्रीसंभोगमा, राती चोरीमा र बिहानै जाँड रक्सी र जुवामा मूर्खहरूको मात्र समय बित्दछ ।
* बुद्धिमान् मानिसले आफ्ना इन्द्रियहरूलाई वशमा राखेर समयअनुसारझैं आफ्नो कार्य सिद्ध गर्नुपर्दछ । गोप्य र धैर्य (संयम) पूर्वक काम गर्नाले सफलताको शिखरमा पुगिन्छ ।

अथ

# उपदेश लहरीको सवाई

संसारमा छ उपदेश उतार्न नाऊ
यस् देहलाइ उपदेश दिई बचाऊ ।
संसार भेलकन ठेल लगाउ पार
क्वै छैन छैन उपदेश समान सार ।।
सुनसुन पाँचजन म केही भन्छू ।
साराजन्को हित हुने उपदेश् कहन्छू ।।
धर्म पुराणको सार झिकि भन्छू ।
संसारको असल् कंसल् सकल कहन्छू ।।१।।
संसारमा पाप बढ्यो धर्म भयो थोरै ।
बुद्धिभई मानिसहरू बस्छन् बलि कोरै ।।
कैलाशमा शिवयोगि डुल्छन् भई मस्त ।
हात बाँधि बस्ताबस्तै आयु हुन्छ अस्त ।।२।।

रातदिन खान्छन् शिवजोगि धतुरो र भाँग ।
ध्यान गरि तिनैसित वरदान माँग ।।
वरदान पायौ भने कैलाशमा जाउला ।
कैलाशमा गयौ भनै सुखभोग पाउला ।।३।।

जिन्दगीको छैन भर धोका दिइ जान्छ ।
छोरा नाति घरद्वार कस्ले साथ लान्छ ।।
पापतिर कैल्ह्यै पनि बिर्सि मन् नधर्नू ।
पाखण्डी र पापि जन्को सङ्गत नगर्नू ।।४।।

सुन सुन भलाजन् हो कलियुग्को हाल ।
संसारमा भुलाइ दिन्छ बढी मोहजाल ।।
कलियुग्मा अनमोल धर्मको छ माल ।
पापी भइ नगराए त्यस्को कसै काल ।।५।।

सत्य छोड़ी धर्म छोड़ि कमाउँछौ धन ।
धर्मतिर भनेदेखि रतिछैन मन ।।
सत्य छोड़ि पापि धरे नाश गरि दिन्छ ।
बुद्धि नाशि हालि फाँसि प्राणसमेत् लिन्छ ।।६।।

स्वर्गमार्ग कहाँ कहाँ धनतिर मन् छ ।
कति भयो भनि चित्त दिनदिन गन्छ ।।
बल्लबल्ल मिल्दो भयो चैतन्यको चोला ।
यस्को विचार् छोडिदियेपछि कसो होला ।।७।।

पाखण्डी र पापीजन्को सङ्गत नगर्नू ।
विना पैसा तिलजउ हातमा नधर्नू ।।
धर्मतिर चित्त लगि सबै कर्म गर्नू ।
धर्म गरी पुण्य गरि सबै पाप हर्नू ।।८।।

पाप गरे आखिर् आई यमराज दाग्ला ।
यमराज्को दागदेखि धर्म पर भाग्ला ।।
यमराज्को दाग झारे जिउ हलूँ हुन्छ ।
पापलाइ विचार् राखे सत्य जल्ले धुन्छ ।।९।।

जप्नु पर्छ सबै जल्ले नारायणको नाम ।
गर्नुपर्छ भक्तजन्ले पाप काट्ने काम ।।
ॐकारको भक्ति राखी परमधाम पाउनू ।
आखिरमा ब्रह्मज्ञानको माला पर्छ लाउनू ।।१०।।

पाप ताप्को मयल्लाइ हरि भजि फेक्नू ।
विवेक् जान्ने पुरुषले आत्मा एकै देख्नू ।।
संसारमा मानि को छ साठिवर्ष ज्युन ।
धिक्कार हो भुलिभुलि विषैलाइ प्युन ।।११।।

साठीवर्ष पुगेपछि सबै छाडि दीनू ।
पापलाइ परै राखी सत्य धर्म लीनू ।।
संसारको माया-मोह सबै छोडि दीउन् ।
अमर्लोक्मा आइकन धेरै वर्ष जीउन् ।।१२।।

हरि-रस पिएपछि परम्धाम्मा पुग्छन् ।
परम्धाम्मा पुगेपछि पापताप लुक्छन् ।।
शुद्धस्वरूप् निर्मल् ब्रह्मध्यान गर्नु रोज ।
विज्ञानका सागरमा ज्ञान्को गर्नु खोज ।।१३।।

माया मोह प्रेम सारा दुःखजाल ठानी ।
संसारको रचना उन्कै सबै मानी ।।
आत्मालाई चिन्नु पर्छ विवेकको साथ ।
मय आइ नपावोस बढाउन हाथ ।।१४।।

हरि भज्नु राम भज्नु शिव भज्नु नित्य ।
नित्यलाई छोडिकन नलिनु अनित्य ।।
संसार्भरि विश्वम्भर पालन् गर्छन् आफैं ।
साफ चित्त राखेदेखि सबै हुन्छन् साफै ।।१५।।

मन चङ्गा भएदेखि घरै मिल्छन् गंगा ।
केही छैन लीने चिज जानु पर्छ नङ्गा।।
दुःख गरी चारैतिर व्यर्थ किन डुल्नू ।
सब्का पिता रामलाई कहिल्यै नभुल्नु ।।१६।।

पितालाइ सृष्टिकर्ता प्रभु जस्तै मान्नू ।
गंगाजस्ति निर्मल् अति मातालाइ जान्नू ।।
शिक्षा दिने गुरुलाई शंकरझैं देख्नू ।
मान्यलाइ मान गरी पाप सारा फेक्नू ।।१७।।

संसारका मुक्तिदाता परब्रह्मलाई ।
घडि घडि भजन् गर्नु अज्ञान छुटाई ।।
रामलाइ जप्ने जान्छन् भवसागर् पार ।
संसार्लाई जानिलिनु बहुतै असार ।।१८।।

कर्ताहर्ता जगदीश्वर चैतन्यका दाता ।
ज्ञानरूपि प्रकाश् भइ पालन् गर्छिन् माता ।।
माता जस्तो हुन्नन् केहि दुःख छेक्ने छाता ।
पिता हुन्छन् ज्ञान दिने ज्ञानका विधाता ।।१९।।

दुःख महादुःख अति मातालाइ हुन्छ ।
छोरो ठुलो भएपछि कुरा कहाँ सुन्छ ।।
मातालाई बुद्धिवान्ले तक्लीफ नदीनू ।
यमराज्का लोकमहाँ जाने मन् नलीनू ।।२०।।

पाँच वर्ष छोरालाई काख विषे राख्नू ।
जो-जो कुरा पर्छ आइ सबैलाई ढाक्नू ।।
पाँच वर्ष बितेपछि रोजै शिक्षा दीनू ।
साराका सारा रित्ले तयार् गरि लीनू ।।२१।।

ब्रह्मचर्य्य राख्नलाई राख्नु बिचार् भारी ।
ब्रह्मचर्य्य आफै दिन्छ अज्ञान उतारी ।।
ब्रह्मचर्य्य धारण् गरि आखिर् बिहा गर्नू ।
गृहस्थि भै गृहस्थको सत्य मार्ग धर्नू ।।२२।।

कुल रक्षा गर्नूपर्छ शुद्ध चित्त राखी ।
सत्य धर्म विवेकको मीठो रस चाखी ।।
कुल रक्षा भयो भने मुक्ति गति मिल्छ ।
कुल सखाप् भए भने नरकले निल्छ ।।२३।।

पुत्रलाई जन्माएर शिक्षा दिनु बेस ।
पुत्रलाई नपरोस लिनु दुःखी भेष ।।
शिक्षा बेस दिएपछि आफ्नो भारा जान्छ ।
विद्या पाई विद्वान् भए आफैं गर्छ खान्छ ।।२४।।

चित्त दिइ सुनुन् सबै मुख्य कुरा भन्छु ।
धर्म सत्य विवेकको तत्व म कहन्छू ।।
प्रातःकाल ध्यान गरी पाठ पूजा गर्नू ।
तिनै लोक्का मालिकमा तनमन धर्नू ।।२५।।

अतिथिको सेवा गरी भक्ति लिनु भारी ।
खानु पिनु सुत्नु बस्नु सकल बिचारी ।।
नित्य कर्म पूरा गरी आफ्ना काममा जानू ।
संतोषले हिड्नू-डुल्नु जो जो मिल्छ खानू ।।२६।।

नारायण्ले दिन्छन् सबै नारायण्ले हर्छन् ।
नारायण् नै दिइ लिन्छन् नारायण् नै भर्छन् ।।
नारायण्ले मुक्ति दिन्छन् नारायण् नै तार्छन् ।
नारायण्को लीला जान्नु बहुतै अपार् छन् ।।२७।।

नारायण ब्रह्मरूप कलियुग्का दाता ।
कलियुग्मा रक्षा गर्ने जगदम्बा माता ।।
यता धन उता धर्म दुवै सुख दिन्छन् ।
जान्नेजति धन छोडी धर्मलाई लिन्छन् ।।२८।।

धन दिन्छ संसारको सुख भोग खाली ।
धर्म लिन्छ आत्मालाई अन्त्यमा सँभाली ।।
धन भनी ज्यान दिने खान्छन् भारि धोका ।
धर्म गर्ने जान्छन् खोली स्वर्गलोक्को ढोका ।।२९।।

शिक्षा लिइ तर्ने भए यति शिक्षा लेऊ ।
ह्वैन भने बिर्सि सबै ह्वैन भनि देऊ ।।
धर्मजस्तो छैन केही धर्म रस खाऊ ।
तर्नलाइ कठिन् हुने संसार्तिर जाऊ ।।३०।।

कर्कलाका पातमहाँ पानी छलकन्छ ।
बिजुलिझैं झल्कि झल्कि प्राण झल्का दिन्छ ।।
भाइबन्धु मीठो बोलि सबै झूठो मान ।
वैकुण्ठमा जानलाई असल् बाटो छान ।।३१।।

जप्नूपर्छ सारा जन्ले नारायण्को नाम ।
सबैलाई आखिरमा यहि लाग्छ काम ।।
सुख छैन संसारमा दुःख मात्रै जान ।
जानि-जानि किन पर्छौ यमराज्को घान ।।३२।।

धन धर्म एकैचोटि कसैलाइ हुन्न ।
ईश्वरले बुद्धि दिए सबै कुरा गुन्न ।।
धन पाई धर्मलाई भुल्ने नरक् पर्छन् ।
धर्म छोडि धन लिने धोका खाइ पर्छन् ।।३३।।

रामजस्ता वीर ज्ञानि देखिएनन् कोही ।
तिले पनी हिड्नु पऱ्यो दुःख पाइ रोई ।।
मौका हेरी सीतालाई रावणले हऱ्यो ।
राम लक्ष्मण् दुवैलाई दुःख साह्रै पऱ्यो ।।३४।।

विधाताले लेखि दिन्छन् जस्तो कर्ममाहाँ ।
लाखै गरोस् टर्ने ह्वैन भोग्नुपर्छ याहाँ ।।
संसारमा मानिसले खोज्नु छैन सुख ।
नाम जपे नारायण्को हराउँछ दुःख ।।३५।।

संसारमा प्राणिहरु पाप गर्छन् ज्यादा ।
आउन लाग्यो महामारी आउन लाग्यो व्याधा ।।
पाप भयो संसारमा पृथ्वी लागिन् डोल्न ।
जगत्भरि बाफ उड्यो लाग्यो अब पोल्न ।।३६।।

संसारमा घुम्न लागे दुष्ट पापि व्याधा ।
धर्मभने थोरै भयो पाप भयो ज्यादा ।।
पाप बढे पापैपाप कपालमा पर्ला ।
पापबाट दया राखी रक्षा कस्ले गर्ला ।।३७।।

संसारको लोलोपोतो एकै छिन्का जान ।
जो जो देख्छौ जो जो सुन्छौ सबै झूठो मान ।।
सच्चा भए सच्चा लिए हरि भज सच्चा ।
जानि जानि किन गर्छौ पक्कालाइ कच्चा ।।३८।।

पापी मन पर राखी धर्म मन लेऊ ।
विषयका वासनाको आशा छोडि देऊ ।।
कस्तो के हो कस्ले दिन्छ कस्को चल्छ दाऊ ।
संसारका भेलदेखि पार लाऊ नाऊ ।।३९।।

भजन्जस्तो केहि छैन भजन् गर रोज ।
नत्र भने यमराज्ले निकाल्ने छ मोज ।।
भजन् हुन्छ मुनिलाई अमृतको गोला ।
पापीलाइ सोहि हुन्छ ड़ाहा दिने सोला ।।४०।।

राति लाग्ने तारा जून दिन लाग्ने घाम ।
चेत्छन् प्राणि आखिरमा बिग्रेपछि काम ।।
घूँसो लाग्छ तीखो घाम राति लाग्छ जून ।
पापि जति आफैं गर्छन् आत्मा मारि खून ।।४१।।

बुद्धि हून द्यौता देख्छन् आफ्नै घटभित्र ।
सारा जगत्लाइ ठान्छन् आफ्नु प्रिय मित्र ।।
बुद्धिहीन मानिसहरू द्यौता छैनन् भन्छन् ।
हेर्ने आँखा छँदाछँदै अन्धा आफैं बन्छन् ।।४२।।

शरिरलाई जस्ले दिन्छ सोहि द्यौता जान ।
बाबु बाजे जो-जो गर्थे सोहि असल् मान ।।
वेद पढ़ शास्त्र पढ़ पुराण् हेर सारा ।
जगत्भरि वर्षा गर उपदेशको धारा ।।४३।।

मातापिता गुरुलाई दिनरात मान ।
बिगार् हुन्न तिनिबाट भन्ने सत्य जान ।।
जस्ले गर्छ तिनिलाइ भित्रदेखि हेला ।
मरेपछि यमराज्को पर्छ सोहि फेला ।।४४।।

बाचुन्जेल सबै छोडि सत्य धर्म थाम्नू ।
आँखा छँदै अन्धो भई नपरोस छाम्नू ।।
धेरै दिन बाँच्ने प्राणी कोहि छैनन् याहाँ ।
असल् कंसल् जानुपर्छ छोडि संसारमाहाँ ।।४५।।

मानिसको शरीर छ काँच जस्तो कच्चा ।
यस्ता कच्चा शरिरलाइ भन्छन् सबै सच्चा ।।
शरीरमा लालि भन्नु हुन्छ खालि रगत् ।
हाडमा सुन सारा जान्नु अनि ढाँचा फगत् ।।४६।।

सय पाप एक धर्म काटिदिन्छ फन्दा ।
पाप छोडि धर्म गर्नु असल् सबै भन्दा ।।
बिचार् गरी हेर्‍यो भने सारा हुन्छ कच्चा ।
नाशवान जगतमा राम एक् छन् सच्चा ।।४७।।

आत्मा बस्ने हृदयमा ज्योतिरुपी बत्ती ।
अलि-अलि झल्का पर्छ हेर्‍यो भने जत्ती ।।
जान्नेहरू बत्ति पाई बाटो हेरि जान्छन् ।
अँध्यारोको बचाउ गरि देहलाइ लान्छन् ।।४८।।

खानु पिनु लाउनु दिनु आखिर् पर्छ मर्नू ।
जान्ने जन्ले जन्मेपछि सार यै हो धर्नू ।।
खानू पिनु यतिमात्र आफ्नो हुन्छ जान्नू ।
साच्ने जति अर्कालाई साँच्यो भनि ठान्नू ।।४९।।

जान्ने जन्ले पछिलाइ विचार् गरि राख्नू ।
थोत्रोमोत्रो बटुलेर नाहक नढाक्नू ।।
पहिलेका कमाइले अैले मोज गर्छन् ।
पछिलाइ राख्ने जति पछि मात्र पर्छन् ।।५०।।

धर्मकर्म गरेदेखि वैकुण्ठमा जाउला ।
हरि नाम जपेदेखि सोख गर्न पाउला ।।
ज्ञान जान्ने पुरुषले हरि भजन् गाउँछन् ।
संसारको धन्दा तोडि मुक्ति गति पाउँछन् ।।५१।।

यमराज्ले हात हाल्ने मौका दिनु छैन ।
सत्यलाई छोडिकन पाप लिनु छैन ।।
पाप बढी पाप गर्दा पाप दिन्छ धोका ।
यमराज् का दूतबाट खानु पर्छ झोका ।।५२।।

साँचो भन्नु धर्मकर्म विचार् राखी गर्नू ।
सकेसम्म दान गरी यशलाई धर्नू ।।
घाम लाग्दा रिमिझिमि अँध्यारामा अन्धा ।
जान्ने जन्ले विचार् राखी काट्नु पर्छ फन्दा ।।५३।।

पाप बढे सत्यलाई झूठो गरि दिन्छ ।
दुनियाँको धर्मकर्म सबै हरि लिन्छ ।।
मूर्ख पशु प्राणिहरू पाप ज्यादा गर्छन् ।
तिनै पापि प्राणीहरू नरकमा पर्छन् ।।५४।।

जान्दाजान्दै मानिस्हरू यस्तो काम गर्छन् ।
बुझ्नुसुझ्नु सबै छोडी पाप्मा चित्त धर्छन् ।।
जति जति दुनियाँ हो! पाप्को भजन् गाउँछौ ।
मानिसको चोलामहाँ वास कहाँ पाउँछौ ।।५५।।

बुद्धि हुने मानिसले हरि भजन् गाउन् ।
मनुष्यको योनिमहाँ चाँडै बास पाउन् ।।
पापी दुष्ट मानिस्हरु पाप मात्रै गर्छन् ।
तिनै पापी मानिस्हरु चौरासिमा पर्छन् ।।५६।।

संसारमा प्राणीहरू पाप गर्न लागे ।
सत्य धर्म जति थिए कैलाशमा भागे ।।
विवेक् गर्ने पुरुषले हरि भज्न पाउँछन् ।
बडा बडा योगीहरू तत्व बुझि गाउँछन् ।।५७।।

संसार् तर्न मन्सुब् हुने भक्ति राखि गाउन् ।
इन्द्रका पुरिमहाँ रजाइ गर्न जाउन् ।।
गर्भवास्मा हुँदिखेरि हरिलाई गायो ।
पैदा भयो नर लोकमा भुलि पोलि खायो ।।५८।।

कबुल् गर्छौ कबुल्लाइ बिर्सि भुला पर्छौ ।
चाहिनेको याद छोडि न चाहिने गर्छौ ।।
मोह माया तृष्णा लिई ज्यान याहिं धर्छौ ।
यसैकारण दुनियाँ हो नरकमा पर्छौ ।।५९।।

चर्म चक्षु देखिदैन दिव्य-चक्षु हेर ।
दिव्य चक्षु देखेपछि केही छैन फेर ।।
फेर पारि आत्मालाई धोका नद्यौ काहीं ।
धोका दिए खानु पर्ला धोका जाहिंताहीं ।।६०।।

फाँडिदेउ अज्ञानका आजैदेखि वन ।
पहाड्को छाँगोजस्तो निर्मल् पार मन ।।
आफैं चिन दिब्य चक्षु फेरि आफुकन ।
नाहकमा नगँवाऊ पार लागे धन ।।६१।।

कोहि गर्छन् रण्डिबाजी कोहि खेल्छन् तास।
कोहि हिंड्छन् चोरि गर्न जन्को लिई आश ।।
कोहि खेल्छन् जुवा जालि कोहि खान्छन् भाँग।
कोहि प्यूँछन् रक्सि जाँड कुल्मा लाई दाग ।।६२।।

यस्तै यस्ता कर्म गरी बढ्न गयो व्याधी ।
सत्ययुग्को धर्म भन्नु अब छैन आधी ।।
पाप गर्न अघि सर्ने भए नर लोक ।
अज्ञानको नशा पिइ झिक्छन् नित्य झोक ।।२३।।

हरि भज्ने मौका छैन धर्म गर्दा भाग्छन् ।
वेश्यालाई पूजा गरि त्यस्कै पछि लाग्छन्।।
जोगि हवोस् मानिस् हवोस् ज्ञानि हवोस् भारी।
चित्त दिन्छन् पाप गर्न धर्म पर सारी ।।६४।।

चैतन्यको चोला पाई हरि भजन् गर्नू ।
सबै कुरा याहिं छोडि आखिर् पर्छ मर्नू ।।
लाख हवोस् करोड् हवोस् साथ जान्न कत्ती।
पाप धर्म सँगि हुन्छन् गर्‍यो जत्ति जत्ती ।।६५।।

कर्ता पनि हरि नै हुन् हर्ता पनि हरि ।
धर्ता पनि हरि नै हुन् भर्ता पनि हरि ।।
मनुष्यको नाउँमात्र चैतन्य हो चोला ।
चैतन्यले हरि भजे नाउ पार होला ।।६६।।

पापरूपी मयल्लाई धर्म गरि धुनू ।
पापलाई धोएपछि शुद्ध रूप हूनू ।।
तीर्थ-बर्त विवेकको छापालाई लाऊ ।
यमराज्को डर खाई सहजै बगाऊ ।।६७।।

हरिजस्ता छैनन् कोई पार लाई दीने ।
अनाथका नाथ भई शरण् आइ लीने ।।
तिन्को नित्य भजन् गर्ने हरि रूप हुन्छन् ।
आफूसमेत् सारा कुल्को पाप-लाई धुन्छन् ।।६८।।

कलियुगमा दुनियाँको अन्नमा छ प्राण ।
दुई दिन कम्ति खाए सुकि जान्छ ज्यान ।।
अन्नदाता अन्नमाता प्राण जस्तै जानी ।
अन्न खाई गर भजन् मुख्य यही ठानी ।।६९।।

जहाँसम्म सक्छौ तिमि मुष्टि दान देऊ ।
तुच्छ मानी जगत्लाई लिने कुरा लेऊ ।।
हरि राम शिवतिर नित्य चित्त धर्नू ।
धर्मकर्म गर्नलाई गर्ने जति गर्नू ।।७०।।

प्राणि भई अहंकार लिनु छैन रत्ति ।
अहंकार लिँदाहुँदि भ्रष्ट हुन्छ मती ।।
पार्नु छैन चञ्चल् अति थिर राख्नु दील ।
बुद्धिमान्ले छोड्नु छैन आफ्नो स्वभाव् शील ।।७१।।

लंपट् भई स्वास्नीजात्को सङ्गत नगर्नू ।
जस्ले गर्दा खाडलमा पर्छ अन्त्य पर्नू ।।
स्वास्नीहरू जानि राख मायाको हुन् जाल ।
यिनै पार्छन् धोकामहाँ इनै पार्छन् गाल ।।७२।।

नारि नै हुन् झूटो गर्ने नारि नै हुन् बोर्ने ।
नारि नै हुन् कुल धर्म घर-बार फोर्ने ।।
यिनै हुन्छन् अम्मृत् कैले इनै हुन्छन् वीष ।
यिन्ले गर्दा दुनियाँमा मगाउँछन् भीख ।।७३।।

बुद्धिमान्ले स्वास्नीजात्को भारि छैन बोक्नू ।
इन्द्रियको हुकुम् छोडी चञ्चल् चित्त रोक्नू ।।
पार हुने पार गर्ने यै हो मुख्य राह ।
संसारको छोडि देउ भित्रदेखि चाह ।।७४।।

बुद्धिलाई विवेकको अम्मृत पिलाऊ ।
अज्ञानको मृतक् देह त्यसैले जिलाऊ ।।
संसारको मोह माया छोडी देउ सारा ।
अन्त्यकाल्मा बग्ला आई सत्यरसको धारा ।।७५।।

को हौं कहाँ छौं किन आज आऔं ।
कुन् काम् गरूँला भनि जन्म पाऔं ।।
यस्को विचार् रात्दिन राखि मन्मा ।
तन्मन् लगाऊ हरिका भजन्मा ।।

*।। इति उपदेश लहरीको सवाई समाप्तम् ।।*



# चाणक्य नीति दर्पण

## को

## संस्कृत श्लोकको अनुक्रमणिका

